शोध-निर्देशक
डा. कुमारबहादुर जोशी

# साहित्यकार दुर्गालाल श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्वको अध्ययन

त्रिभुवन विश्वविद्यालय, मानविकी तथा सामाजिक शास्त्र संकायअन्तर्गत
नेपाली केन्द्रीय विभागको एम.ए. दोस्रो वर्षको दसौं पत्रको
प्रयोजनका लागि प्रस्तुत
**शोध-पत्र**

**शोधार्थी**
राजेन्द्र मानन्धर

नेपाली केन्द्रीय विभाग
त्रिभुवन विश्वविद्यालय
कीर्तिपुर
२०६२

# विषयसूची

परिच्छेद १ : शोधपत्रको परिचय

## परिच्छेद ३ : दुर्गालाल श्रेष्ठको व्यक्तित्वको अध्ययन



## परिच्छेद ४ : दुर्गालाल श्रेष्ठका कृतित्वको अध्ययन

# शोध-निर्देशकको मन्तव्य

नेपाली एम्.ए. दोस्रो वर्षका छात्र राजेन्द्र मानन्धरले **साहित्यकार दुर्गालाल श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्वको अध्ययन** शीर्षकको प्रस्तुत शोधपत्र निकै परिश्रमपूर्वक र लगनशीलतापूर्वक मेरो निर्देशनमा तयार पार्नुभएको हो । यसमा उहाँको आफ्नो अनुसन्धानचेत स्पष्ट रूपमा प्रतिविम्बित छ । म उहाँको शोधकार्यसँग पूर्ण रूपमा सन्तुष्ट छु र यसको आवश्यक मूल्याङ्कनका लागि सिफारिस गर्दछु ।

मिति : २०६२ भाद्र ३१

............................
डा. कुमारवहादुर जोशी
प्राध्यापक
नेपाली केन्द्रीय विभाग
त्रिभुवन विश्वविद्यालय
कीर्तिपुर, काठमाडौं ।

## स्वीकृति-पत्र

त्रिभुवन विश्वविद्यालय मानविकी तथा सामाजिक संकायअन्तर्गत विश्वविद्यालय क्याम्पसका छात्र राजेन्द्र मानन्धरले त्रि.वि. नेपाली केन्द्रीय विभाग स्नातकोत्तर तह नेपाली विषय दशौं पत्र प्रयोजनको लागि प्रस्तुत गर्नुभएको साहित्यकार दुर्गालाल श्रेष्ठको जीवनी व्यक्तित्व तथा कृतित्व शीर्षकको शोधपत्र सोही प्रयोजनको लागि स्वीकृत गरिएको छ ।

शोध मूल्याङ्कन समिति

| क्र.सं. | नाम | हस्ताक्षर |
|---|---|---|
| १. | प्रा.डा. दयाराम श्रेष्ठ | ............ |
| २. | प्रा.डा. कुमारबहादुर जोशी | कुमारबहादुर जोशी |
| ३. | प्रा.डा. गोविन्दराज भट्टराई | ............ |

मिति: २०६२ कार्तिक १३

# कृतज्ञता-ज्ञापन

प्रस्तुत शोधकार्य मैले मेरा श्रद्धेय गुरु प्रा. डा. कुमारबहादुर जोशीज्यूको निर्देशनमा तयार पारेको हुँ । शोधकार्यको सुरुदेखि लिएर शोधकार्य समाप्तिपर्यन्त उहाँबाट अपरिमेय सहयोग प्राप्त नभएको भए यो शोधप्रबन्ध यस रूपमा प्रस्तुत हुन सक्ने थिएन । व्यस्तता र कमजोर स्वास्थ्यको स्थितिमा समेत आफ्नो अमूल्य निर्देशन प्रदान गरी यस शोधग्रन्थलाई व्यवस्थित तुल्याइदिनुभएकोमा म उहाँको चिर ऋणी छु र उहाँप्रति कृतज्ञता-ज्ञापन गर्नु आफ्नो परम कर्तव्य ठान्दछु ।

प्रस्तुत शोधपत्र लेख्न स्वीकृति प्रदान गर्नुहुने केन्द्रीय नेपाली विभागका विभागीय प्रमुख आदरणीय गुरु प्रा. डा. दयाराम श्रेष्ठज्यूप्रति हार्दिक कृतज्ञता-ज्ञापन गर्दछु । शोधकार्यका सिलसिलामा आइपरेका समस्याहरूको समाधान गर्न आफ्नो अमूल्य समय दिएर शोधसामग्री सुलभ तरिकाले उपलब्ध गराइदिनुका साथै पटक-पटक अन्तर्वार्ता दिएर मेरो शोधकार्यमा सहयोग पुऱ्याउनुहुने मेरा श्रद्धेय शोधनायक साहित्यकार दुर्गालाल श्रेष्ठज्यूप्रति हार्दिक आभार व्यक्त गर्दछु । यसै गरी सामग्री सङ्कलनमा सहयोग पुऱ्याउनुहुने दुर्गालाल श्रेष्ठका अनन्य मित्र तथा कलाकार भृगुराम श्रेष्ठप्रति पनि म आभारी छु ।

सामग्री सङ्कलनकै क्रममा सहयोग पुऱ्याउनुहुने दुर्गालाल श्रेष्ठकी धर्मपत्नी पूर्णदेवी श्रेष्ठ, पुत्रपुत्री सुमन, सुचिता र सरोज, भतिजा सरोज श्रेष्ठ 'सिम्पु', मित्रहरू मल्ल के. सुन्दर, श्रीकृष्ण अणु, रामशेखर, डा. रत्नकमल वैद्य, रमेशकाजी स्थापित र सुरेश किरणप्रति आभार व्यक्त गर्दछु ।

मिति : २०६२ भाद्र ३१

..........................

राजेन्द्र मानन्धर

नेपाली केन्द्रीय विभाग

त्रिभुवन विश्वविद्यालय

कीर्तिपुर, काठमाडौं ।

# परिच्छेद : १

# शोधपरिचय

## १.१ शोधशीर्षक

प्रस्तुत शोधपत्रको शीर्षक साहित्यकार दुर्गालाल श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्वको अध्ययन रहेको छ ।

## १.२ शोधकार्यको प्रयोजन

प्रस्तुत शोधपत्र त्रिभुवन विश्वविद्यालय मानविकी तथा सामाजिक शास्त्र सङ्कायअन्तर्गत नेपाली केन्द्रीय विभाग स्नातकोत्तर तह दोस्रो वर्षको दसौं पत्रको प्रयोजनका लागि लेखिएको हो ।

## १.३ समस्याकथन

प्रस्तुत शोधकार्यका समस्या निम्नलिखित छन् :

१. नेपालभाषा र नेपालीका प्रसिद्ध साहित्यकार दुर्गालाल श्रेष्ठको जीवनका महत्वपूर्ण र उल्लेखनीय घटनाहरू खोजेर लेख्नु यस शोधकार्यको प्रथम समस्या हो ।

२. त्यस्तै दुर्गालाल श्रेष्ठको साहित्यिक व्यक्तित्व लगायत अन्य व्यक्तित्वहरूको खोज र विविध आयामबाट विश्लेषण गरी प्रस्तुत गर्नु यस शोधकार्यको अर्को समस्या हो ।

३. दुर्गालाल श्रेष्ठका केही कृतिहरूबारे समालोचना र उनको कृतित्वको चर्चा उनकै पुस्तकहरूको भूमिका लेख्ने क्रममा धेरै समालोचक साहित्यकारहरूले गरेका छन् । तर उनका सबै कृतिहरूको एकै ठाउँमा चर्चा गरिएको छैन । पुस्तकाकारमा प्रकाशित दुर्गालालका सबै कृतिहरूको चर्चा गरी उनको कृतित्वमाथि प्रकाश पार्नु यस शोधकार्यको तेस्रो समस्या हो ।

## १.४ शोधकार्यका उद्देश्यहरू

- हालसम्म साहित्यकार दुर्गालाल श्रेष्ठको जीवनी लेखन-प्रकाशन नभएको अवस्थामा यस शोधकार्यको उद्देश्य सोही अभावपूर्ति हो । यसमा उनको जीवनसँग सम्बन्धित महत्वपूर्ण घटना र तथ्यहरूमाथि प्रकाश पारिएको छ ।

- तर यसको उद्देश्य कोरा घटना र तथ्यहरूको रिपोर्टाज गर्ने मात्र नभई ती घटना र तथ्यसँग सम्बद्ध कविहृदयभित्रको संवेदना, अनुभव र क्रियाप्रतिक्रियाको जीवन्त अभिलेख तयार गर्ने हो । यसमा कविको विषयनिष्ठ भावनाहरूको उच्छ्लनलाई विशेष महत्व दिइएको छ ।

- त्यस्ता विशिष्ट र वैयक्तिक अनुभवहरूलाई कविको धारणा/दर्शनसँग जोड्दै साधारणीकरण गर्ने पनि यसको उद्देश्य हो, जसबाट कि व्यक्तिको जीवनी पाठकको लागि महत्वपूर्ण हुनसकोस् ।

- दुर्गालाल श्रेष्ठको साहित्यिक र साहित्येतर व्यक्तित्वको विभिन्न कोणहरूबाट अध्ययन र विश्लेषण गर्ने पनि यसको उद्देश्य हो । यसमा उनका कार्य र विचारहरूको अध्ययन गरी उनको विविधतापूर्ण व्यक्तित्वमाथि धेरै कोणहरूबाट अध्ययन गरी प्रकाश पारिएको छ ।

- साथै उनका पुस्तकाकारमा प्रकाशित सम्पूर्ण कृतिहरूको छोटकरीमा परिचय दिनु पनि यसको उद्देश्य रहेको छ ।

## १.५ पूर्वकार्यको समीक्षा

यस विषयमा वास्तवमा भन्नुपर्दाखेरि दुर्गालाल श्रेष्ठका कृतिहरूको बारेमा केही चर्चापरिचर्चा भए तापनि उनको जीवनी र व्यक्तित्वको अध्ययनमा खासै कार्य भएको छैन ।

दुर्गालालका कृतिहरूको अध्ययनमा भएको हालसम्मको ठूलो ग्रन्थ दुर्गालालया एकाङ्की : छगू अध्ययन (दुर्गालालका एकाङ्की : एक अध्ययन) हो । यो शोधार्थी माधवलाल प्रधानले नेपालभाषाको स्नातकोत्तर तहको लागि तयार गरेको शोधपत्र हो र यो २०५७ सालमा नेपालभाषा केन्द्रीय विभाग, पाटन संयुक्त क्याम्पस, पाटनमा प्रस्तुत भएको छ । यसमा शोधकर्ताले दुर्गालालका एकाङ्की नाटकहरूको अध्ययन-विश्लेषण गरेका छन् र उनको नाटककार व्यक्तित्वमाथि प्रकाश पारेका छन् । यसमा उनका जीवनका केही प्रसङ्गहरूको पनि उल्लेख भएका छन् ।

उनका कृतिहरू र साहित्यिक व्यक्तित्वबारे उनकै पुस्तकहरूमा विभिन्न लेखक र समालोचकले भूमिका लेख्ने क्रममा चर्चा गरेका छन् । ती थोरै भएर पनि गहन र

सारगर्भित छन् । तिनमा पनि उनको लिसंमा डा. कमलप्रकाश मल्लको र याक:फल्चामा मल्ल के. सुन्दरको भूमिका दुर्गालालको कवि-व्यक्तित्वको अध्ययनको लागि गहकिला सामग्री हुन् । त्यस्तै दुर्गालाल श्रेष्ठकै ग्वींनिलामा त्यसका सम्पादक चित्तरञ्जन नेपालीले लेखेको भूमिका र फणीन्द्ररत्न वज्राचार्यले सोही पुस्तकमा लेखेको दुर्गालाल श्रेष्ठबारे आफ्नो बिचारले पनि उनीमाथि महत्वपूर्ण प्रकाश पारेका छन् ।

दुर्गालाल श्रेष्ठकै कृतिहरू सन्तको छाता र कागजको डुङ्गामा सम्पादकद्वय डा. वासुदेव त्रिपाठी र रामबाबु सुवेदीद्वारा लिखित उनको संक्षिप्त परिचय र ती कृतिको चिनारीले उनको जीवनी र कृतित्वबारे संक्षिप्त भए पनि गहकिलो प्रस्तुति गरेका छन् ।

त्यस्तै अभियान साहित्यिक प्रतिष्ठानबाट प्रकाशित 'अभियान पुरस्कृत, २०५८' द्वारा सम्मानित कवि दुर्गालाल श्रेष्ठको परिचयपुस्तिकामा पनि उनको जीवनी र कृतिहरूको संक्षिप्त चर्चा गरिएको छ ।

यी बाहेक कृष्णा ताम्राकारले रेडियो नेपाल एफ. एम. १०० को नेपालभाषाको कार्यक्रम 'स्वनिग: सछि'को लागि लिएको अन्तर्वार्ताले उनको बाल्यकालका धेरै रोचक जीवनप्रसङ्गहरूको उद्घाटन गरेका छन् । त्यस्तै, नेपालभाषाको दैनिक पत्रिका सन्ध्या टाइम्सको नेपालसम्वत् ११२४ को नव वर्षको परिशिष्टाङ्कमा दुर्गालालसँगको कुराकानीको आधारमा प्रकाशित 'जिगु नाटक जिम्ह पात्र' (मेरो नाटक मेरो पात्र) ले उनको नाटक लेखनको पृष्ठभूमि बुझ्न मद्दत गरेको छ । नेपालीको साहित्यिक मासिक मधुपर्कको पूर्णाङ्क ४२६ र ४३३ मा प्रकाशित उनका अन्तर्वार्ताहरूले पनि उनको व्यक्तित्वका केही पक्ष बुझ्न सघाउ पुऱ्याउँछ ।

## १.६ शोधकार्यको औचित्य

दुर्गालाल श्रेष्ठ नेपालभाषाका वरिष्ठ साहित्यकार त हुन् नै । नेपालीमा लिखित तथा अनुवादित उनका कृतिहरूबाट नेपालका अन्य भाषाभाषीहरू पनि उनको कवित्वको शक्तिबाट परिचित र प्रभावित भइसकेका छन् । साथै उनको एक मात्र अङ्ग्रेजी र जापानी भाषामा अनूदित कृति ग्वींनिला (Twists and Turns) बाट पाएको प्रतिक्रियाबाट उनको कवित्व अन्तर्राष्ट्रिय स्तरमा पनि प्रभावशाली भएको प्रमाणित भएको छ ।

दुर्गालाल श्रेष्ठ कविका रूपमा चिनिन्छन् । उनको प्रतिभाको उच्चता पनि कवितामा नै भेटिन्छ । तर उनको प्रतिभा नाटक, गीत, गीतिनाटक, बालसाहित्य, अनुवाद, पाठ्यपुस्तक लेखन/सम्पादन, चलचित्र कथा/संवाद लेखनसम्म फैलिएको छ । उनले आफ्नो मातृभाषा नेपालभाषामा नै बढी कृतिहरूको रचना गरे तापनि जसै नेपाली भाषामा लेख्छन् त त्यसमा पनि उनको त्यत्तिकै पकड र परिष्कार भएको पाइन्छ ।

रोमान्सेली कविको पङ्क्तिमा उनी नेपालभाषा साहित्यमा शिखरमा छन् भने प्रगतिवादी लेखकका रूपमा पनि उनी त्यतिकै सशक्त छन् । साथै उनी बामपन्थी विचारधाराका भए पनि धार्मिक, आध्यात्मिक भावका कविता पनि उत्तिकै सरल र सरसताका साथ लेख्छन् । भाषा, जाति र राष्ट्रप्रेमका गीत, कविता र नाटकको रचनामा पनि उनी बेजोड छन् । कवितामा परम्परागत शैली अँगालेर पनि समसायमिक विषयलाई दह्रो गरी पकड्नसक्नु उनको अर्को विशेषता हो । यति मात्र नभई बालकवितामा उनी बालक भएरै प्रस्तुत हुन्छन् । यस्तो विविध विषय, विधा र प्रवृत्तिमा उत्तिकै सफलताका साथ कलम चलाउनसक्ने लेखक एक युगमा एक- दुई मात्र जन्मिन्छन् । दुर्गालाल श्रेष्ठ त्यस्तै व्यक्तित्वमा पर्छन् ।

लेखकहरू त धेरै हुनसक्छन् तर निष्ठाका लेखक कमै हुन्छन् । दुर्गालालको जीवन हेर्ने हो भने उनले अर्द्धशताब्दीमा मातृभाषा र कवित्वप्रति जुन अचल निष्ठा देखाएका छन्, त्यो अतुलनीय छ । उनी आफ्नो निष्ठामा तपस्वीझैं एकनिष्ठ भएर लागिरहेको पाइन्छ ।

दुर्गालाल श्रेष्ठले साहित्यमा पुऱ्याएको योगदानको साथसाथै निष्ठाका योगी भएर गरेको साहित्यिक तपस्याका दृष्टिले उनको जीवनी लेखनको औचित्य स्वयंसिद्धमात्र नभई टड्कारो आवश्यकता पनि हो । दुर्गालाल युगानुयुगसम्म बाँच्ने लेखक हुन् । त्यसैले उनको जीवनी, व्यक्तित्व र कृतित्वको अध्ययन पनि युगानुयुगसम्म औचित्यपूर्ण मात्र नभई महत्वपूर्ण पनि रहिरहनेछ । साथै त्यो वर्तमान र आउने युगको लागि अध्ययनमननको सामग्री भई रहिरहने छ, प्रेरणाको स्रोत बनिरहने छ ।

## १.७ सामग्री सङ्कलन र शोधविधि

यस शोधपत्र तयारीका लागि शोधनायक दुर्गालाल श्रेष्ठसँग ६ घण्टा लामो भिडियो तथा अडियोअन्तर्वार्ता लिइएको छ । साथै उनका परिवारजन तथा निकट मित्रहरूसँग पनि अन्तर्वार्ता लिइएको छ । ती अन्तर्वार्ताहरूबाट उनको जीवनी र व्यक्तित्वलाई बुझाउनसक्ने र पाठकीय रुचि हुनसक्ने कुराहरू छनौट गरी यो शोधमा राखिएको छ ।

पुस्तकाकारमा प्रकाशित उनका सबै कृतिहरूको अध्ययन गरी तिनबाट सामग्री सङ्कलन गरिएको छ । पत्रिकामा मात्र प्रकाशित (पुस्तकमा नसमेटिएका) उनका कविता तथा नाटकको पनि अध्ययन गरिएको छ । उनका कविताहरूमा आफ्नै जीवनका धेरै प्रसङ्गहरू पनि छन् । त्यसैले ती कृतित्वको लागि मात्र नभई जीवनीको लागि पनि महत्वपूर्ण सामग्री बनेका छन् ।

अध्ययनका लागि अन्य स्रोतहरूमा उनको गीत भएका श्रव्य गीतिचक्काहरू, रेडियो तथा पत्रिकाहरूमा प्रकाशित उनका अन्तर्वार्ताहरू छन् ।

उनको जीवनी परिच्छेद र अन्य परिच्छेदमा उल्लिखित उनको जीवनका प्रसङ्गहरू मस्यौदाकै अवस्थामा उनलाई देखाई तिनमा आवश्यक सुधार पनि गरिएको छ ।

## १.८ शोधकार्यको सीमाङ्कन

यस शोधपत्रले उनको जीवनका महत्वपूर्ण र प्रेरणादायी पक्षहरू समेट्न खोजिएको छ । त्यस्तै यसले उनका उल्लेखनीय व्यक्तित्वहरूमाथि प्रकाश पार्ने प्रयास गरेको छ, जसले गर्दा दुर्गालाल श्रेष्ठलाई समग्रमा बुझ्न सकियोस् । यसको उद्देश्य उनको जीवनका सबै झिनामसिना कुराहरूको सँगालो बनाउने होइन, बरु यसमा शोधपत्रका अध्येताले दुर्गालाल श्रेष्ठलाई बुझ्न, उनको जीवनबाट केही कुरा सिक्न र प्रेरणा पाउन सकियोस् भन्ने चाहना राखेको छ ।

कृतित्वको अध्ययनमा उनका पुस्तकाकारमा प्रकाशित कृतिहरूलाई लिइएको छ । पुस्तकको रूपमा नआई मात्र गाइएका गीत, खेलिएका नाटक र पत्रिकाहरूमा प्रकाशित रचनाहरू यस शोधका अन्य ठाउँमा उल्लेख गरिए तापनि कृतिको अध्ययनअन्तर्गत भने पारिएको छैन । साथै उनका कृतिहरूको सकेसम्म छोटकरीमा मात्र चर्चा गरिएको छ, गहिरो र सबै कोणबाट विस्तृत अध्ययन गरिएको छैन । यसको कारण हो, उनका कृतिहरूको अधिक सङ्ख्या तथा विधागत र विषयगत विविधता । उनका कृतिहरूको प्रत्येक विधा, प्रत्येक विषयको गहिरो अध्ययनका लागि छुट्टाछुट्टै शोधको आवश्यकता छ । जीवनी र व्यक्तित्वसमेत समावेश भएको एउटै शोधमा यो कार्य सम्भव पनि छैन ।

## १.९. शोधपत्रको रूपरेखा

प्रस्तुत शोधपत्रलाई निम्नलिखित विभिन्न पाँच परिच्छेदमा विभाजन गरिएको छः

| | |
|---|---|
| पहिलो परिच्छेद : | शोधपत्रको परिचय |
| दोस्रो परिच्छेद : | दुर्गालाल श्रेष्ठको जीवनीको अध्ययन |
| तेस्रो परिच्छेद : | दुर्गालाल श्रेष्ठको व्यक्तित्वको अध्ययन |
| चौथो परिच्छेद : | दुर्गालाल श्रेष्ठका कृतिहरूको अध्ययन |
| पाँचौं परिच्छेद : | निष्कर्ष |

# परिच्छेद : २

# दुर्गालाल श्रेष्ठको जीवनीको अध्ययन

## २.१ जन्म र जन्मघर

कवि दुर्गालाल श्रेष्ठको जन्मको प्रसङ्ग नै अलि असाधारण छ । उनको जन्मको कुरा गर्दा कुनै नाटकको दृश्यजस्तै लाग्छ ।

काठमाडौं सहरको एउटा निम्नमध्यमवर्गीय परिवार, जसमा एउटा लोग्ने, एउटी स्वास्नी र तिनका केही ससाना सन्तानहरू थिए । लोग्नेचाहिँ सखारै केही मिठाई, सागसब्जी किनेर ल्याई आफ्नो सानो पसलमा बेच्थ्यो । उनीहरूको घर वरिपरिका घरहरूमध्ये पनि सबभन्दा होचो र सानो थियो । केही कारणवश उनीहरूको घरसँग टाँसिएको घरवालाले घर बेचेर जान चाह्यो र उनीहरूलाई घर किन्न अनुरोध गऱ्यो । उनीहरू घर किन्न त चाहन्थे तर पैसा भने पुग्दो थिएन । त्यस वेला त्यो घरको मोल पनि त्यस्तै एक-डेढ सय मात्रै थियो । तर उनीहरूसँग पचास रूपैयाँ मात्र थियो । त्यसैले लोग्ने चाहिं गयो आफूले सधैं सेवा गर्ने मालिकसँग केही सापटी माग्न । साहूले दिन्छु पनि भन्यो । तर समयमा नदिएकोले फेरि भन्न गयो । साहूले भन्यो "तँलाई दिन्छु भने पछि दिइहाल्छु नि । ल त्यो बेच्ने मान्छे बोलाएर ल्याऊ ।" साहूले केही कागज गराएर पैसा दियो र साहूको जयजयकार गर्दै उनीहरू त्यो घरमा बस्न पनि थाले ।

तर एक साल नबित्दै त्यो साहूले तिनीहरूलाई घर खाली गर्न भन्यो । वास्तवमा साहूले कागज बनाएको त सापटीको नभई घरै उसको नाममा पो गरेको रहेछ त ! अशिक्षा र त्यसभन्दा पनि बढी साहूलाई पूरा विश्वास गरेको कारण उनीहरू नराम्ररी खाल्डोमा परे । साहूले जाऊ भनेपछि जानै पऱ्यो । उनीहरू घर खाली गर्न थाले ।

यसै क्रममा एउटा सानो सन्दुक झ्यालबाट झार्नु थियो । लोग्ने चाहिं माथि झ्यालबाट सन्दुकलाई डोरीले बाँधेर खसाल्दै थियो । स्वास्नी चाहिं तल उभिएर सन्दुक थाप्दै थिई । यत्तिकैमा डोरी चुँडेर सन्दुक तल खस्यो । त्यसले सन्दुक थाप्दै बसेकी गर्भवती स्वास्नीको पेट थिचिन पुग्यो । त्यो सन्दुकको थिचाइले व्यथा सुरु भयो र त्यसै कारण असमयमै एउटा बालकको जन्म भयो ।

त्यही बालक नै थियो - आजका सुप्रसिद्ध कवि दुर्गालाल श्रेष्ठ। त्यो दिन थियो ने. सं. १०५६ दिल्लागा एकादशी (वि.सं. १९९२ साल साउनकृष्ण एकादशी[१]) र स्थान काठमाडौंको न्हैकंतलाको चाबहालको दथुननी। उनलाई जन्म दिने मातापिता थिए – आशामोती श्रेष्ठ र गणेशलाल श्रेष्ठ।

आफ्नो जन्मको विषयमा बताउँदै कवि दुर्गालाल भन्छन् : "मान्छेलाई आफ्ना दुइटा कुरा थाहा हुँदैन भनिन्छ - एउटा जन्म र अर्को मृत्यु। यो मेरो जन्मको कथा मेरी आमाले बडो दुःखपूर्वक सुनाएकी थिइन्। मलाई त्यो सुनाएको क्षण मेरा आँखामा यति झल्झल्ती छ – भरखरै सुनिरहेझैं लाग्छ।" उनको जन्मको यस घटनाको विषयमा उनले एउटा कविता पनि लेखेका छन् जुन किरमिरे धर्साहरू कवितासङ्ग्रहमा सङ्ग्रहित छ।[२]

उक्त प्रकार नेपाल अधिराज्यको राजधानी काठमाडौंको व्यस्त सहरबीचको न्हैकंतलाटोलमा दुर्गालालको जन्म भएको थियो र उनको बाल्यकाल पनि त्यहीँ नै गुज्रेको थियो। सहरको आफ्नै सम्पन्नता र दरिद्रता हुन्छ। बाहिरबाट हेर्दा सहर गाउँभन्दा कता हो कता सुन्दर र सम्पन्न देखिन्छ। मीठो खान र राम्रो लगाउन नपाउने मान्छे नै पो छैन कि झैं लाग्छ। तर सहरको दरिद्रता कतिपय अवस्थामा गाउँको गरिबीभन्दा धेरै दुःखदायक हुन्छ। सहरले आफ्नो गरिबी बाहिर देखानपर्ने गरी बाहिरका आलिशान घरको गर्भभित्र लुकाएको हुन्छ। त्यस्तै थियो कवि दुर्गालाल श्रेष्ठ जन्मेको घर। टोल न्हैकंतला भने पनि उनको घर त्यस टोलको चाबहालभित्रको एउटा सानो चोक दथुननीमा थियो। चोकभित्रका चारपाँच घरमध्ये पनि सबभन्दा दुब्लो र पुड्को घर उनकै थियो। माटोको त्यो पुरानो घरको प्रत्येक तला होचा थिए, निहुरेर हिँड्नुपर्ने गरी। कवि आफ्नो जन्मघर सम्झँदै भन्छन् "सबैतिर उज्यालो भइसक्ता पनि हाम्रो घरमा बिहान भएको हुँदैनथ्यो। तल रछ्यान थियो। घरपस्ने ढोकैनिर अर्काको शौचालय थियो। त्यसैले गर्मी सुरु नहुँदै पनि मेरो घरमा लामखुट्टे आउँथे।"

उनले आफ्नो घरलाई व्यङ्ग्य गर्दै एउटा बालकविता लेखेका छन्, जसबाट उनको घरको स्पष्ट चित्र पाउन सकिन्छ। त्यसको एउटा अनुच्छेद यस प्रकार छ :

हाम्रो त आहा ! कस्तो मजा ! रछ्यान बीचमा घर।
रछ्यानैको माला पहिरी बसे जस्तो वर॥[३]

---

[१] दुर्गालालको जन्मतिथि फरक फरक ठाउँमा फरक फरक उल्लेख गरिएको छ। नेपालभाषा परिषद्बाट प्रकाशित पद्य पुचः कविता सङ्ग्रहमा उनको जन्मतिथि ने.सं. १०५७ श्रावणशुक्ल नवमी उल्लेखित छ। तर उनको जन्मपत्रिका अनुसार चाहिं ने.सं. १०५६ (बि.सं. १९९२) श्रावणकृष्ण एकादशी हो र यही तिथिअनुसार उनले वर्षैपिच्छे जन्मदिन पनि मनाउँदै आएका छन्।

[२] दुर्गालाल श्रेष्ठ, किरमिरे धर्साहरू, (काठमाडौं : विवेक सिर्जनशील प्रकाशन प्रा.लि., २०६०), पृष्ठ ५३-५५।

[३] दुर्गालाल श्रेष्ठ, ताइभाबा, (दुर्गालाल श्रेष्ठद्वारा नेपालभाषाबाट नेपालीमा अनुवाद) (काठमाडौं : ज्योति पुस्तक भण्डार, ने.सं. १०८६),पृष्ठ २३-२४।

## २.२ प्रारम्भिक शिक्षा

दुर्गालालका आमाबाबुका चार सन्तान थिए । दुई दाजुहरू र एउटी बहिनीका बीचका तेस्रा सन्तान थिए उनी । दाजुहरूले पढेलेखेका थिएनन् । छोरा मान्छेलाई पढाउन अनिवार्य नभएको त्यस अवस्थामा छोरीलाई पढाउने त कुरै भएन । तर दुर्गालाल पढ्न जान्थे । उनकी आमाले किन हो उनको पढाइलाई विशेष ध्यान दिने गर्थिन् । शायद ठूला छोराहरू नपढीकनै हुर्के, सानोले भए पनि पढोस् भन्ने उनको इच्छा थियो वा हुनसक्छ कान्छो छोरो भएकाले पनि आमाको विशेष माया पाएका थिए वा यस्तै के थियो । त्यस वेला राणाशासनको विरोधमा पढाउनुपर्छ भन्ने चेतना केही व्यक्तिमा आएको थियो र त्यस्तै वातावरण बनेको थियो । त्यस वेला त्यही न्हैकंतलामा राणाविरोधी अभियानको अखडा थियो । तिनै राणाशासनविरोधी राजनीतिक मान्छेहरूले त्यस ठाउँमा विद्यालय खोलेका थिए । नौ-दस वर्षका दुर्गालाल त्यही विद्यालयमा पढ्न जान्थे । विद्यालय भएकोले त्यहाँ केही-केही पढाइ त हुन्थ्यो तर राजनीतिमा लागेका मानिसले खोलेको त्यो विद्यालयमा गतिलोसँग पढाइ हुनुभन्दा केटाकेटी जम्मा पार्ने काम मात्र गरिन्थ्यो । त्यो विद्यालय पछि अन्तै सरेकोले उनकी आमाले विशेष न्योहोरा गरी बर्माबाट फर्केका शङ्कर गुर्जू (गुभाजू) कहाँ पढाउन पठाइन् । ती शङ्कर गुर्जूको साँचो नाम संघरत्न शाक्य थियो र उनी त्यस वेला अहिलेका मानवअधिकारवादी नेता पद्मरत्न तुलाधरका काकाको घरमा बहालमा बस्थे ।  उनी त्यहाँ पढ्न जाँदाको पहिलो दिनको घटना साह्रै घतलाग्दो रहेछ ।

कुरा के भने अगाडि पनि केही पढिसकेका दुर्गालालले आफूलाई निक्कै जान्ने सुन्ने ठानेका रहेछन् । अलिकता आफू अङ्ग्रेजी पढ्नसक्छु भन्ने कुरो झल्काउन उनले सिलोट र नेपाली किताबको माथि बाहिरबाट देखिने गरी अङ्ग्रेजी किताब (फस्ट बुक) बोकेर गएका थिए । शङ्कर गुर्जूले “तिमी कति कक्षामा पढ्ने” भनेर सोधे । उनले फूर्तिसाथ “दुई” भनेर भने । “ल त ल बेस भयो । दुई कक्षामा पढ्ने रहेछौ । अङ्ग्रेजी पनि सिकेका रहेछौ । म एउटा अक्षर लेख्छु, भन्नु है त” भनेर गुरुले भने । उनले पनि गुरुले सिलोटमा अक्षर कोर्नासाथ भने “कु” । गुरुले “ए, राम्रोसित हेरेर भन” भने । शङ्का लागेर लहरै भित्तामा अडेस लागेर पढिरहेका विद्यार्थीहरू पनि हेर्न आए । हेरेर सबैजना हाँस्न थाले । उनले फेरि फुर्तिसाथ “कु” भने । विद्यार्थीहरू झन् गललल हाँसे । वास्तवमा गुरुले लेखेको त्यो अक्षर थियो “कृ” ।

आफू “कृ” एउटा अक्षर पनि नचिन्ने, तर गुरुको अगाडि कक्षा दुईमा पढ्ने भनेको, साथै सबै साथीहरू हाँसेको सम्झँदै-सम्झँदै उनको मन रोयो । त्यो विद्यार्थीहरूको हुलमा सबभन्दा ढाडे पनि उनी नै थिए, सबभन्दा नजान्ने पनि उनी नै । उनले त्यति वेला नै आत्मग्लानि महसुस गरिसकेका थिए । यो घटनाले उनलाई भित्रसम्म घोच्यो । अपमान भन्ने कुरा उनले जिन्दगीमा पहिलोपल्ट महसुस गरे । त्यसपछि उनी लगनशील भएर पढ्दै गए । रातमा निद्रा पनि भनेनन् । बिहान दुई बजे नै उनी उठ्थे ।  घरनजिकै बहालमा सरस्वतीको प्रतिमा थियो । उनी सरस्वतीको मुख

धोइदिन्थे, पानीले मूर्ति पखाल्थे । अनि त्यो चकमन्न रातमा सरस्वतीको अगाडि बसेर उनले दिनभर आफूले पढेका सबै कुरा सरस्वतीलाई आँखा चिम्लेर सुनाउँथे । यसो गर्दा उनलाई निकै आनन्द आउँथ्यो । त्यसपछि त उनले छ महिनामा नै सबैलाई उछिनिहाले ![४]

शङ्कर गुर्जू "किताबमा जस्तै लेख्नू, अशुद्ध नलेख्नू" भन्थे । गुर्जू आफैं पनि मोतीदानाजस्तै सुन्दर अक्षर लेख्थे । दुर्गालालले पनि आफ्नो अक्षर किताबको जस्तै शुद्ध र गुर्जूको जस्तै सुन्दर पार्ने प्रयास गर्थे । यसले गर्दा उनको शुद्ध र सुन्दर लेख्ने बानी नै बस्यो । त्यसैले होला अहिलेको बुढेसकालमा पनि उनको अक्षर छापाजस्तै सुन्दर छ ।

उनले एक सालजति मात्रै शङ्कर गुर्जूकोमा पढेका थिए । तर शङ्कर गुर्जूको प्रभाव उनमा निकै गहिरो रह्यो । गुर्जू आफैं पनि धेरै जानेको मान्छे त थिएनन् । तर उनी किताबमा जताजता फर्काएर (ह्रस्वदीर्घ) लेखिएको हुन्छ त्यतै-त्यतै फर्काएर लेख्न भन्थे । वास्तवमा गुर्जूलाई ह्रस्वदीर्घ पनि भन्न आउँदैनथ्यो । तर यसले शिष्य दुर्गालाललाई जीवनपर्यन्त शुद्ध लेख्नमा मद्दत गर्‍यो ।[५]

त्यसपछि २००३ सालतिर दुर्गालालले तत्कालीन काठमाडौंका धेरैजसो घरानियाँहरू पढ्ने पद्मोदय माध्यमिक विद्यालयमा पढे । पद्मोदय माध्यमिक विद्यालय यसरी उनको पहिलो औपचारिक पाठशाला भयो । त्यहाँ उनलाई न्हैकंतलाका गौरीप्रसाद राजभण्डारी (जो विद्यालयका संस्थापकमध्ये पनि थिए) ले निःशुल्क भर्ना गरिदिएका थिए । पद्मोदय विद्यालयमा त राणाका छोराहरू, उनीहरूका भारदारका छोराहरू र राणाका दरबारमा पुरोहित काम गर्नेका छोराहरू मात्र पढ्ने गर्थे । उनको त सुरुवाल नै ठाउँ ठाउँमा टालिएको हुन्थ्यो । त्यस वेलासम्म पनि उनको खुट्टामा जुत्ता थिएन । त्यसैले उनी अरू विद्यार्थीहरूका बीचमा अलग्गै देखिन्थे। कसैले उनलाई होच्याएर केही नभने पनि उनले आफू अरूभन्दा निकै तल रहेको चाल पाए । तर सबै कुरा थाहा पाएर पनि त्यसमा उनले गर्न नै के सक्थे र ? उनले देखावटी कुरामा अरूसँग प्रतिस्पर्धा गरेर जित्न सक्ने त थिएनन् नै । बरु उनले आफूले सक्ने कुरामा राम्रो गर्ने कोसिस गर्न खोजे ।

त्यो विद्यालयमा मङ्गलाचरण गाउने चलन थियो – "सरस्वतीका कुमार हामी, सरस्वतीको पुकार गर्छौं" भन्ने लक्ष्मीप्रसाद देवकोटाले लेखेको कविता गाइन्थ्यो । त्यहाँ त्यो गीत गाउन लगाइन्थ्यो । जीउमा राम्रो लुगा नभए पनि, खुट्टामा जुत्ता नभए पनि गाउनमा उनी राम्रा थिए । गीत राम्रो गाउने भएकोले उनलाई शिक्षकहरूले मन

---

[४] अनन्तप्रसाद वाग्ले, 'त्यो झल्झलाकार तारामण्डल', कान्तिपुर, (साप्ताहिक बालकोसेली 'कोपिला', मंसिर १२, २०६०) पृष्ठ घ र साथै शोधनायक दुर्गालाल श्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार पनि ।
[५] पूर्ववत् ।

पराउन थाले । उनको अक्षर पनि साह्रै राम्रो थियो । उनको अक्षर देखाउन उनको कापी विद्यालयका सबै कक्षामा घुमाउन लगिन्थ्यो ।[६]

## २.३ लेखनको सुरुवात

दुर्गालालको लेखनको सुरुवातबारे लेख्नुअघि उपत्यकामा त्यस वेलाको डबली नाटक मञ्चनका विषयमा केही जानकारी दिनु आवश्यक हुन्छ ।

उपत्यकामा मनोरञ्जनका साधनका रूपमा दुई दसकअघिसम्म पनि टिभी, भिडिओ आदि केही थिएनन् । केही थोत्रा चलचित्रघरहरू थिए । तिनमा पुराना हिन्दी चलचित्र देखाइन्थ्यो । महीनादिन नबित्दासम्म चलचित्र फेरिँदैनथ्यो । तिनमा पनि महिला, बालबालिका र वृद्धवृद्धाको पहुँच कमै हुन्थ्यो । त्यस वेला नेवारहरूको साँस्कृतिक रूपमा सदियौंअघिदेखि चलिआएको डबली-नाटक (दबूप्याखं) साउनको आधाआधीदेखि भदौ-असोजसम्म देखाइन्थ्यो । नाटक देखाउन टोलटोलमा डबलीको व्यवस्था हुन्थ्यो, जुन अहिले पनि देख्न सकिन्छ । नाटकमा अभिरुचि राख्ने टोलटोलका केटाहरू मिलेर नाटकमण्डली गठन गर्थे र नाटक बनाउँथे । टोलटोल, गाउँगाउँको अनुरोधमा नाटकमण्डलीहरू बोलाएका ठाउँसम्म आफ्ना नाटक देखाउन जान्थे । दर्शकले रुचाएका नाटक महिनौंसम्म पनि चल्थे । यो शोधकर्ताले पनि पचीसवर्ष अघिसम्म यस्ता थुप्रै नाटकहरू हेर्ने अवसर पाएको थियो । कल्पना गर्न सकिन्छ, पचास-पचपन्न वर्षअघि दुर्गालालको बाल्यकालमा यस्ता डबली-नाटकको प्रभाव कस्तो थियो होला ।

त्यस्तै २००४ सालको कुरो हो । दुर्गालाल भरखर ११-१२ वर्षको भएका थिए । त्यस वेला छिमेकी टोल थाय्मदुका केटाहरू न्हूबहालमा ‘सत्तलसिंह महाराज’ नामको डबली-नाटकको तयारी गर्दै थिए । उनकै उमेरका केटाहरू गीत, सङ्गीत, संवाद, अभिनयको पूर्वाभ्यास (rehearsal) गर्दै थिए । नाटक भनेपछि  बालसुलभ उत्सुकता दुर्गालाल र उनका टोलका केटाहरूमा पनि थियो । त्यसैले तिनीहरू त्यसको पूर्वाभ्यास हेर्नजान्थे । केही दिनसम्म दुर्गालाल र उनका साथीहरूलाई भित्रै बसाई पूर्वाभ्यास हेर्न दिए । तर एक दिन उनीहरूले निक्कै ढोका ढक्ढक्याउँदा पनि ढोका खोलेनन् । भित्रबाट गाएको बजाएको आवाज आउँदैथियो । केटाहरू हेर्न अति आतुर हुँदैथिए । ढोका नखोलेपछि ढोकाको प्वालबाट दुर्गालालले चियाए । चियाएको मात्र के थियो, दुर्गालाल ‘‘अइया’’ भन्दै आँखा छोप्दै रुँदै भैंमा खुट्टा बजार्न थाले । सबै साथीहरूले ‘‘ए, के भयो, के भयो’’ भन्न थाले । ढोकाको प्वालबाट दुर्गालालले चियाउँदा भित्रबाट कसैले औंलाले उनको आँखामा घोचिदिएको रहेछ । त्यस घोचाइले दुखेको त आँखामा थियो तर चोट भने मनमा परेको थियो । त्यही चोटमा उनले भने - “ल हामी पनि नाटक

[६] पूर्ववत् ।

बनाउने" । उनका साथीहरूलाई पनि दुर्गालाललाई घोचेको चोट परेको थियो । तिनीहरूले पनि जोशका साथ "बनाउने, बनाउने" भने । नाटक बनाउन त बनाउने तर लेख्ने कसले ? कुनै नाम चलेको लेखकले त ती केटाहरूलाई पत्याई नाटक दिने कुरै भएन । त्यही केटाहरूमध्ये कसैले सोधे - "नाटक त बनाउने, तर लेख्ने कसले?" चोट ब्यहोर्ने त दुर्गालाल थिए, त्यसैले उनले कम्मर कसेर भने "म लेख्छु" ।

नाटक कसरी लेख्ने भन्ने त परै जाओस्, त्यस वेला दुर्गालालले सबै संयुक्ताक्षर पनि लेख्न सिकेका थिएनन् । नेपालभाषामा त झन् थुप्रै संयुक्ताक्षर हुनेगर्छन् । तर पनि नाटक लेख्दै गए । नाटक लेखन पनि पूरा भयो । त्यसपछि पूर्वाभ्यास सुरु भयो । नाटक देखाउन पनि थालियो । त्यो नाटक त निकै लोकप्रिय भयो । साउन सकियो तर पनि नाटक देखाउनको लागि अनुरोध गर्नेहरू सकिएनन् । त्यसरी महिना दिनभन्दा बढी नै त्यो नाटक चल्यो । उनीहरूको नाटक धेरै नै चल्यो र निक्कै लोकप्रिय पनि भयो ।

यसरी उनी किशोरावस्था पनि नपुग्दै जानीनजानी अनायासमै लेखक हुनपुगे, नाटककार बन्नपुगे । उनले त्यस वेला शायदै सोचेका थिए होलान् कि म लेखक बन्न जाँदै छु, नाटककार बन्न जाँदै छु । यो उनको सचेत रूपले लेखक बन्ने प्रयास थिएन । मात्रै आँखामा घोचेको अपमानको बदला लिने प्रयास थियो । उनलाई त त्यस वेला "ए, तिमीहरू एउटा नाटक गर्दैमा यत्ति साह्रै ठूला भयौ, होइन त ? हामी पनि केही कम छैनौं" भनेर ती अपमान गर्नेहरूलाई जवाफ दिनु थियो, बस् । यदि त्यो लेखक नै बन्ने सचेत प्रयास थियो वा उनमा लेखकीय चेतना भइसकेको भए निश्चय पनि त्यत्रो पूर्णाङ्की नाट्यकृतिलाई महत्व दिएर सँगालेर राख्थे होलान् । तर त्यो उनको नाट्यकृति त हराएको मात्र नभई उनले नामै पनि बिर्सिसकेका रहेछन् ।

दशकौं पछि एक दिन सोही नाटकमा काम गर्ने सङ्गीतकार हुतराज शर्मालाई दुर्गालालले सोधे : "ए बाजे, त्यो हामीले त्यस वेला खेलेको नाटकको नाम के थियो हँ?" उनले जवाफ दिए : "ए त्यो *'प्रेम जीवन अन्धकार'* होइन र ?" आफैंले लेखेको नाटकको नाम सुनेर दुर्गालाल आफैं दङ्ग परे । त्यति सानो उमेरमा त्यस्तो गम्भीर नाम जुराएकोमा उनी आफैं चकित पनि भए ।[७]

## २.४ कविता लेखनको सुरुवात

थाय्मदु टोलमा एउटा पाटी (फल्चा) थियो (जुन अद्यापि छँदैछ) । त्यस पाटीमा मुरलीधर पण्डितले कथा हाल्थे – श्रीमद्भागवतको । कथा सुन्नेहरू बस्नको लागि त्यहाँ

---

[७] माधवलाल कर्मचार्य, दुर्गालालया एकाङ्की नाटक : छगू अध्ययन, (शोधपत्र), त्रि.वि. नेपालभाषा केन्द्रीय विभाग, पाटन संयुक्त क्याम्पस, पृष्ठ १०७-१०८ र साथै शोधनायक दुर्गालालश्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार पनि ।

थुप्रै सुकुल बिछ्याइराखेको हुन्थ्यो । सुकुलमा कथा सुन्ने मान्छेहरू टन्नै बसिराखेका हुन्थे । कथा हाल्ने बाजे माथि पाटीमा बसिराखेका हुन्थे । तिनको भीडमा भरखरका किशोरवय प्रवेश गरेका (त्यस्तै चौध-पन्ध्र वर्षका) दुर्गालाल पनि हुन्थे । बस्न त उनी कथा सुन्नेहरूकै भीडमा हुन्थे, तर कथा कताबाट कता पुग्दै छ भन्ने भेउ उनलाई हुँदैनथ्यो । कथा सकिएपछि टीका लगाइदिने एक जना किशोरी थिइन् । ती किशोरी त्यही टोलकी थिइन्, राम्री थिइन् । उनी त्यहाँ कथा सुन्न जाने त तिनकै हातबाट टीका थाप्नको लागि मात्रै थियो किनकि ती युवतीको हातबाट टीका थाप्ने इच्छा सधैं उनको भित्री हृदयमा हुन्थ्यो । उनी दिनदिनै कथा सुन्न जान्थे तर कथामा केके भनिन्थ्यो उनलाई थाहा हुँदैनथ्यो । उनलाई त मात्रै चिन्ता हुन्थ्यो ती युवतीको हातबाट निधारमा टीका थाप्ने ।

कथा सकिएपछि टीका थाप्ने वेला आउँथ्यो । उनी टीका थाप्थे तर टीका थापिसकेपछि उनी कहिल्यै पनि टाउको सीधा पारेर घर फर्कँदैनथे, सधैं आकाशतिर हेरेर घर फर्कन्थे । किनभने उनलाई साह्रै चिन्ता हुन्थ्यो - कतै त्यो टीका निधारबाट झर्ला कि भन्ने । फेरि घरमा छिर्दा त झनै अप्ठ्यारो हुन्थ्यो किनभने घरको ढोका त साह्रै होचो थियो, निहुरेर पस्नु पर्थ्यो । ढोकाबाट पस्दा उनी खुट्टा खुम्च्याएर झन्डै बसेझैं गरी पस्थे, तर टाउको निहुराउँदैनथे । साथै मनमनै “हे परमेश्वर मेरो टीका नखसोस्” भनी भगवान्लाई पुकार्दै पस्थे ।

त्यसपछि साँझ हुन्थ्यो । बिस्तारै बेलुका पनि हुन्थ्यो । आमा बुबा र उनी सुत्ने मटानको त्यही एउटा सानो कोठा थियो । कोठामा एउटा झ्ूल पनि थियो । झ्यालको नजिकै टुकी बलिरहेको हुन्थ्यो । उनका बुबालाई कतै उनले धेरै बेर बत्ती बालिराख्छ कि, तेल धेरै सकिन्छ कि भन्ने डर हुन्थ्यो । त्यसैले उनका बुबाले बत्ती निभाइदिन्थे । तर उनलाई निद्रा पर्दैनथ्यो । उनी झ्यालमा बस्थे । तल रछ्यानबाट दुर्गन्ध आइरहेको पनि उनी चाल पाइरहेका हुन्थे । त्यतिखेर उनको मनमस्तिष्कमा तिनै टीका लगाइदिने युवती घुमिरहेकी हुन्थिन् । तिनको हाउभाउले उनलाई कताकता अर्कै दुनियाँमा घुमाइरहेको अनुभव भइरहन्थ्यो । मनमा केही कुरा उम्लिरहेको भान हुन्थ्यो । त्यस वेला भित्रैबाट केही अभिव्यक्त गरौं जस्तो लाग्थ्यो उनलाई । तर त्यहाँ उनीसँग कागज हुँदैनथ्यो । कोठामा बुबाले खानेगरेको फूलमार चुरोटका खाली बट्टाहरू हुन्थे । एउटा ठुटे सिसाकलम हुन्थ्यो । उनी चुरोटको बट्टा च्यातेर लेख्न लायक बनाउँथे । अँध्यारो रातमा केही देखिँदैनथ्यो । तर पनि सीधा लेख्नको लागि उनी कागजमाथि आफ्नो औंला राख्थे । एक धर्को लेख्थे । औंला तल सार्थे । फेरि अर्को एक धर्को लेख्थे । यसरी फूलमार चुरोटको बट्टा भर्थे । उनको भनाइअनुसार भोलि बिहान उठेर हेर्दा फूलमार चुरोटका बट्टामा लेखेका ती हरफहरू उज्यालोमा लेखिएझैं सीधा हुन्थे ।

त्यस वेला लेखेको त्यो के थियो अहिले उनी स्वयम्लाई थाहा छैन, हरफ सम्झनु त परै जाओस् । उनी अहिले भन्छन् : “ती गीत, कविता वा त्यस्तै केही थिए

होलान्, उनीप्रतिको (ती युवतीप्रतिको) अनुरागको टीका । साहित्यक्षेत्रमा प्रवेश गर्न अर्पेको मङ्गलाचरण थिए सायद, ती ।"[८]

जे भए पनि त्यस वेला उनमा प्रेम अङ्कुराएको थियो तर त्यो प्रेम एकपक्षीय भावुकता थियो, एउटा किशोरावस्थाको अनुराग जुन बिलकुल एकोहोरो थियो । न त ती युवतीले उनलाई चाहेकी थिइन्, न तिनी उनको आफूप्रतिको आकर्षणबारे नै सचेत थिइन् । किनभने ती युवतीप्रति आकृष्ट किशोर दुर्गालालले यसबारे तिनलाई केही व्यक्त गर्ने कोसिस गरेका थिएनन्, व्यक्त गर्ने सायद चाहना पनि थिएन । उनी त मात्रै एक्लै भावनामा डुबिरहेका हुन्थे । त्यसैमा उनलाई तृप्तिको अनुभूति भइरहेको हुन्थ्यो । एउटा ठिटौले मनको भावना मात्र थियो त्यो । उनको मनमा 'म तिनलाई प्रेम गर्दैछु' भन्ने भाव हुन्थ्यो । सोही भावमा डुबेर सुखको रसपान गरिरहेको अनुभूति हुन्थ्यो उनलाई । सम्भवतः त्यो पूर्णरूपमा भावनात्मक (platonic) प्रेम थियो ।

## २.५ आमाको माया

दुर्गालालको बाल्यकाल निकृष्ट गरिबीमा गुज्रेको थियो । भात खाने भनेको बिहानै मात्र हुन्थ्यो । बेलुका पनि भात खाइन्छ भन्ने कुरा उनलाई धेरै वर्षसम्म थाहा थिएन, किनभने उनको घरमा बिहानै मात्र भात पाक्थ्यो । बेलुका कहिले हरियो केराउकोसा त कहिले भटमासकोसा खाएर सुत्थे तापनि त्यतिखेर उनलाई कहिल्यै पनि गरिबीको अनुभव भएन, अर्थात् उनले गरिबीको अनुभव गरी चित्त दुखाई बाँच्नुपरेको थिएन । भौतिक अभावमा हुर्के पनि उनको बाल्यकाल खुसीमा बितेको थियो । लघुताभास उनमा कहिल्यै आएन । बरु उनमा अदम्य आत्मविश्वास थियो । बाल्यकाललाई सम्भँदै कवि अहिले ती सबको कारण पहिल्याउन खोज्छन् र भन्छन् "यी सबको कारण थियो - आमाको माया । आमाको काखमा हुर्कन पाए जस्तोसुकै गरिबले पनि आफू गरिब भएको अनुभव गर्नुनपर्दो रहेछ ।"

बाल्यकालमा उनलाई निक्कै पल्ट एक्लै भात खाएको सम्भना छ । आमाले उनलाई एक्लै राखेर भात ख्वाउँथिन् । उनलाई थाहा थिएन आमाले किन उनलाई एक्लै राखेर भात ख्वाउँथिन् भन्ने कुरा । एक दिन उनका बाबुले उनकी आमालाई भने "ल पस्काऊ, सबैलाई बराबरी भाग राख । तिमी पनि खाऊ, म पनि खान्छु ।" श्रीमान्को आदेश मान्नै पर्‍यो । तर उनकी आमा दुर्गालालको थालमा हेर्दै आँखा भिजाउन लागिन् । श्रीमान्ले फेरि भने "ल खाऊ तिमी पनि छिट्टै ।" तर उनले घाँटीबाट गाँस निल्नसकेकी थिइनन् । उनी सम्भँदै थिइन् "मेरो छोरो यति खाएर पुग्ने मान्छे होइन ।

[८] रेडियो नेपाल एफ. एम. काठमाडौंको 'स्वनिगः सछि'को कार्यक्रममा प्रसारित कृष्णा ताम्राकारद्वारा दुर्गालाल श्रेष्ठसँग लिइएको अन्तर्वार्ता र साथै शोधनायक दुर्गालालश्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार पनि ।

उसलाई यो मेरो भाग पनि ख्वाउनु छ ।" त्यस वेला मात्रै दुर्गालालले थाहा पाए कि उनकी आमाले लुकाई-लुकाई आफ्नो भाग भात पनि उनलाई ख्वाउने गरेकी रहिछन् । उनको बाबुले त्यो कुरो चाल पाएर नै सँगै खाना खाने जुक्ति निकालेका रहेछन् । तर उनकी आमाले बरु आँखाबाट आँसु झार्दै गरिन्, गाँस टिपेर मुखमा हाल्नसकिनन् ।

उनलाई थाहा छैन चार सन्तानमा पनि उनलाई आमाले किन विशेष माया गर्थिन् । किन उनको पढाइको लागि त्यति चिन्तित हुन्थिन् । अरू सन्तानको लागि उनी त्यति व्यग्र थिइनन् । आमाले त्यतिखेर गरेको माया सम्झी कवि अहिले भन्छन् "मेरी आमाले मलाई गरेको त्यो साधारण मायामात्र थिएन । किन भइन् उनी त्यति पक्षपाती मेरो लागि । किन मलाई पढाउन त्यति चिन्ता लिन्थिन् । दाइहरूको लागि त्यति साह्रै गरेको मलाई थाहा छैन । बहिनी त छोरी मान्छे नै भइहाली । त्यतिखेर छोरीलाई पढाउने चलन थिएन । आमाले मलाई आफ्नो पेट काटीकाटी पनि ख्वाउँथिन् भन्ने कुरा मैले त्यस वेला थाहा पाएँ । तर थाहा पाएर पनि त्यस वेला अहिले जस्तो मन द्रवीभूत हुँदैनथ्यो । यो बुझ्ने भन्ने कुरा पनि अनौठो हुँदोरहेछ । त्यसवेला पनि म नबुझ्ने मान्छे त थिइनँ । सिंगै नाटक लेखिसकेको मान्छे थिएँ । तर पनि ती कुरा सम्झँदा अहिले जसरी मन भरिएर आउँछ, त्यो वेला हुँदैनथ्यो । आमा बितेपछि मात्र मैले बुझें – उनी मेरो लागि कति महान् थिइन् !"[९]

## २.६ बुबाको नाङ्ले-पसल

बुबालाई सम्झँदै कवि दुर्गालाल भन्छन् : "बाथ रोगले पीडित मेरा बुबा बिहान उज्यालो नहुँदै उठेर बाहिर जान्थे । दाउरा बटुल्थे । उज्यालो भएपछि आफ्नो सानो पसलमा एकातिर दाउराका मुठा बेच्नराख्थे । नाङ्गलोमा ससाना सामान फिजाउँथे । दिनभरि पसलमा बस्थे । रात नपरी घर फर्केको हामीलाई कहिल्यै थाहा भएन । त्यही बुबाको कमाइले हाम्रो परिवार चल्थ्यो । सधैं कमाउनमा तल्लीन हुनुपर्दा छोराछोरी के गर्दैछन् भन्ने भेउ पाउने फुर्सद पनि उनलाई भएन । त्यसैले हामी पनि सीधा बाटो हिँड्न नजान्ने जस्तै भयौं । बुबाले हामीलाई पढसम्म पनि भन्दैनथे । पढाउन नचाहेर होइन, पढ भने पछि त्यसको लागि केही खर्च गर्नुपर्ला, कापी-कलम किनिदिनुपर्ला भनेर हो, जसको लागि उनी समर्थ थिएनन् । नभए कुन चाहिं बुबाले आफ्नो छोराछोरी पढेको हेर्न चाहँदैन होला र ?"

घर किनेको माथि उल्लिखित घटनाबाटै स्पष्ट हुन्छ, उनका बुबा सोझा र गरिब मान्छे थिए । उनमा आफ्नो स्थितिप्रति विद्रोहभन्दा गरिबीको यथार्थलाई स्वीकार गर्ने प्रवृत्ति थियो । राणाका दलालको सेवा गर्ने, भक्ति गर्ने, साहूप्रति पूर्ण विश्वास गर्ने मान्छे थिए उनी । साहूबाट त्यत्रो विश्वासघात हुँदा पनि झगडा गर्ने विचार उनले

[९] शोधनायक दुर्गालालश्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

गरेनन् वा भनौं सामर्थ्य जुटाएनन् । बरु सजिलै हार स्वीकार गरी घर छोड्ने निर्णय गरे । यसरी हेर्दा उनमा साहसको कमी भएको देख्न सकिन्छ ।

तर परिवारमा भने उनी कर्तव्यपरायण व्यक्तिका रूपमा पाउन सकिन्छ । त्यस गरिब घरमा आम्दानीको एउटै स्रोत भनेको उनकै कमाइ थियो । धेरै कमाउन नसक्ने भए पनि मैले नकमाएमा परिवारले खान पाउँदैन भन्ने चेतना उनमा थियो । पढेलेखेको नभए पनि उनमा परिवारप्रति कर्तव्यबोध थियो । उनको त्यही मिहेनतको कमाइ नै सम्पूर्ण परिवारको आधार थियो। जस्तो अनपढ भए पनि, गरिब भए पनि उनले त्यत्रो परिवारलाई आफ्नो मिहेनत पसीनाले पालेकै थिए । त्यही नै उनको पुरुषार्थ भन्नुपर्‍यो ।

खान नपुगे तापनि, लाउने फाटे तापनि उनका सन्तानहरू टोलका दौंतरीहरूसँग निर्धक्क खेल्दै, बरालिंदै हिँड्थे । त्यसरी हिँड्न सक्नुको कारण पनि उनीहरूका बुबाले घरको सारा जिम्मेवारी, सारा चिन्ता आफ्नो थाप्लोमा लिएकाले नै हो । छोराछोरीलाई दुःख दिने चाहना उनमा कहिल्यै भएन । त्यसैले आफू बाथ रोगले पीडित भए पनि पसलको काम उनी एक्लै गर्थे । छोराछोरीहरूलाई दुःख दिँदैनथे । भौतिक सुखसुविधा दिन नसके पनि उनले छोराछोरीको खेल्ने, रमाइलो गर्ने बालअधिकार हनन गरेका थिएनन्, छोराछोरीको बालापन खोसेका थिएनन् । यसरी उनलाई एउटा राम्रो अभिभावक भन्न सकिन्छ । तर उनको आर्थिक अवस्थाले गर्दा भने उनले छोराछोरीलाई पढाउनमा ध्यान दिनसकेका थिएनन् ।[१०]

## २.७ स्वर्गलोकको यात्रा

बाल्यकालमा दुर्गालाललाई शूलको रोग थियो । वेलावेलामा शूलको रोगले सताउँथ्यो । एकपल्ट भने निक्कै चर्कोसित सूलले च्याप्यो । दुखाइ त छँदैथियो, साथै निक्कै कमजोर पनि पार्‍यो ।  एकाबिहानै हात खुट्टा बाउँडिन थाले । त्यसपछि त होश पनि हरायो । त्यस वेलाको राजवैद्य चिनिया वैद्यले नाडी हेरी ‘ल अब तिमीहरूले जेजे गर्नुपर्ने गर । यो बच्चाको बाह्र बजेसम्ममा (प्राण) जान्छ’ भनेर गए । त्यसपछि झारफुके अजीले एउटा जन्तर बाँधिदिए । अजीकै भनाइमा त्यो जन्तरको कुनै भर त थिएन तर भाग्यजोग्यले काम गरिहाल्ला कि भन्ने मात्रै थियो । तर जन्तर जीउमा परेपछि उनी बिस्तारै होशमा आए । त्यस वेला विहानको एघार-बाह्र बजेको थियो । आँखा खोल्दा उनले कोठाको साटो झल्झलाकार तारामण्डल देखे । त्यसमा देउताहरू पनि थिए । तिनको बीचमा दुर्गालाल आफैं पनि थिए । यो कुरा सम्झँदा दुर्गालाललाई अझै पनि आश्चर्य लाग्छ ।[११]

---

[१०] पूर्ववत् ।

[११] अनन्तप्रसाद वाग्ले, ‘त्यो झल्झलाकार तारामण्डल’, कान्तिपुर, पूर्ववत् ।

## २.८ बाल्यकालको आर्थिक अवस्था

दुर्गालालको बाल्यावस्था र किशोरावस्था अत्यन्त दरिद्रतामा बितेको थियो भन्ने कुरा माथिका सन्दर्भहरूबाट पनि स्पष्ट भइसेकेको छ । पेटभरि खान पाईंदैन थियो, राम्रो लगाउने त के आङमा नटालेको लुगा पर्दैनथ्यो । खुट्टामा जुत्ता कहिल्यै हुँदैनथ्यो । उनको जन्मघरको शोभावर्णन पनि माथि नै पर्याप्त भइसकेको छ । ती कुराहरू यहाँ दोहोऱ्याइरहनु आवश्यक नहोला । बरु माथि उल्लेख नभएका केही सन्दर्भ यहाँ उल्लेख गर्नु सान्दर्भिक होला, जसबाट उनको आर्थिक अवस्था अझै स्पष्ट हुनेछ ।

उनीहरूको टोलमा एउटा पैसावालको परिवार थियो । उनको बुबाले सेवा गर्न जाने साहूहरू मध्येकै घर थियो त्यो । त्यस परिवारमा उनकै उमेरको एउटा केटो निकै दिनदेखि बिरामी परेको थियो । त्यो केटाको हेरचाह गर्न बालक दुर्गालाललाई बोलाइयो । त्यही घरमा दिनभरि बस्नुपर्दा खाने पनि त्यहीं नै भयो । एक दिन दिउँसो घर आउँदा उनकी आमाले उनको बाहुला र हातमा सेता टाटा देखेर त्यो के हो भनेर सोधिन् । त्यो दूधको दाग थियो । त्यस वेलासम्म पनि उनले दूधभात खान जानेका थिएनन्, किनभने उनले त्यसभन्दा अघि कहिल्यै दूधभात खाएका थिएनन् । त्यसैले पहिलोपल्ट दूधभात खाँदा गाँस टिप्न नजानेर दूध हात र बाहुलामा झरेको थियो । त्यो साहूको घरमा एक-दुई हप्तामात्र उनी के बसेका थिए त्यसपछि त उनलाई आफ्नै घरको भात रुच्न छोड्यो । त्यो ठूलो घरमा बसेर आएपछि मात्र उनले थाहा पाएका थिए - 'आफ्नो घरमा खाने त उसिनेको चामलको भात पो रहेछ । उनीहरूको घरमा त अलिकता भए पनि दूध पाइन्थ्यो । आफ्नो घरमा त दूध भन्ने कहाँ पाउनु ?' दूधभात पनि खाइँदो रहेछ भन्ने कुरा नै उनले त्यहीँ गएपछि मात्रै थाहा पाएका थिए ।

त्यो ठूलो घरमा केही दिन बसिसकेपछि उनले निकै कुरा थाहा पाए – ठूला घरमा खवाइ पनि उनीहरूको भन्दा फरक हुँदो रहेछ, बसाइ पनि फरक हुँदो रहेछ, सुताइ (बिछ्यौना) पनि फरक हुँदो रहेछ । उनको त लामखुट्टे आउने कोठा ! एउटा ठाउँठाउँमा टालेको झूल थियो, त्यही पनि टाउको छोपे खुट्टा नढाकिने, खुट्टा छोपे टाउको बाहिरै हुने । धनी र गरिबमा सबै कुरा फरक हुँदोरहेछ भन्ने धेरथोर ज्ञान उनले त्यो ठूलो घरमा केही दिन बसेर थाहा पाए । त्यसभन्दा अघिसम्म भोको पेट खेल्न हिँड्दा पनि उनलाई आफू गरिब छु भन्ने चेतना थिएन ।[१२]

एक साल (२००० सालमा) आकासै ढाकिने गरी सलहको बगाल आएको थियो । त्यस वेला उनीहरूले दिनरात सलह किनेर महिनादिनसम्म त्यही मात्र खाएर बसेका थिए । खासमा उनका बुबाले सलह किनेर बेच्ने गरेका थिए । बेची नसकेको तिनीहरूले खाने गर्थे ।[१३]

---

[१२] शोधनायक दुर्गालालश्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

[१३] पूर्ववत् ।

काठमाडौंका सबैजसो केटाहरू चङ्गा उडाउन जान्ने हुन्थे, किनभने दशैंताका बच्चाहरूको विशेष मनोरंजन भनेकै चङ्गा उडाउने हुन्थ्यो । तर पहिला बच्चाहरू दशैं सुरु हुन निक्कै अघिदेखि नै चङ्गा उडाउने ध्याउन्नमा लाग्थे भने दशैं सुरु भएपछि के बालक के युवक के वृद्ध सबै चङ्गा उडाउनमा मस्त हुन्थे । (अहिले पनि चलन त उही नै छ तर पहिलाको तुलनामा मात्रा अलि कम भएको छ ।) त्यसैले काठमाडौंमा चङ्गा उडाउन नजान्ने मान्छे नै हुँदैनथ्यो भन्दा पनि हुन्छ । तर दुर्गालाललाई चङ्गा उडाउन आउँदैनथ्यो । सबै मान्छे चङ्गा उडाउनमा मस्त रहने वेला दुर्गालाल बाटोमा काटिएर झरेका चङ्गा र धागो बटुल्नमा व्यस्त हुन्थे । उनलाई पनि चङ्गा उडाउने मन हुन्थ्यो तर उनको घरको कौसी होचो थियो, चङ्गा उडाउन मिल्ने खालको थिएन । दशैं आएपछि छिमेकीहरू छाना र कौसीमा चङ्गा उडाउँदै "चेट ! चेट ! !" आदि अनेक शब्द निकाली खुसीले उत्तेजित भई कराइरहेका हुन्थे । आफू सरहका अरू बच्चाहरूले चङ्गा उडाएको देख्दा उनलाई पनि चङ्गा उडाउने रहर कहाँ नहुँदो हो र ? उनलाई तिनीहरूको छानामा गएर चङ्गा उडाउने मन हुन्थ्यो । तर तिनीहरूले दुर्गालाललाई घरमा भित्र्याउँदैनथे । उनी सानो जातका भएर घरमा नभित्र्याएको होइन न त तिनीहरू ठूलो जातका भएर नै त्यस्तो गरेका थिए । तिनीहरू उनकै थरका (श्रेष्ठ थरका) थिए । यसरी उनले विपन्नताको कारणले, टालेको सुरुवालको कारणले आफ्नै टोलछिमेकका मान्छेबाट पनि तिरस्कारको व्यवहार खेप्नुपरेको थियो ।[१४]

अझ उनले हुनेखानेको सौखको लागि तिलौरी फुटाउन आफ्नो निधार थापिदिने पनि गरेका थिए । त्यस वेला टोलका पैसावाल मानिसहरू तिलौरी फुटाएर बाजी राख्थे । उनीहरू बच्चाहरूको निधारमा तिलौरी ठोकाएर फुटाउँथे र जोर सङ्ख्यामा टुक्रा हुन्छ वा बिजोर सङ्ख्यामा भनी बाजी राख्थे । दुर्गालालले पनि बाल्यकालमा पैसावालहरूको त्यस्तै अनर्थपूर्ण लहडबाजीको लागि धेरैपल्ट निधार थापेका थिए । थाप्नुको कारण थियो, केही टुक्रा तिलौरी खाने लोभ ।[१५]

## २.९ अन्यायको विरुद्ध लडाइँ

त्यस वेला उनीहरू टुँडिखेलमा भोगटेको बल खेल्न जान्थे । एक दिनको कुरो हो, खेल्दाखेल्दै साँझ अँध्यारो हुन लागेपछि सबैजना फर्कन थालेका थिए । तर तिनीहरूमध्ये एकजना साथी त्यहाँ देखिएन । सबै जना घर फर्किंदा पनि दुर्गालाल एक्लै घर नगईकन त्यो साथीलाई खोज्न हिँडे । अँध्यारो भइसकेको थियो तैपनि खोज्दै-खोज्दै उनी भद्रकालीसम्म पनि पुगे । त्यो साथीलाई त तीनै-चारजना केटाहरूले घेरेर कुट्नलाई ठीक पारिरहेका थिए । दुर्गालाल बेस्कन कराए र झगडा गर्न तम्से । तब उनीहरू सबैको ध्यान दुर्गालालतर्फ आकृष्ट भयो । त्यही मौका छोपी उनको साथी त कुलेलम ठोकेर भाग्यो । ती केटाहरूले त दुर्गालाललाई मज्जाले भकुरे । जसको लागि

---

[१४] पूर्ववत् ।

[१५] पूर्ववत् ।

उनी त्यहाँ लड्न गएका थिए त्यसैको कारण उनले कुटाइ खाए । पछिसम्म पनि त्यो साथीसँग दुर्गालालको सम्बन्ध त्यति राम्रो भएन ।

अर्को घटना भने त्यसको ठीक विपरीत छ । यसमा दुर्गालाल आफैं अन्यायीका रूपमा देखापर्छन् । काजीलाल (जो पछि गएर न्हैकंतलाटोलकै बिप्लबी पुस्तकालयका संस्थापकमध्ये एक पनि भए) लाई दुर्गालालले सधैं तर्साउने गरेका थिए, सायद आफू जति बलियो नभएको ठानेर नै होला । सधैं तर्साउने गर्दागर्दै दुर्गालालले एक दिन उसँग त्यसैत्यसै निहुँ खोजेर बाभ्न लागे । आफूलाई अन्याय गरेको कुरामा सचेत भएर काजीलाल लड्दा दुर्गालालको बलले उसलाई सकेन । आफूले कमजोर ठानेका काजीलालले उनलाई पछारे । काजीलालको मृत्युको शोकसभामा दुर्गालालले बाल्यकालको त्यो घटना सम्भँदै भनेका थिए, "काजीलालले मलाई दुईपल्ट पछारे । एकपल्ट सानोमा भगडा गर्दा । अहिले टाढा जाने खेलमा पनि उनले मलाई पछारेर अघि गए । जसरी मैले तर्साउने गरेको काजिलालले आफू अपमानित भएको चेतनाले लड्दा मलाई हराए, मैले पनि कसैबाट अपमानको महसूस गर्दा त्यस्ता 'मैं हूँ' भन्नेहरू थुप्रैलाई पछारेको छु । अपमानित भएको चेतना हुँदा आत्माभित्रको देउता नै जागेर आउँदो रहेछ । त्यो जाग्यो भने कसैको केही नलाग्ने रहेछ ।"[१६]

## २.१० जुलुस निकाल्दा चर्पीमा थुनियो

उनको अनुभवमा गरिब धनी भनेर ध्रुवीकृत हुने स्वभाव अभिभावकहरूमा बाहेक बालबालिकाहरूमा छैन । टोलमा को धनीको बच्चा को गरिबको सबै एकनासले मिलेर खेल्थे । तर तिनका अभिभावकले गरेको फरक व्यवहार दुर्गालालले धेरै पटक भोगेका छन् ।

त्यस वेला राणाकालको अन्तिम समय थियो । सडकमा जुलुसहरू आइरहन्थे । बालक दुर्गालालले त्यसको राजनीतिक पक्ष बुभ्ने कुरै थिएन । तर देखासिकी गर्नु बच्चाहरूको स्वभाव नै हो । त्यसैले दुर्गालाल र उनको एकजना साथी मिलेर टोलमा जुलुसको देखासिकी गरेछन् । उनीहरूले एउटा लट्ठीमा कपडा बाँधी सुनेकै नारा लगाएर जुलुसको नक्कल गरेछन् । तर त्यो खेलाँची जुलुसमा सामेल हुने साथी पऱ्यो राणाको दरबारमा नोकरी हुनेको छोरा । उसको बुबाले दुर्गालाललाई बेस्मारी गाली गरेर चर्पीमा थुनिदिएछन् ।

त्यस्तै एउटा अर्को घटनामा उनीहरूको नाटकमा खेल्ने एउटा साथीलाई उसको बुबाले आफू नामी र धनी भएकोले नाटकमा खेल्नेको बुबा भनाउनु पर्ला भनेर खेल्न नदिई लगेको पनि छ ।[१७]

---

[१६] पूर्ववत् ।

[१७] पूर्ववत् ।

## २.११ प्रेमका विभिन्न रूप

किशोरकाल विपरीत लिङ्गप्रतिको आकर्षणको सुरुवात हुने उमेर हो । यो एउटा स्वाभाविक भाव हुनुपर्ने हो । तर समाजमा रहेको जातीय तथा आर्थिक असमानताले यसलाई पनि स्वाभाविक रूपमा प्रकट हुन दिएको छैन । यही समाजमा हुर्केको दुर्गालाल पनि त्यसको सिकार बन्न पुग्छन् । यस किसिमका दुई प्रसङ्ग उनको जीवनमा आएका छन् ।

ती दुवै प्रसङ्ग दुर्गालालको सत्र वर्षको किशोरवयको वेलाका कुरा हुन् । त्यस वेला उनको सम्पूर्ण धुन नै डबली नाटकमा केन्द्रित थियो । 'ग्राम्य जीवन' नाटकको रिहर्सल चलिरहेको थियो । आफ्नै टोल नजिककी एकजना अभिजात वर्गीय किशोरी दुर्गालालप्रति आकर्षित भएकी थिई । हुन त दुर्गालाल पनि श्रेष्ठ थरका हुन् । तर पनि दुर्गालालभन्दा ऊ माथिल्लो जातकी थिई र धनी परिवारकी थिई ।

आफ्नै उमेरकी त्यस किशोरीसँग दुर्गालालको परिचय त थियो तर खासै बोलचाल भएको थिएन । एक दिन दुर्गालाल असनबाट आफ्नो घरतिर आउँदै थिए, त्यस किशोरीले आफ्नो घरको बार्दलीबाट (पहिलेपहिले धनीहरूको घरमा मात्र बाटोतिर फर्केको बार्दली हुन्थ्यो) 'दुर्गालाल दाइ !' भनी बोलाएर 'हामीले पनि तिमीहरूको नाटक हेर्न पाइन्छ नि, पाइँदैन र ?' भनी । दुर्गालालले पनि स्वाभाविक रूपमा 'पाइन्छ नि, किन पाइँदैन र ? नाटक भनेकै देखाउनको लागि त हो' भने । त्यसपछि उसले दुर्गालाललाई नाटकको लागि चाहिने लुगा पनि ल्याइदिन थाली, कृत्रिम केश पनि बनाइदिन लागी ।[१८] कृत्रिम केशमा लगाउने फूल पनि उसैले किनेर ल्याउँथी । नाटकमै रम्ने र पैसाको अभाव भएका दुर्गालालको लागि यी सबै कुरा 'ढुङ्गा खोज्दा देउता पाएको' बराबर भइरहेको थियो ।

यस्तैमा एक दिन उनले त्यस किशोरीको घरमा बनाइराखेको कृत्रिम केश लिन गएका थिए । उनी कृत्रिम केश लिएर भऱ्याङबाट ओर्लंदै छिँडीतिर आउँदै थिए, उसले हठात् दुर्गालालको हात समातेर तान्न थाली । दुर्गालाललाई डर लागेछ । उनी बनाइराखेको कृत्रिम केश त्यहीँ छोडेर भागे । पछाडिबाट 'ए दुर्गालाल' भनी उसले बोलाएको पनि उनले सुनेका थिए, तर पनि पछाडि नै नफर्की उनी त्यहाँबाट निस्के ।

त्यसको केही दिनपछि केटीको दाइ उनलाई बेस्मारी गाली गर्न आयो । 'ए, तँ मेरी बहिनीलाई फकाएर लुगा गहना लिने ?' भनेर गाली गऱ्यो । 'त्यसमा हीराको टप पनि छ' पनि भन्यो । अनेक कुरा भनेर केटीको दाइले उनलाई तर्सायो ।[१९]

---

[१८] त्यस वेला नाटकमा केटाहरूले नै केटी पात्रको भूमिका निर्वाह गर्ने भएकोले केटी भई खेल्नेले कृत्रिम केश लगाउनु पर्थ्यो ।

[१९] शोधनायक दुर्गालालश्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

माथि उल्लेखित भन्दा ठीक उल्टो दोस्रो प्रसङ्ग छ, लगभग त्यही समयको । 'ग्राम्य जीवन'को रिहर्सल हेर्न धेरै किशोरकिशोरीहरू आउँथे । एक दिन रिहर्सल हेरी सबै मानिसहरू फर्किसकेका थिए । मात्रै बाँकी थियो समाजले अछूत मानिने जातकी किशोरी । दुर्गालालको मनमा के आयो कुन्नि, उनी त्यस समवयस्क युवतीको हात समाउन पुगे । तर त्यस युवती त्यस ठाउँबाट तुरुन्तै बाहिर गई । उसले दुर्गालालको स्पर्श स्वीकारिन ।

ती घटनाको सम्झना गर्दा कविले आफ्नो कमजोर मानसिकताको आत्मालोचना गर्छन्। जातीय र आर्थिक विभेद भएको समाजले उनलाई किशोरावस्थामा नै कति खोक्रो पारेको रहेछ भन्ने ग्लानि हुन्छ । वास्तवमा अभिजात्य युवतीले उनलाई धेरै अगाडिदेखि मन पराएर नजिकिने मौका खोजिरहेकी थिई । उसको प्रेम उनले स्वीकार्नुपर्थ्यो भने आफूभन्दा सानो जातकी केटीको हात उसको मनको भाव नै नबुझी समाउने आँट गर्नुहुँदैनथ्यो ।

अहिले यी दुई घटनाको विश्लेषण कविले यसरी गर्छन् : *'म अलि गरिबको छोरो भएकोले अछूत युवतीलाई छुन साहस गरें, जसले मलाई दुत्कार गरी । तर त्यो ठूलो घरको छोरी जसले मलाई छुन खोजी म त्यससँग डराएर भागें । मसँग दुवै अवस्थामा ठीकसित मानवीय भाव नभएको रहेछ । फेरि अर्को कुरा : म जो अछूत केटीको आँखामा ठीक भइनँ, अर्कोको (ठूलो घरकी केटीको) आँखामा कसरी ठीक भएँ ?'* [३०]

उल्लिखित दुई प्रसङ्गभन्दा भिन्नै अर्को एक प्रेमप्रसङ्ग भने अव्यक्त एकतर्फी प्रेमको आदर्श नमुना हो । एक नारीले बाल्यकालको खेलखेलमै दुर्गालाललाई मनमनै प्रेम गरिरहेकी थिइन्, तर यस कुराको ज्ञान दुर्गालाललाई प्रौढावस्थामा पुगेर मात्र भयो । यो भिन्नै खालको प्रसङ्ग यस प्रकारको छ :

पहिला-पहिला केटाकेटीहरू सामाजिक विवाहकै देखासिकी गरेर खेलिने दुलहादुलहीको खेल खेल्न खूब मन पराउँथे । यसलाई नेवारीमा 'भ्वय्कासा' भन्ने गरिन्छ । आँगनमा, कसैको घरको ठूलो कोठामा वा दलानमा दैनिक जस्तै टोलका केटाकेटीहरू जम्मा भई 'भ्वय्कासा' खेल्ने गर्थे । भोज भनेर ईंटा, घाँस, बालुवा आदिका परिकार बनाउँथे । केटीहरूले दुलहीलाई सिँगार्थे । दुलहा जन्ती लिएर लिन आउँथे । रात पर्‍यो भनेर सुत्ने पनि गर्थे । यो दुलहा-दुलहीको कोठा भनेर छुट्याउँथे । केही क्रियाकलाप अश्लीलझैं पनि देखिए तापनि तर बाल मस्तिष्कमा अश्लीलताको अलिकति पनि छनक हुँदैनथ्यो ।

---

[३०] पूर्ववत् ।

दुर्गालाल र उनका समवयस्क साथीहरू पाँचसात वर्षको उमेरमा नित्यजस्तै 'भ्वय्कासा' खेल्थे । त्यसैले केटाकेटीमा खेलिने ख्यालख्यालको विवाह दुर्गालालको लोकगीतमा पनि झल्केको छ, जस्तै :

मचाबले भ्वय् धकाः म्हितागु व कासा रे
चागःचा व वाउँगु घाँय्चा हेकथंया घासा रे

(अर्थात्, सानो उमेरमा भोज भनी खेलेको त्यो खेल रे । सानासाना ढुङ्गा र घाँस, ख्यालख्यालको परिकार रे ।)

बाल्यकालमा 'भ्वय्कासा' खेल्दा दुर्गालाल धेरैजसो दुलहा बन्थे भने उनकै उमेरकी एउटी केटी दुलही भएर खेल्थी । बिर्सिसकेकी त्यस नारीसित बीसतीस वर्षपछि टुँडिखेलमा अचानक उनको भेट भयो । ऊ भद्रकालीबाट महाङ्कालतिर गइरहेकी थिई । उसको हातमा पूजाको थाल पनि थियो । मन्दिरहरूमा पूजा गर्न आएकी हुनुपर्छ । ऊसँग 'धेरैपछि भेट भयो हगि?' भन्दै सामान्य कुराकानी भयो । तर त्यो अधबैंसे आइमाईको सिउँदोमा सिन्दूर थिएन । दुर्गालालले अचम्म मान्दै त्यो कुरा सोधे । उसले उल्टै प्रतिप्रश्न गरी 'तिमीले अझै मेरो सिउँदोमा सिंदूर देखेका छैनौ र?' त्यस वेला दुर्गालाललाई आफू उभिएको जमिन भासिएको अनुभव भयो । बालकककालमा ख्यालख्याल गरी खेलिने त्यो विवाहभोजलाई उसले त्यति धेरै गम्भीरतापूर्वक लिएकी थिई भन्ने कुराको अलिकति पनि भान दुर्गालाललाई थिएन ।[३१]

यस कुराले दुर्गालाललाई निक्कै अचम्भित पाऱ्यो । त्यस्तो ख्यालख्यालको खेललाई पनि जीवनकै अङ्गस्वरूप गम्भीरतापूर्वक लिने त्यस्ती प्रेमिका पनि यस धरतीमा हुन्छेहोली भन्ने अनुमान दुर्गालालले गरेका थिएनन् । यस घटनाले दुर्गालाललाई निक्कै प्रभावित गऱ्यो । उनलाई लाग्यो त्यस नारीको हृदय यति साह्रै कवितामय छ कि कवि भए तापनि उनको हृदय त्यति कवितामय छैन । उनले यस विषयमा 'भ्वय्कासा' शीर्षकको एउटा कविता पनि लेखेका छन्, जुन नेपालभाषाको दैनिक पत्रिका सन्ध्या टाइम्सको ने.सं. ११२२ को नयाँवर्षको अतिरिक्ताङ्कमा छापिएको छ ।

## २.१२ गणितको पढाइ : कविता लेखाइ

राम्रोसित पढ्ने मन गरेको भए त दुर्गालालले पढाइमा राम्रो पनि गर्थे होला । प्रतिभाशाली त उनी छँदै थिए । तर किशोरावस्था आइपुग्दानपुग्दै उनमा नाटक र साहित्यको लत चढिसेकेको थियो । त्यसैले उनको अक्षर मात्रै राम्रो भयो तर विषयमा प्रवेश गर्न सकेनन् । अक्षर राम्रो भएकोले उनी सबै विषयमा बल्लतल्ल उतीर्ण त हुन्थे, तर खासै राम्रोसँग पढ्न सकेका थिएनन् । गौरीप्रसाद राजभण्डारी गणित र विज्ञानका

[३१] पूर्ववत् ।

निक्कै राम्रा गुरु थिए । उनलाई ती गुरुकहाँ जुनसुकै पनि समूहमा ट्युशन पढ्ने छूट थियो । तर पनि गणित र विज्ञान नघुस्ने दिमाग भएकाले त्यस्तो मौका पाएर पनि उनले ती विषयमा कहिल्यै उन्नति गर्न सकेनन् । बरु मास्टरले रेखागणित पढाइरहँदा कहिलेकाहीँ उनी कविता कोर्दै बसेका हुन्थे । एक पल्ट गौरीप्रसाद भन्दै थिए "दुइ बिन्दु जोडे पछि रेखा बन्छ" । उनलाई त्यो वाक्यले कतै छोयो र तत्काल लेख्न थाले[३२] :

तिमी बिन्दु, म पनि बिन्दु
जर्जर धरतीमा दुई थोपा पानी
कमलको पातबाट तप्किएका ।

तिम्रो इच्छा, मेरो पनि इच्छा
सिन्धु होइन, कि दुई बिन्दुबाट
मात्र यौटा धर्सो बन्नु ।

म आउँछु, तिमी पनि आइद्यौ
आउँदा आउँदै एक धर्सो
नभए नहोला, के लाग्छ र ।

तल नहोस् सही, माथि त होला
धर्सो नहोस् सही, ढिको त होला
फरक अरू के नै होला ।[३३]

तर उनले जसोतसो २०११ सालमा प्रवेशिका परीक्षा उत्तीर्ण गरे ।

## २.१३ प्रथम कवितावाचन

हुन त उनले बाल्यकालमै एउटा किशोरीको ध्याउन्नमा कविता कोरिसकेका थिए । तर ती उपलब्ध छैनन्, कविको सम्झनामा पनि छैनन् । त्यसैले उनको

---

[३२] पूर्ववत् ।

[३३] दुर्गालाल श्रेष्ठ, झसुका: (मूल नेपालभाषाबाट दुर्गालाल श्रेष्ठद्वारा नेपालीमा अनुवाद), (पाटन : श्रेष्ठ प्रकाशन, ने.सं. १०७७), पृ. ४७ । दुर्गालाल श्रेष्ठको सम्झनाअनुसार यसको रचनाको वेला उनी कक्षा नौमा पढ्दै थिए । उनकै ग्वींनिला (पृष्ठ १) मा यसको रचना साल १०७७ उल्लेख छ । झसुका: नै १०७७ नयाँ वर्षको अवसरमा निस्केको भएपछि यसको रचना साल १०७७ हुनैसक्दैन । तर झसुका: मा कुनै पनि कविताको रचना साल उल्लेख नभएकोले यसको रचना साल यकिन गर्न सकिएको छैन । झसुका:का अन्य कविताहरू मात्रिक छन्दमा लेखिएको र यो एउटा मात्र छन्दमा नभएकोबाट उनले यो कविता अन्यभन्दा अघि लेखेको अनुमान गर्न सकिन्छ । रचनाकारकै सम्झनाअनुसार यो ने.सं. १०७२ तिर रचिएको हो र त्यस वेला उनले छन्द पनि सिकिसकेका थिएनन् ।

औपचारिक कविजीवन किशोरकालबाट सुरु भयो भन्नुपर्छ, जुन वेला उनी १५-१६ वर्षका थिए । त्यस वेलासम्म उनले अनुभूति र भावहरूलाई शब्द दिने क्रममा थुप्रै कविता कोरिसकेका थिए । संयोगवश उनले सर्वप्रथम वि.सं. २००८ मा आफ्नो कविता पाठ गर्ने मञ्च पाए । त्यो सन्दर्भ दुर्गालालको सम्झनाबाट टाढिइसकेको थियो । तर नेपाल भाषाका कथाकार गम्भीरमान मास्केले त्यो प्रसङ्ग कोट्याएपछि उनलाई पनि हल्का-हल्का सम्झना आयो । त्यस वेला थाय्मदु टोलमा डा. कलमप्रकाश मल्ल (आजका अङ्ग्रेजी, नेपालभाषाका विशिष्ट विद्वान् तथा प्राध्यापक) को घरको चोकमा मञ्च बनाइराखेको थियो । भरखर १६ वर्षमा टेकेका दुर्गालाल पनि त्यहाँ पुगेका थिए । साहित्य सम्मेलन हुँदैछ भन्ने कुरा उनले सुने । उनले त्यहाँको एक जना आयोजकसित आफूले पनि एउटा कविता वाचन गर्न पाउँछु कि भनी साग्रह गरे । आयोजकले खुसी भएर उनको आग्रह स्वीकारे । अहिले पनि दुर्गालाललाई भेट्दा त्यस वेलाका आयोजकमध्ये एक गम्भीरमान मास्के (नेपालभाषाका लेखक) भन्छन् : “त्यस वेला तिमीले हाम्रो सम्मेलनमा ‘मत’ (बत्ती) नामको कविता सुनाएका थियौ । साह्रै राम्रोसित सुनाएकोले आजसम्म पनि बिर्सनसकेको छैन ।”[३४]

किशोरवयका दुर्गालालले साहित्यको मञ्चमा पहिलोपटक उक्लेर साहित्यकारहरूका पङ्क्तिमा आफूलाई पनि विधिवत् उभ्याएको र आफूलाई साहित्यकारका रूपमा प्रस्तुत गरेको पहिलो सन्दर्भ हो यो । तर दुर्भाग्य, अहिले उनले यो सन्दर्भ नै बिर्सिसकेका छन् भने उनीसित त्यो कविता हुने त कुरै भएन । त्यसैले अरू प्रारम्भिक रचनाजस्तै उनको यो कविता पनि स्मृतिको चिहानमा गाडियो ।

उनका सुरुका कविता त्यस वेलाको हस्तलिखित पत्रिकाहरूमा प्रकाशित भएका थिए । ती पत्रिकामा दुर्गालालका कविता पढेर प्रभावित भई कवि केदारमान व्यथितले उनलाई घरमा बोलाएर कुरा पनि गरेका थिए ।

## २.१४ ‘ख्वबिलु’ उपनाम

त्यस वेला भाषाप्रेमी प्रेमबहादुर कंसाकारको घरमा बरोबर साहित्य गोष्ठीहरू भइरहन्थे। युवा पिंढीका लेखकहरूमध्ये कसैले निबन्ध, कसैले कविता पाठ गर्थे । किशोर दुर्गालाल पनि त्यस गोष्ठीमा कविता लिएर जान थाले । यसरी उनको बिस्तारै-बिस्तारै साहित्यकारहरूसँग परिचय बढ्न थाल्यो । उनका रचनाहरू राम्रा भएकाले उनीभन्दा जेठाबाठा साहित्यकारहरूले उनको प्रशंसा पनि गर्न थाले र उनलाई प्रोत्साहन पनि दिन थाले ।

---

[३४] शोधनायक दुर्गालालश्रेष्ठ र लेखक गम्भीरमान मास्केले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

यसरी कविता पाठ गर्न जाँदा मन्तव्य दिने क्रममा एकपल्ट प्रेमबहादुर कंसाकारले भनेः "दुर्गालालको कविता साह्रै मार्मिक छ । यो मानिस त 'ख्वबिलु' (रुन्चे) नै हो ।" त्यसपछि त्यो 'ख्वबिलु' भन्ने शब्द त्यहाँ उपस्थित सबैलाई यस्तो घत लाग्यो कि सबैले उनलाई 'ख्वबिलु' भनेर नै बोलाउन थाले । त्यो शब्दलाई दुर्गालाल आफैंले स्वीकार गरेको थिएन । तर पत्रिकामा कविता छाप्दा पनि उनको नामको पछाडि प्रेसका साथीहरूले 'ख्वबिलु' उपनाम जोडेर छापिदिन थाले । नाटकमा काम गर्दा पनि तुलमा लेख्दा होस् वा उद्घोषण गर्दा उनका साथीहरूले नै उनको नामसँगै 'ख्वबिलु' जोडिदिने गरे ।[३५] अझै पनि उनलाई दुर्गालाल भन्दा 'ख्वबिलु' भनेर चिन्नेहरू धेरै छन् ।

उनकै भनाइअनुसार भने, अरूले त्यति साह्रै रुचाएको त्यो उपनाम उनले त्यति स्वीकारेका छैनन् । उनले आफैं परिचय दिनुपर्दा कहिल्यै पनि 'ख्वबिलु' शब्दको प्रयोग गरेका छैनन् । उनले कहिल्यै पनि आफ्ना पुस्तकमा 'ख्वबिलु' नाम उल्लेख गरेनन् । तर जे भए पनि अरूले 'ख्वबिलु' भनेर छाप्दा त्यसको मौखिक वा लिखित प्रतिकार पनि गरेको भेटिंदैन । उनले नअँगालेको यो उपनाम वास्तवमा उनको नामभन्दा धेरै लोकप्रिय बनेको छ । अझै पनि नेवार समुदायमा धेरै मान्छेलाई दुर्गालाल भन्दाखेरि कुनै कविको नाम हो भनेर थाहा नहुन सक्छ, तर 'ख्वबिलु' भन्दा कवि भनेर चिनिहाल्छन् ।

## २.१५ समाजवादी विचारतिरको ढल्काइ

बाल्यकालमा गरिबीमा हुर्के तापनि उनले गरिबीको अनुभूति गरेका थिएनन् । तर युवाकालमा प्रवेश गर्दानगर्दै दुर्गालाललाई आफ्नो गरिबी र आर्थिक असमानता अनि त्यसको कारण भोग्नुपर्ने पीडा र अवहेलनाको ज्ञान हुन थालेको थियो । साथै उनी प्रतिभासम्पन्न कविका रूपमा स्थापित पनि हुँदै गइरहेकाले उनलाई वामपन्थी विचारधारातर्फ आकर्षित गराउनको लागि कम्युनिस्ट नेताहरूले उनलाई प्रभावित तुल्याउन खोजिरहेका थिए ।

त्यसमा एक क. शम्भूराम श्रेष्ठ पनि थिए । शम्भूराम उनको घरमा आवतजावत गर्न लागेका थिए । क्रान्तिका कुरा पनि सुनाउन थालेका थिए । दुर्गालाललाई अनुभव भयो कि उनले पनि अरूले जस्तै दुई छाक राम्ररी खान पाउनुपर्थ्यो, एक जोर राम्रो लगाउन पाउनुपर्थ्यो, उनको घरमा पनि घाम छिर्नुपर्थ्यो । उनले विचार गरे कि क्रान्ति अरूको लागि मात्र नभई सबभन्दा पहिला त आफ्नै लागि चाहिने कुरो रहेछ । त्यसैले उनी बिस्तारै प्रगतिशील साहित्य लेखनमा ढल्किँदै गए ।

---

[३५] शोधनायक दुर्गालाल श्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

त्यसैताक उनको भेटघाट अर्का कम्युनिस्ट नेता पुष्पलाल श्रेष्ठसँग पनि भएको थियो । किसान नेता सानुलाल महर्जन पनि दुर्गालालका साथी थिए । उनी सानुलालको घरमा आइरहन्थे । त्यस वेला पुष्पलाल श्रेष्ठ सानुलालको घरमा भूमिगत जीवन बिताइरहेका थिए । एक दिन पुष्पलालले द्वन्द्वात्मक भौतिकवादबारे पढाइरहेको वेला दुर्गालाल पनि पुगेका थिए । उनलाई त्यो सिद्धान्त साह्रै घत लाग्यो । त्यसपछि उनी वर्गप्रति सचेत पनि हुन थाले । साथै उनले वामपन्थी जोशका कविताहरू पनि लेख्न थाले । तर तिनमा जोश मात्र भएको र कलात्मकताको अभाव भएकोले पाठकको मन छुन नसकेको पनि दुर्गालालले चाँडै नै ठम्याए । त्यसपछि उनले जोशको साथसाथै प्रस्तुति कलात्मक हुनुपर्ने कुरा पनि अनुभव गरी त्यसै अनुरूप समाजवादी विचारधाराका रचनाहरू पस्किन थाले ।[३६]

## २.१६ क्रान्तिकारी मङ्गलाचरण

दुर्गालालको पहिलो शोषणविरुद्धको नाटक 'ग्राम्य जीवन' हो । त्यो प्रदर्शनको समय २००९ साल थियो जुन वेला दुर्गालालको उमेर १७ वर्षको हुँदो हो । खास त्यस वेला प्रगतिशीलताको लहर नै चलेको थियो, नेपालमा मात्र नभई विश्वमा नै । नेपालमा पनि त्यसवेला धेरै वामपन्थी नेताहरू भइसकेका थिए । युवाहरूमा पनि शोषणविरुद्ध चेतना जागृत भएको थियो । त्यस वेला मार्क्सवादी वा वामपन्थी सिद्धान्त भित्रैदेखि बुझेर प्रगतिशीलको बाटोमा लागेकाभन्दा पनि धनीगरिबमा भेदभाव हुनुहुँदैन, शोषण हुनुहुँदैन भन्ने धारणा आम युवाहरूमा पलाएको थियो । पहिलासम्म धनीहरूको शोषणलाई परम्परादेखि चलिआएको व्यवहार तथा कर्मको फलको रूपमा स्वाभाविक रूपमा लिइन्थ्यो भने त्यस वेला युवा पुस्तामा यस परम्पराप्रति भित्रभित्रै विद्रोहको भावना सल्केको थियो । मार्क्सवादले पनि समानताको कुरा उठाउने भएको हुँदा यसै सिद्धान्ततिर उनीहरूको झुकाउ बढेको थियो । नयाँनयाँ वैज्ञानिक सिद्धान्त र आविष्कारसित पनि जनमानस परिचित हुँदै गएकाले देवीदेवताप्रति परम्परादेखि चलिआएको विश्वासमा पनि परिवर्तन आएको थियो । मार्क्सवाद पनि देउता नमान्ने दर्शन भएकोले उनीहरूको आकर्षण स्वतः प्रगतिशीलतातर्फ बढ्दै गएको थियो ।

यस्तो वातावरण भइरहेको वेलामा दुर्गालालको प्रतिभाशाली कवि र नाटककारका रूपमा उदय भइरहेको थियो । वामपन्थी नेताहरूले पनि उनलाई आफ्नो सिद्धान्ततर्फ उन्मुख गराउन प्रयास गरेका थिए । एकातिर बाह्य वातावरण प्रगतिशीलमय थियो भने अर्कोतर्फ नेताहरूको उत्प्रेरणा उनले पाएका थिए । साथै बिस्तारै युवा अवस्थामा प्रवेश गर्दा उनी आफ्नो गरिबीसित पनि परिचित हुँदै गएका थिए । सबैतिरबाट अनुकूल वातावरण पाउँदा उनी प्रगतिशीलतातर्फ ढल्के र उनको कलम प्रेम र बिछोडको विषयबाट टाढिँदै अन्याय शोषणको विरुद्धमा प्रखर रूपमा चल्न

[३६] पूर्ववत् ।

थाल्यो । कतिपय अवस्थामा उनका रचनाहरूले सिधै वामपन्थी विचारधाराको वकालत पनि गर्न थाले ।

यसरी भर्खर-भर्खरै प्रगतिशीलता अँगाल्न थालेको वेला दुर्गाालालले 'ग्राम्य जीवन' नाटक लेखेका थिए । सुरुको जोश धेरै हुन्छ भनेझैं पक्का प्रगतिशील हुने क्रममा उनीहरूले नाटक सुरु गर्न अगाडि गाउने मङ्गलाचरणको परम्परा पनि तोड्न चाहे । मङ्गलाचरणमा कुनै देउताको आराधना गरिएको हुन्थ्यो, जुन देउता नमान्ने प्रगतिशील मान्यतासँग मेल खाँदैन । त्यस नाटकमा सङ्गीत दिने गणेशप्रसाद श्रेष्ठ थिए । किसान भएर खेल्ने एक जना साह्रै प्रगतिशील विचारधाराका थिए । जमीनदार भएर खेल्ने दुर्गालाल आफैं थिए भने डा. रत्नकमल वैद्य (हालका राजपरिषद् सदस्य) विद्यार्थी बनेर खेलेका थिए ।

त्यही बेलुका नाटक प्रदर्शन गर्नु थियो, त्यसैले बिहान अन्तिम पूर्वाभ्यास (grand rehearsal) गर्नुपर्ने थियो । बिहान राम्ररी उज्यालो पनि भएको थिएन, त्यही नाटक देखाउने डबलीको पछाडिको घरमा रत्नकमल वैद्य त 'मलाई अन्याय गऱ्यो' भन्दै विशब्दले चिच्याउँदै भित्तै भत्काउँलाझैं गरेर उफ्रन थाले । उनको मुख बाङ्गिँदै झन्डै कानसम्म पुग्न लागेको थियो । अनुहार हेर्दै डरलाग्दो देखिन्थ्यो । अनि अरूहरूले "खूब देउता छैन, देउता छैन भन्थ्यो । अब देख्यौ हैन ?" भन्दै आँखा तर्न थाले । अर्को नाटककार गोविन्द 'चिकंमू'ले प्रणाम भन्दै धूपबत्ती बाल्न थाले । तर रत्नकमल वैद्यले त बलेका धूपबत्ती चपाउँदै निल्न थाले । त्यो देखेर गणेशप्रसाद रुन थाले । कमिजको बाहुलाले आँसु र सिँगान पुछ्दै "मङ्गलाचरण राख्ने भए म यो नाटकमा बसें, नत्र म यहींबाट हिँडें" भन्नथाले । सबै दुर्गालालको विराधमा उत्रे । उनलाई के गर्नु के नगर्नु भयो । उनले पनि 'ल राख्ने भए राख्ने' भने, अनि मङ्गलाचरणको लागि गणेशप्रसादले सङ्गीत निकाल्न लागे । उनले गीत भर्न लागे । उनले मङ्गलाचरण त लेखे, तर कुनै देउताको आराधनामा होइन । बरु आफ्नै विश्वासको गीत लेखे । त्यो मङ्गलाचरण पछिसम्म पनि लोकप्रिय प्रगतिशील गीतको रूपमा रह्यो । त्यसको बोल (स्थायी) यस प्रकार छ :

झी ज्यामि ज्यापु सारा
शोषित व सर्वहारा
सो देश झीगु ख्युंगु
या लालस्वर्ग प्यारा

(अर्थात्, हामी किसान मजदूर शोषित र सर्वहारा । यो देशको अँध्यारो वा लालस्वर्ग प्यारा ।)

नाटक मण्डलीका सबैजना नासःद्यः (नटराज)को अगाडि घुँडा टेकेर स्तुतिझैं यो गीत सामूहिक रूपमा उच्चारण गर्न लागे । यसरी सबैको चित्त पनि बुझ्यो र दुर्गालाललाई आफ्नो विश्वासबाट पछि हट्नु पनि परेन ।[३७]

## २.१७ घुँगुरा बाँधेर नाच्ने देवी

सो नाटक देखाउने क्रममा त्यस्तो  घटना रत्नकमललाई मात्र नभएर प्रगतिशीलको भूमिका गर्ने ज्यापूलाई पनि त्यस्तै भयो । त्यतिले मात्र नपुगेर फेरि नाटकको प्रदर्शन गर्दागर्दै अर्को पनि अनौठो घटना घट्यो ।

धेरै दिनको लगातार नाटक प्रदर्शनपछि त्यो एक दिन शायद विश्रामको दिन थियो । भृगुराम श्रेष्ठ नाटकमा नायक हुने मान्छे त भइ नै हाल्यो साथै उनी नाटक सकिएपछि धिन्तांमैं[३८] भएर नाच्ने पनि गर्थे । यस्तो गर्दा उनले दर्शकको माझमा रुमाल फ्याँक्थे र दर्शकले केही पैसा पोका पारेर फर्काउँथे । यसरी केही पैसा जम्मा हुन्थ्यो र त्यो पैसाले सबैले असनमा आलोमाछा किनेर पकाएर खान्थे । त्यो दिन पनि त्यस्तै माछा पकाएर खाइसकेर दुर्गालाल र भृगुराम आराम गर्दै बसिरहेका थिए । उनीहरूको मण्डलीकै एकजना साथी प्रद्युम्नपतिराज पूजाकोठामा बसेर तबला बजाउँदै थिए । नौलो तालमा तबला बजाएको सुनेर उनीहरू दुवैजना ‘ओहो, आज त यसले नयाँ तालले तबला बजायो’ भनेर कुरा गर्दैथिए । उनीहरूले तबलाकै तालमा धुँगुरा बजेको आवाज पनि सुने । ‘ओहो धुँगुरा बाँधेर पनि तबला बजाउन हुने रहेछ’ भनेर पनि अनौठो मान्दै उनीहरूले कुरा गरे । त्यसपछि त धुँगुरा र तबला दुवैको जोडकातोड प्रतिश्पर्धा हुने गरी थरीथरीको तालमा आवाज आयो । त्यसपछि उनीहरूले ‘मां ! मां !!’ भनी चिच्याएको सुने र हेर्न जाँदा त तबला बजाउने मान्छेको जीउ भञ्याङको बीचमा झरेर बेहोस भइरहेको थियो । सबै जना आत्तिए । कसैले पङ्खा हम्काए, कसैले देउताको पूजा गरे। पछि होश आउँदा प्रद्युम्नले बिस्तारै भएको कुरा सुनाए: *“म सधैंझैं तबला बजाउँदै थिएँ । कोही अगाडि आयो । उसको अनुहार देखिँदैनथ्यो । मात्रै खुट्टा देखिन्थ्यो । छमछम गर्दै आयो । उसले तबलासँग प्रतिश्पर्धा गर्दै धुँगुरा बजाउँदै नाच्न थाल्यो । मैले पनि प्रतिश्पर्धामा नै तबला बजाउन थालें । केही बेरको प्रतिश्पर्धापछि मैले उससँग नसकेको भान भयो र ऊ गिज्याउँदै हाँसेको भान भयो । त्यसपछि मलाई डर लाग्यो र म बेहोश भएँ ।”*

त्यो घुँगुराको आवाज दुर्गालालले पनि सुनेका थिए, भृगुरामले पनि सुनेका थिए र अरूले पनि । त्यो घटना सम्झँदा दुर्गालालको कानमा अझै पनि त्यो धुँगुराको आवाज गुञ्जिन्छ । यो घटनापछि त सबैले दुर्गालाल र उनका प्रगतिशील मित्रमण्डलीलाई ‘खूब देउता छैन भन्थ्यौ हैन? कस्तो लाग्यो त ?” भनी गिज्याउने बाटो खुल्यो ।

---

[३७] पूर्ववत् ।

[३८] धिन्तामुनी : मादलको तालमा एक प्रकारको नाच नाच्ने व्यक्ति ।

दुर्गालालले त्यो घटना भएको होइन त भन्न सकेका छैनन् । यति हुँदा पनि उनलाई त्यस्तो अज्ञात शक्तिमा विश्वास भएन । तर त्यसपछि त्यस्तो शक्ति छँदैछैन भनेर खण्डन गर्दै हिँड्ने अवस्था पनि उनमा भएन ।[२९]

## २.१८ चुनावी गीतको आशु रचना

एकपटकको कुरा हो । कमरेड पुष्पलाल श्रेष्ठ चुनावमा उम्मेदवार भएका थिए । बाटोमा दुर्गालाल श्रेष्ठलाई भेटाएर घर लिएर गए । त्यहाँ मानिसहरूको जमघट भइरहेको थियो । उनले दुर्गालाललाई सबैको अगाडि परिचय गराउँदै भने "यो आशुकवि हो आशुकवि, यो मान्छेले यहीँकोयहीँ कविता लेख्न सक्छ" भने । त्यस वेला दुर्गालालले भुवादार खास्टो पनि ओढेका थिए । पहिरनले पनि कविजस्तो देखिन्थ्यो । तर दुर्गालाललाई 'अब के भन्ने हो, सबैको अगाडि कविता लेख्न लगाउने पो हो कि, लेख्न नसके के गर्नेहोला' भन्ने चिन्ता लागिरहेको थियो, अप्ठ्यारो अनुभव भइरहेको थियो । त्यसपछि उनलाई पुष्पलालले आफूहरू चुनावको तयारीमा लागिरहेको बताए र चुनाव प्रचारको लागि गीत लेखिदिन भने ।

अप्ठ्यारो महसूस गर्दै उनले गीत लेख्न सुरु गरे र गीत पनि छिनभरमै तयार भयो, जसको अगाडिको भाग यसप्रकारको छ :

हे महान देशया छ प्राण नौजवान
ईं व कःनिया निशान थ्व
राष्ट्रयागु दिव्यदीप खः
छंगु शान नौजवान खः चिकं समान
देशया दँ प्राण[३०]

(अर्थात्, हे महान् देशको तिमी प्राण नौजवान । हँसिया र मकैको निशान[३१] यो राष्ट्रको दिव्य दीप हो । तिम्रो शान नौजवान हो तेल समान, देशको उठ प्राण ।)

त्यसपछि सङ्गीतकारहरू पनि जम्मा भए गायकहरू पनि जम्मा भए । तिनमा प्रेमध्वज र नारायणगोपालजस्ता गायकहरू पनि थिए । त्यहीँ नै सङ्गीत भरियो र गाउने

[२९] शोधनायक दुर्गालालश्रेष्ठ र भृगुराम श्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

[३०] अप्रकाशित, कवि दुर्गालाल स्वयम्को सम्झनाअनुसार ।

[३१] त्यस वेला पुष्पलाल श्रेष्ठको नेपाल कम्युनिस्ट पार्टीको चुनाव चिन्ह हँसिया र मकै थियो ।

अभ्यास पनि गरियो । पुष्पलालको चुनावमा यो गीत टोलटोल र गाउँगाउँमा बजेको थियो ।

## २.१९ कलेज शिक्षा

प्रवेशिका उतीर्ण भएपछि उनी पद्मोदयबाट छाउनी नजिकको दरबार कलेज ( हालको महेन्द्ररत्न क्याम्पस) पुगे । त्यो कलेज भवन त्यस वेला खेतको माझ पर्थ्यो । त्यस वेलासम्म उनमा युवाबैंसको मातले पनि छोइसकेको थियो जुन कक्षाकोठामा उनीहरू पढ्थे, त्यसको झ्यालैबाट खेत भेटिन्थ्यो । खेतमा आलु रोप्न आउने एउटी किसानबाला थिई । जोसँग पनि सहजै घुलमिल हुने स्वभावका दुर्गालालको त्यस कृषिबालासँग सजिलै बोलीचाली हुन थाल्यो । बोलीचालीबाट थालिएको साइनो बिस्तारै घनिष्ठ हुँदै गयो । घनिष्ठ हुँदै उनी कलेजको एकजना मिल्ने साथीसँग ज्यापुनीको खेतमा बनाइएको छाप्रोसम्मन् पनि पुग्ने भए । त्यो ज्यापुनीले उनीहरूलाई जाँड ख्वाउँथी । पैसा तिरेर खाने ख्वाउने त त्यो थिएन, तर सित्तैंमा खान हुँदैन भनेर उनीहरूले सुका मोहर जाँड राख्ने भाँडोमा सुटुक्क खसालेर आउँथे । त्यसरी उनी कक्षामा नबसीकन साथीसँग जाँड खान जाने भए । त्यसै पनि त्यस वेलासम्म पढाइमा खासै उनको मन लाग्न छोडिसेकेको थियो । बरु ती ज्यापुनी युवतीलाई सम्झेर कविता लेख्ने गरेका थिए । 'थौं वइला कन्हे वइला' (२०११) भन्ने साह्रै लोकप्रिय गीत त्यसैताक उनले रचेका थिए ।[३२]

त्यो ठाउँठाउँमा भ्वाङ परेको छाप्रोसँगको घनिष्ठताले उनलाई धेरै फाइदा दियो । त्यहीँबाट उनले किसानको जीवन नजिकबाट नियाल्ने मौका पाए । किसानहरूले कतिको मिहिनेत-पसीना गर्नुपर्दो रहेछ र अझै फेरि कसरी जग्गाधनीको खेलौना भइबाँच्नु पर्दोरहेछ भन्ने सामाजिक वास्तविकता उनले त्यहीँबाट प्रत्यक्ष देखे । त्यसै गरी किसानको गरिबी पनि नजिकबाट हेर्ने मौका पाए । गरिबलाई चाड आउँदा पनि चाड मनाउने पैसा नभएर कतिको चिन्ता र विवशताबीच बाँच्नु पर्दोरहेछ भन्ने यथार्थ उनले त्यहीँबाट देखे । खेतमा कुन वेला के फल्छ, कुन वेला खेत कस्तो देखिन्छ त्यहींबाट उनले थाहा पाए । उनले त्यही छाप्रोमा बसेर एउटा युगल गीत लेखे : 'न्ह्योखा हाल अयनं न्ह्यो जि मवःनि प्राण' अर्थात् 'बिहानीको भाले बासिसक्यो तैपनि मलाई निद्रा परेको छैन प्राण' ।[३३] यो बिलौना किसान स्वास्नीले आफ्नो लोग्नेलाई घोडेजात्राको अगाडि गरिरहेकी हुन्छे किनभने चाड मनाउन उनीहरूसँग पैसा हुँदैन । आफू त नखाउँला तर लालाबालाले खान माग्दा के दिने, पाहुना आउँदा के ख्वाउने[३४]

---

[३२] शोधनायक दुर्गालालश्रेष्ठ र भृगुराम श्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

[३३] शोधनायक दुर्गालाल श्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

[३४] घोडेजात्राको दिन नेवारहरू 'पाहाँचह्रे' चाड मनाउँछन् । सो दिन घरमा आउने पाहुनारूलाई विशेष परिकारहरूसहित ख्वाउनुपर्ने नेवारी परम्परा छ ।

भनेर दुई लोग्नेस्वास्नीबीच गरिएको मार्मिक कुराकानी नै यो गीतको युगल संवाद हो । यो गीत लुँबुँ- वहबुँ गीतसङग्रहमा सङ्कलित छ । 'लुँबुँ, वहबुँ' भन्ने शब्द पनि खेतीकिसानीसँगै सम्बन्धित शब्द हुन् । 'लुँबुँ'को शाब्दिक अर्थ सुनको फूल हो भने 'वहबुँ' भनेको चाँदीको फूल हो । तोरीको पहेँलो फूललाई 'लुँबुँ' र मूलाको बोटमा फुल्ने सेतो फूललाई 'वहबुँ' भनिन्छ । तोरीको बोटमा फूल फुल्दा खेतै सुनजस्तो देखिने र मूलाको बोटमा फूल फुल्दा खेतै सेताम्य भएर चाँदीजस्तो देखिनेहुन्छ । त्यसैले नै नेपालभाषामा तोरीको फूललाई 'लुँबुँ' र मूलाको फूललाई 'वहबुँ' भनिएको हुनुपर्छ । यस्तो कुरा उनले त्यही खेतबीचको छाप्रो र कृषिबालासँगको नजिक्याइबाट सिकेका हुन् । त्यसैबाट प्रभावित भएर उनले गीतसङग्रहको नाम लुँबुँ-वहबुँ राखे । त्यसको 'लुँबुँ' खण्ड अर्थात् लोकगीत खण्डमा कृषिसँग सम्बन्धित धेरै गीतहरू छन् ।

एकातिर कविता र डबली-नाटकको धुन अर्कोतिर बैंस र जाँडको नशा चढेपछि त पढाइ त्यसैत्यसै नै छुटेर गयो । उनले आइ.ए. को फर्स्ट टर्मिनलसम्म दिए होलान् (उनी स्वयम्लाई पनि यकिन भएन), त्यसपछिको पढाइ छुट्यो ।

## २.२० विवाहको प्रसङ्ग

दुर्गालालको विवाह २०१३ सालमा भएको हो । उनको विवाहको प्रसङ्ग पनि अलि फरक खालको नै छ र रमाइलो पनि । दुर्गालालकी धर्मपत्नी पूर्णदेवी श्रेष्ठ उनकै किशोरकालका साथी दर्शनदास श्रेष्ठकी बहिनी हुन् । दर्शनदास आफैं पनि दुर्गालालकै नाटक मण्डलीका सदस्य थिए। उनी गीत लेख्थे, लय हाल्थे र गाउँथे पनि । वासु पासाले लेखेको नेपालभाषाको लोकप्रिय गीत 'वा माया वा वा' दर्शनदासकै लय हो ।[३५] उनीहरू नजिकका साथी थिए । त्यसैले दुर्गालालको पूर्णदेवीसँग चिनजान पहिल्यैदेखि थियो । एक अर्काप्रति केही आकर्षण पनि थियो । केही हेराहेर पनि भएको थियो, तर प्रेम भनेर निक्कै नजिकिएर हेलमेल भएको चाहिं थिएन । भृगुराम श्रेष्ठ र दर्शनदासको घर आमुन्नेसामुन्ने थियो । त्यसैले दुर्गालाल भृगुरामको घरमा गएर पूर्णदेवीलाई हेर्ने गर्थे । भृगुराम उनलाई जिस्क्याइरहन्थे । किशोरकालमा दौंतरीहरूको प्रभाव निक्कै हुन्छ । दुर्गालालकै भनाइमा त्यो प्रेम अलि गाढिएको पनि भृगुरामले जिस्क्याइरहनाले नै हो कि ?

दर्शनदास दुर्गालालभन्दा अलि हुनेखाने परिवारका थिए । त्यसैले उनको घरमा कहिले ममः त कहिले के त्यस्तै पकाएर साथीभाइ जम्मा गरेर खाने चलन थियो । एक दिन दुर्गालाल दर्शनदासको कोठामा एक्लै बसिरहेका थिए । पूर्णदेवी आएर 'अब हामीबीच प्रेम भयो, मलाई माग्न पठाए बेस होला' भनेर भनिन् ।

---

[३५] यो लोकलयमा आधारित भएकोले कतिपयले लोकलय नै भनेका छन्, तर यो सङ्गीतकार दर्शनदासले सिर्जेको लय हो ।

त्यो कुरा दुर्गालालको मनमा दिनरात खेल्न थाल्यो । एक दिन दुई दिन भन्दै समय बित्दै गयो । काम र आम्दानी केही नभएकोले गर्दा उनले यो कुरा घरमा उठाउने साहस नै गर्न सकेनन् । उनले पूर्णदेवीको घरमा विवाहको कुरा राख्ने आँट नै गर्न सकेनन् । पूर्णदेवीलाई अन्तैबाट माग्न आयो । त्यसै बीच एकपल्टको भेटमा पूर्णदेवीले दुर्गालाललाई सोध्दा उनले माग्न आएकै ठाउँमा जान भने । पूर्णदेवीले माग्न पठाउँछ कि भनेर निक्कै पर्खेकी पनि थिइन् । तर धेरै समय बितेपछि उनको विवाह अन्तै भयो । त्यसको भोजमा उनी आफैं पनि गएका थिए र पनि दाइजो दिएका थिए । तर बिवाहपछि माइत आएकी उनी फेरि दुलहाको घर फर्किनन् । दुर्गालालले भृगुरामबाट के थाहा पाए भने अब उनले दुलहाको घर नजाने नै निर्णय गरिन् । त्यसपछि उनका आत्मीय साथीहरूले दुर्गालाललाई 'तिमीलाई मन पराएरै उसले नजाने निर्णय गरेकी हो । तिमीले उसलाई स्वीकार्नुपर्छ' भने । त्यसपछि दुर्गालालले उनलाई ल्याउनै पऱ्यो ।

यस घटनाले दर्शनदास निक्कै रिसाएका थिए । तर पछि कुरा बुझ्दै गएपछि पहिलाभन्दा झन मिल्ने साथी भए ।[३६]

## २.२१ रोजगारी

प्रवेशिका उत्तीर्ण नहुँदै पनि दुर्गालालले घरमै सानासाना विद्यार्थीहरूलाई पढाउने गरेका थिए । उनले २०११ सालतिर उनी आफैंले आफ्नै टोलमा बालकेतन प्राथमिक विद्यालय स्थापना गरी अध्यापन सुरु गरेका थिए । त्यसपछि २०१८ सालदेखि उनले क्षेत्रपाटीको कन्यामन्दिर माध्यमिक विद्यालयमा पढाउन थाले । त्यस विद्यालयमा शिक्षणको लागि लगिदिने काम विद्वान् प्रा. कमलप्रकाश मल्लले गरेका थिए । उनले त्यहाँ पढाउने मुख्य विषय कक्षा ९ र १० को लागि नेपालभाषा थियो । साथै उनले माध्यमिक तहमा नेपाली पनि पढाउने गर्थे । उनले कक्षा ६ सम्म अङ्ग्रेजी पनि पढाउँथे । वेलावेला नेपालभाषा र नेपाली विषयमा ट्युशन पनि पढाउँथे । २०१८ देखि २०३९ सालसम्म जीवनको २२ वर्ष उनले कन्या मन्दिरमा नै जागिरे शिक्षक भएर बिताएका थिए ।

सोही अवधिमा उनले बिहान-साँझ धेरै विद्यालय र कलेजहरूमा पनि अध्यापन गरे । विद्यालयहरूमा जुद्धोदयमा चलेको रात्री विद्यालय, बालकुमारी, पद्मोदय र सिद्धार्थ बनस्थली थिए भने कलेजमा महेन्द्ररत्न र पब्लिक यूथ क्याम्पस थिए । तिनमा पनि उनले पढाउने विषय नेपालभाषा र नेपाली नै थिए । संक्षेपमा भन्दा उनले रोजगारीको लागि जीवनमा शिक्षण नै एउटै मात्र पेशा अपनाएका छन् ।[३७]

---

[३६] शोधनायक दुर्गालालश्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

[३७] पूर्ववत् ।

हुन त उनी शिक्षाका आधुनिक वैज्ञानिक तरीकासित परिचित छैनन् । तर पनि उनलाई पढाइको परम्परागत घोकन्ते चलन मन पर्दैन । गऱ्हुङ्गो विषयलाई पनि आफूले जानेजसो सरल ढङ्गमा पढाउँथे । विशेष गरी कविताहरूमा लय हाली पढाउँथे । साथै उनका धेरै बालकविताहरू अध्यापनकै सिलसिलामा बालबालिकासँगै बसी रचिएका हुन् । समय, ऋतु अनुसारका कविता रच्दै बालबालिकालाई गाउन सिकाउँथे । हाल अधबैंसे भइसकेका उनका विद्यार्थीहरू अहिले पनि उनको पढाइको तरिका बिर्सनसकेका छैनन् ।[३८] यसको एउटा उदाहरण गीतकार किरण प्रधान अर्थात् 'पल्पसा'लाई लिनसकिन्छ । 'पल्पसा' उनका विद्यार्थी हुन् र उनले हालै प्रकाशित आफ्नो कृति परिवेश र पातहरूमा (गीत सङग्रह) आफ्नो गुरु दुर्गालालबारे यसरी लेखेका छन् :

*'... कवि तथा वरिष्ठ गीतकार दुर्गालाल श्रेष्ठको प्रेरणाले मलाई गीत लेखनको क्षेत्रमा संलग्न हुन अभिप्रेरित गरिरहन्छ । वहाँ मेरो स्कूलको असल गुरुमात्र नभएर प्रेरक पनि हुनुहुन्थ्यो ।'*[३९]

दुर्गालालका धेरै विद्यार्थीहरू भेट्दा उनीहरूको मस्तिष्कपटलमा दुर्गालाल एक रमाइला र अनौठा शिक्षकका रूपमा रहिरहेका भेटिन्छन् । त्यसैले उनलाई एक सफल शिक्षक मान्न सकिन्छ ।

## २.२२ धेरै पढेपछि आमा छोडिने हो कि ?

उनले प्रमाणपत्र तह किन पूरा गरेनन् यस सन्दर्भमा पनि एउटा रोचक प्रसङ्ग छ । केदारनाथ न्यौपाने (जो कन्यामन्दिर माध्यमिक विद्यालयका प्रधानाध्यापक र दुर्गालालका हितचिन्तक थिए) ले एक दिन उनको घर आएर भने कि नयाँ शिक्षा लागु हुँदै छ । नयाँ शिक्षा लागु भएपछि दुर्गालालको योग्यताले प्राथमिक तहभन्दा माथि पढाउन नपाइने भयो । त्यसैले उनले दुर्गालाललाई प्रमाणपत्र तहको परीक्षा दिन सल्लाह दिए । उनले केही किताब पनि ल्याएका थिए । उनको भनाइमा त्यति किताब पढेपछि परीक्षा उतीर्ण भइहालिन्छ । दुर्गालालले परीक्षाको फारम पनि भरेका थिए र परीक्षाको तयारीमा ती किताबका अतिरिक्त अन्य पुस्तक पनि पढेका थिए । परीक्षा दिएको भए उनी उत्तीर्ण पनि हुन्थे होलान् । तर यसैबीच उनको चोकमा एउटा घटना घट्यो जसको कारण सबै तयारी गरिसकेको परीक्षा पनि दुर्गालालले दिएनन् ।

दुर्गालालले बाल्यकालमा जुन साथीको लागि झगडा गर्न गएका थिए र जसको कारण उनले चारचारजनाको कुटाइ खानुपरेको थियो, एक दिन बिहान सखारै त्यसैकी वृद्ध आमा झ्यालबाट आधा जीउ निकाल्दै 'मेरो छोरा पोइल गयो, मेरो छोरा पोइल गयो' भन्दै रुँदै कराउँदैथिई । खास कुरो के भने दुर्गालालको त्यो साथी, जो त्यस

---

[३८] शोधनायक दुर्गालाल श्रेष्ठका केही विद्यार्थीहरूसँगको कुराकानीअनुसार ।

[३९] पल्पसा, परिवेश र पातहरू, (काठमाडौंः राही, रुबन, सबिन, २०६१), मन्तव्य भाग ।

वृद्धाको ठूलो छोरो थियो, विवाहको केही समयपछि श्रीमतीको लहैलहैमा घरबाट बाहिर भिन्नै बस्न गएको थियो । वृद्धा विधवा साह्रै गरिब थिई । उसका दुई सन्तान थिए । ठूलो छोरालाई अनेक दुःख गरी पढाएकी थिई । कान्छो छोराले पनि आफू नपढी छापाखानामा कम्पोजिटरको काम गरी दाजुको पढाइलाई मद्दत गरेको थियो । आमा पनि भाइ पनि उसले पढेकैमा गर्व गर्थे र आफ्नो पसीना उसको पढाइको लागि अर्पेका थिए । उसले राम्रैसँग पढ्यो र विज्ञानमा स्नातकोत्तर पनि गऱ्यो । त्यस वेलाको लागि त्यो निकै नै ठूलो योग्यता थियो । धेरै पढेपछि मानिसमा ज्ञान आउनु पर्ने हो, तर त्यसको विपरीत त्यो मान्छे बैगुनी र स्वार्थी भएर निस्क्यो ।

यस घटनाले संवेदनशील दुर्गालाललाई भित्रैसम्म नराम्ररी छोयो । उनलाई लाग्यो धेरै पढेपछि मान्छेले आमालाई नै छोड्ने रहेछ भने त्यस्तो शिक्षा ग्रहण नै किन गर्ने । कतै आफूले पनि पढेर जन्मदातालाई छोड्ने त होइन ? यसै विचारले उनले जागिर जेसुकै होस् मतलब नराखी पढ्न ठ्याम्मै छाडिदिए र परीक्षा पनि नदिने निर्णय गरे ।[४०]

## २.२३ भूमिगत भएका दिनहरू

नेपालभाषाका लेखकहरू प्रायः भाषाआन्दोलनका प्रणेता तथा कार्यकर्ता हुन्छन् । दुर्गालाल पनि गीत, कविता, नाटक लेखेर तथा आन्दोलनमा भाग लिएर भाषिक अधिकारको सङ्घर्षमा लागेका थिए । भाषिक आन्दोलनको सिलसिलामा २०१८ सालमा व्यापक धरपकड भएको थियो । आन्दोलनकै सिलसिलामा उनले दिल्लीबजारको पद्मकन्या हाइस्कूलमा एउटा कविता सुनाएका थिए, जसका केही हरफ त्यस वेलाको प्रशासनले आपत्तिजनक ठहऱ्याएको थियो । त्यस वेला प्रशासनले हितकरवीरसिंह र सूर्यबहादुर पिवाहरूलाई समातेर थुन्यो । उनलाई पनि पक्रने ठूलै कोसिस गरेको थियो । तर उनी छलेर साँखुको पश्चिमतिरको मनमती नदीको छेउमा रहेको चुगाउँमा एक महिनासम्म बसेका थिए । (यस गाउँमा बस्दा उनले 'चुगां' शीर्षकमै एउटा कविता पनि रचेको पाइन्छ ।[४१]

त्यस्तो अनकन्टार गाउँमा उनले एक महिनासम्म भूमिगत जीवन निर्वाह गरे । दिनभरि एक्लै कोठामा बस्न धेरै गाह्रो हुन्थ्यो । त्यसैले उनी नदी किनार घुम्न जान्थे । एकदिन नदीकिनारमा घुमिरहेको वेला उनले एउटा ढलेको रूखको गिँडुल्को देखे । हेर्दाहेर्दै उनी त्यसै रूखको खोक्रोमा तादात्म्य हुनपुगे र उनले लेखे 'सिमाख्वंया सः' (गिँडुल्कोको आवाज) भन्ने कविता[४२] ।

---

[४०] शोधनायक दुर्गालालश्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

[४१] दुर्गालाल श्रेष्ठ, 'चुगां', जि स्वयम्भू त्वाथः (काठमाडौँः सुमन-सुचिता-सरोज, ने.सं. ११०६), पृष्ठ -७ ।

[४२] दुर्गालाल श्रेष्ठ, 'सिमाखोंया सः' जि स्वयम्भू त्वाथः, पूर्ववत्, पृष्ठ ३-४ ।

त्यस कवितामा उनी आफैं रूखको गिँडुल्को भई चराचुरुङ्गीहरूसित यस्तो भावमा बोलेका छन् – 'ए, चराचुरुङ्गी, पुतली, तिमीहरू किन रोएको ? हाम्रो कुलमा त कसैको दुःखमा कोही रुने चलन नै छैन । राम्रो हुन्जेल सबै आफ्ना हुन्छन्, बिग्रेपछि आफ्ना पनि पराया हुन्छन् । आज मेरो यस्तो अवस्था हुनुको कारण मैले धेरै अग्लो हुँदै आकाश नै छिचोल्न खोजें रे । त्यसैको सजाँयस्वरूप मलाई ढालियो र म खोक्रो भई बाँच्नुपरेको छ । मेरो यो हालतको जिम्मेवार अरू कोही नभई मलाई काट्न सहयोग गर्ने मेरो आफ्नै दाइ वा भनौं बन्चरोको बिँड हो, किनकि त्यो काठकै बनेको हुन्छ । त्यसकै सहयोगले बन्चरोले रूख ढाल्न सक्यो । त्यसैले मलाई बन्चरोसँगभन्दा पनि त्यसको बींडसँग धेरै चित्त दुखेको छ ।' वास्तवमा त्यस वेला प्रशासनलाई पोल लगाइदिने सरकारको गुप्तचर नभई उनीहरूकै समूहको एकजना वरिष्ठ कवि थिए (जो पछि मन्त्री पनि बने) । उनको कारण नेपालभाषाका धेरैजना कार्यकर्ता जेल परे, कतिले उनले जस्तै भागीभागी एकलासका दिन गुजार्नुपऱ्यो ।

उनले पछि २०३८ सालको शिक्षक आन्दोलनमा भाग लिएको कारण पनि चालीस दिन जति भूमिगत हुनुपरेको थियो । त्यस वेला उनी पचलीस्थित हर्षमुनि बज्राचार्यको घरमा लुकेर बसेका थिए । उनी कन्यामन्दिर माध्यमिक विद्यालयको प्रतिनिधि भएर शिक्षक आन्दोलनमा लागेका थिए ।[४३]

## २.२४ प्रशासनको कैंचीको सामना

उनको क्रान्तिकारी आगोले भरिएका प्रगतिशील गीतहरूको पहिलो सङ्ग्रह 'सर्गःसिबे नं धरती नमिं ग्वः' (आकाशभन्दा धरती राँकिएको छ) हो, जुन २०२५ सालमा प्रकाशित भएको थियो । तर यसमा २०१२ सालदेखिका गीतहरू सङ्कलित छन् । यसमा भएका केही गीतहरूको कारण यो पुस्तक जफत पनि भएको थियो । सो कृतिमा भएका केही हरफहरू राजनीतिक रूपमा आपत्तिजनक भएको ठहर गरी तत्कालीन मेजिस्ट्रेटले उनलाई पक्रेर पनि लगेको थियो । पछि दयावीरसिंह कंसाकार मेजिस्ट्रेट कार्यालय गई आपत्तिजनक भनिएका हरफ च्यात्नुपर्ने सहमतिमा उनलाई छुटाएर ल्याएका थिए । यो पुस्तक आपत्तिजनक ठहरिएका चार पृष्ठहरू च्याती बजारमा ल्याइएको थियो । त्यस पुस्तकका प्रगतिशील गीतहरू धेरै पछिसम्म पनि लोकप्रिय भई सम्मेलनहरूमा गाउने गरिएको थियो ।

शिक्षकआन्दोलन, भाषाआन्दोलन, जनआन्दोलन आदिमा विभिन्न पटक उनी पक्राउमा परेका छन् । तर उनले कहिल्यै थानामा रात काटेका छैनन् । बरु कुनैकुनै वेला मध्यरातमा थानाबाट छुटेर फर्केको अनुभव उनीसँग छ । उनकै शब्दमा भन्ने हो भने, 'मैले (थानामा) रात काट्ने सौभाग्य पाएको छैन ।'[४४]

---

[४३] शोधनायक दुर्गालालश्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

[४४] पूर्ववत् ।

## २.२५ गृहनिर्माण

कविको हालको घर, जुन ठमेलमा छ, को निर्माण सम्भव हुनुको पछाडि एउटै व्यक्तिको हात छ । उनी हुन् दुर्गालालका अति हितचिन्तक केदारनाथ न्यौपाने । त्यसैले उनलाई अझै पनि बिहानबिहान घरको पूर्वको झ्याल खोल्दा त्यहाँबाट सूर्य होइन केदारनाथ न्यौपाने उदाइरहेको भान हुन्छ ।

त्यो घरको निर्माणमा एउटा मर्मस्पर्शी प्रसङ्ग छ । एक दिन केदारनाथ न्यौपाने दुर्गालालको न्हैकंतल्ला स्थित घरमा आएका थिए । घरको ढोका होचो भन्ने प्रसङ्ग त पहिलो परिच्छेदमा गइ नै सकेको छ । घरमा आउँदा त उनी निहुरिएरै आएका थिए । तर फर्किंदा, शायद कुरा गर्दै गरेकोले पनि होला, निहुरिन बिर्सेछन् वा निहुरिन नपुगेको हो, उनको टाउको ढोकामा बेस्कन ठोकिएछ । चोट त टाउकोमा लागेको थियो, तर दुख्यो मनमा । उनलाई लाग्यो, 'अहो, यत्रो कविको घर यस्तो सानो, अँध्यारो र होचो ?' उनले मनमनै केही गर्नुपर्ने सोचे ।

अर्को दिन दुर्गालाल सधैंझैं विद्यालय जाँदा केदारनाथले घर बनाउन केही रकमको लागि सञ्चालक समितिको नाममा एउटा निवेदन दिन भने । दुर्गालालले पत्याउन सकेनन् र आँट पनि गर्न सकेका थिएनन् ।  तर उनले 'तपाईंले निवेदन मात्र दिनुस् । बाँकी काम म गरिदिइहाल्छु' भने । दुर्गालालले नेपालीमा निवेदन लेखेर दिए । उनले रिसाउँदै 'तपाईं नेपालभाषाको कवि भएर पनि आफ्नो भाषामा निवेदन किन दिनुहुन्न' भन्दै निवेदन फिर्ता गरे । त्यसपछि उनले नेपालभाषामा निवेदन दिए । केही दिनमा निवेदन पनि स्वीकृत भयो । उनले सोही पैसाबाट ठमेलमा नरसिंह राणाको जग्गा किने र घर बनाउन शुरु पनि गरे । समयको कुरा गर्दा उनले २०२६ मा जग्गा किनेका थिए र लगतै २०२७ मा गृहनिर्माण शुरु गरेका थिए ।

जग्गा किनेर घर बनाउँदा पनि उनलाई एउटा कुराले चैन दिएन । जग्गा किनेको लगत्तै जग्गामा मुद्दा पऱ्यो । नरसिंह राणाकी बहिनीले जग्गाको दाबी गर्दै मुद्दा हालिन्  । खास कुरा के भने त्यस वेला राणाहरूको जग्गामा लालपुर्जा हुँदैनथ्यो । त्यसैले किनेको प्रमाण पुगेन । मुद्दामा हारे उनको सर्वस्व मात्र होइन रिन लिएको पैसा समेत भष्म हुन्थ्यो ।

उनले तीन वर्षसम्म लगातार अदालतको चउरमा घाम ताप्न जानु पऱ्यो । त्यस वेला उनी आफैं त दुःखी थिए नै तर उनले आफूभन्दा धेरै दुःखीहरू त्यहाँ देखे । कति मानिसहरू पहाडबाट आएका थिए, कति तराईबाट । तिनको बस्ने बास हुँदैनथ्यो, न खानलाई प्रशस्त  पैसा । अदालतले झुलाउने त छँदै थियो, त्यसमाथि अदालतका कर्मचारीहरूले तिनीहरूलाई अनावश्यक दुःखझन्झट दिन्थे । उनीहरूलाई क्षुद्र व्यवहार

पनि गर्थे । त्यो देख्दा दुर्गालाललाई ती कर्मचारीहरू हृदयहीन वा परपीडक नै हुन् कि जस्तो लाग्थ्यो, तर उनी स्वयम् पनि पीडित भएकाले उनले गर्न नै के सक्थे र ![४५]

इमान्दारीको कमाइ दैवले पनि हर्न सक्दैन भनेझैं मुद्दाको फैसला उनको पक्षमा भयो । त्यही वेलादेखि हाल उनी ठमेलको सोही घरमा परिवार छोराबुहारी नातिनातिनीसहित बस्दै आइरहेका छन् ।

## २.२६ स्वाभिमानले निवृत्तिभरण लिन दिएन

जुन शिक्षण पेशामा उनले जीवनको बाईस वर्ष बिताए त्यसको अन्त्यमा भने एउटा नमीठो प्रसङ्ग छ । दुर्गालालले आफ्नो जीवन बिताएको पेशाबाट निवृत हुँदा पाएको निवृत्तिभरण पनि लिएनन् । यसको खास कारण उनको स्वाभिमान हो । उनले पढाउने गरेको माध्यमिक तहमा थियो । सक्षमताको हिसाब गर्दा त उनले कलेजमै पनि पढाएका थिए । तर कागजी योग्यतामा एस.एल.सी.को मात्र प्रमाणपत्र भएकोले उनलाई प्रा.वि. शिक्षक सरहको मात्र निवृत्तिभरणको व्यवस्था भएको रहेछ । उनको मूल्याङ्कन उनको क्षमता र कार्यसम्पादनसित नमिलेकोले सो निवृत्तिभरण थाप्न उनको स्वाभिमानले दिएन । उनले निवृत्तिभरण लिँदैलिएनन् ।[४६]

## २.२७ भ्रमण

दुर्गालाल श्रेष्ठ धेरै भ्रमण गर्न रुचाउने व्यक्ति होइनन् । तर उनले भाषिक कार्यक्रम र साथीहरूसँग रमाइलो गर्न नेपालका केही ठाउँ घुमेको पाइन्छ । साथै उनले चारधामको भ्रमणमा पुरानो दिल्ली, बनारसलगायत भारतका प्रमुख सहरहरू पनि घुमेका छन् । जीवनको पछिल्लो समयमा यू.के. बस्ने नेवारहरूको संस्था पासा पुचः यू.के.को निम्तोमा उनी एक महिना जति लण्डन पनि बसेका थिए । सोही भ्रमणको अवसरमा उनी फ्रान्स र जर्मनी पनि पुगेका थिए ।

नेपालभित्रको भ्रमणमा दुर्गालालले मनकामना, पोखरा, बाग्लुङ, पाल्पा, गोसाइँकुण्ड, हेटौंडा, चितवन, वीरगञ्ज, विराटनगर, भोजपुर, धरान, बुटवल, लुम्बिनी आदि ठाउँहरू घुमेका छन् । यिनै भ्रमणका क्रममा ठाउँ-ठाउँमा देखेका कुराहरूलाई लिएर उनले थुप्रै कविताहरू पनि रचना गरेका छन् ।

---

[४५] पूर्ववत् ।

[४६] पूर्ववत् ।

## २.२८ वृद्धावस्थामा दुर्गालाल

हाल सत्तरी वर्षको अवस्थामा पनि दुर्गालाल लेखन र सामाजिक कार्यमा उत्तिकै सक्रिय छन् । वृद्धावस्था भएको कारणले धेरै घरमै बस्ने भएकोले पनि होला लेखनमा त अझै बढी प्रवाह आएको छ, साथै प्रौढता पनि निक्कै देखापरेको छ । शारीरिक रूपले दैनिक बाहिर हिंडडुल गर्न र बरोबर भइरहने सभा गोष्ठीहरूमा भाग लिन सकि नै रहेका छन् । एक किसिमले नेपालभाषाका सबैजसो गोष्ठीहरूमा उनी शोभा बनेका हुन्छन् । त्यसैले करिब सबै गोष्ठीहरूमा उनलाई अतिथिका रूपमा निम्तो आउँछ नै र अस्वस्थ भएको अवस्थाबाहेक सबैजसो गोष्ठीमा उनको उपस्थिति हुन्छ पनि । नेपालभाषाको भनेपछि जस्तै सानो गोष्ठी पनि उनले भ्याएकै हुन्छ । मातृभाषाप्रति उनको यो हार्दिकता नै हो कि उनले गोष्ठीलाई सानो र ठूलोको दृष्टिले हेरेका छैनन्, बरु कविमनले तिनका कार्यकर्तामा निहित मातृभाषाप्रतिको प्रेमभावलाई बढी दृष्टिगत गरेका छन् ।

शोधनायकसँग शोधकर्ताको पहिलो परिचय लगभग पन्ध्र वर्षअघि भएको थियो । त्यस वेला र अहिलेको कविको अवस्थामा वृद्धावस्थाका केही लक्षण ठम्याउन सकिन्छ । अब उनको श्रवणशक्ति केही कमजोर भएको छ । बोलाइमा पनि पहिलाको जुन प्रवाह र वजन थियो, त्यसको तुलनामा हालको बोलाइको गति केही सुस्त भएको छ । दुर्गालालको अक्षर छापा जस्तै निक्कै राम्रो भएको कुरा बाल्यावस्थाको परिच्छेदमा नै उल्लेख भइसकेको छ । वृद्धावस्थासम्म पनि उनको अक्षर त्यत्तिकै राम्रो छ । तर हाल लेख्दा हात काम्ने भएकोले अक्षरमा केही फरक आएको छ । साथै बाहिर धेरै पर जान पनि उनलाई गाह्रो भएको छ । चाहेर पनि शरीरले नै नदिएको हुनाले धेरै बाहिर जाने भन्दा पनि घरमै बसी लेखन कार्यमा लागिरहेमा भाषा र साहित्यलाई बढी योगदान दिनसक्ने उनको विचार छ ।

यसबाहेक उनलाई बुढेसकालमा लाग्ने रोग इन्सोम्निया (निद्रा लाग्न गाह्रो हुने) र प्रोस्टेनग्लेन (छिनछिनमा पिसाब लाग्ने) रोग लागेको छ । यसको लागि उनले नियमित डाक्टर जाँच गराई औषधी सेवन पनि गरिरहेका छन् । साथै आस्था च्यानलमा आउने स्वामी रामदेवको कार्यक्रम हेरी खुट्टाको व्यायाम र केही योग प्राणायाम पनि गर्नेगर्छन् ।[४७]

यी त भए बाहिर देखिने लक्षणहरू । तर उनको मनोविज्ञानभित्र वृद्धवस्थामा पुग्ने सबै मानिसहरूको जस्तै मृत्युचेतना पलाएको देखिन्छ । यो कुरा बाल्यावस्थाको सन्दर्भमा माथि (२.९) उल्लेखित काजीलालको मृत्युको प्रसङ्गमा जुन बोलेका थिए त्यसबाट पनि भेउ पाउन सकिन्छ । साथै उनको एक सालअघि लिखित (२०६०) अप्रकाशित काव्यकृति बीनिभालय् व्हःगु ख्वीप्यफ्वः स्वां (अस्ताइरहेको घाममा फुलेका

---

[४७] पूर्ववत् ।

६४ फूल) को शीर्षकबाट पनि आफूलाई डुबेको घाम ठानेको बुझिन्छ । उनको एउटा कविता यस्तो छ :

पीगु झ्वलय् तर दकलय् लीपा
गबले पी जिं जिगु हे सी
वं नं हाय्कल धाःसा भगवन्
तसकंहे जिगु नुगलय् दी [४८]

(अर्थात्, पर्खिने क्रममा सबभन्दा पछि जब म पर्खन्छु आफ्नै मृत्यु, त्यस वेला पनि दुःख दियो भने भगवन् तिमीले, मेरो चित्त साह्रै दुख्ने छ ।)

यसबारे उनी आफै भन्छन् : "…. … हाडसँग मासु छुट्टिँदै गएजस्तो, मासुसँग छाला छुट्टिँदै गएजस्तो, हातमा हात नभए जस्तो, वा आफ्नो भनेको सबै कसको हो कसको हुँदै गएको जस्तो लाग्दै छ । … … मैले यस्तो मूर्खतापूर्वक यिनीहरूलाई (श्रीमती, छोराछोरी) माया गरिरहेको छु कि यसले मलाई निकट भविष्यमा अवश्य पनि ठूलो दुःख दिन्छ भन्ने कुरा थाहा छ।" [४९]

## २.२९ दुर्गालालको हालको दिनचर्या

अनिद्राको रोगी भएकोले पनि होला, उनी चारै बजे उठ्छन् । त्यसपछि सरसफाइको नित्यकर्म भइ नै हाल्यो । त्यसपछि उनी घरको पूर्व झ्यालबाट देखिने चैत्यको दर्शन गर्छन् । केही खुट्टाको व्यायाम र योग, प्राणायाम पछि सोही चैत्य परिक्रमा गर्दै ठंहिटीतिर लाग्छन् । ठंहिटीमा पनि चैत्य परिक्रमा गर्दै आफ्नो जन्मटोल न्हैकंतलातिर लाग्छन् । त्यहाँबाट असन हुँदै महाँकाल पुग्छन् । महाकालको दर्शन गर्दै नयाँसडक हुँदै मरु पुग्छन् । त्यहाँबाट कङ्केश्वरीथान जान्छन् । त्यसपछि लाय्कूबही हुँदै हनुमानढोकाको परिसरमा रहेका हनुमानको परिक्रमा गर्दै नीलबाराही, मखनटोलको महादेव मन्दिर, तारिणी बहाल घुम्दै इन्द्रचोकको आकाश भैरव र बेतालको दर्शन गर्छन् । त्यहीँ एउटा चियापसलमा कालो चिया खान्छन्, अनि तरकारी किनेर आफैंले बोकी घर आउँछन् ।

घरमा पुगेर नुहाउँछन् । चिया खान्छन् । पत्रिका पढ्छन् । पत्रिकामा पनि हरि रोक्का, खगेन्द्र संग्रौला, कृष्ण देवकोटा ज्वालाका लेख उनलाई विशेष मन पर्छ । त्यसपछि भाषा, साहित्य, सङ्गीत आदिसँग सम्बन्धित धेरैजसो भेट्न आउने मान्छेहरू हुन्छन् । उनीहरूसँग भलाकुसारी हुन्छ । साढे दस बजेतिर उनी खाना खान्छन् । दिउँसो

---

[४८] दुर्गालाल श्रेष्ठ, 'पियाच्वँच्वं', ग्वींनिला, (काठमाडौं : नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान, ने.सं. ११२०),पृ. १५३

[४९] शोधनायक दुर्गालाल श्रेष्ठसँग शोधार्थीले यसै शोधकार्यको लागि लिएको टेप वार्ताअनुसार ।

फुर्सद भए पनि सुत्न सक्दैनन् । केही लेख्छन् वा कोही भेट्न आउँछन् । बाहिर साहित्य वा अन्य कार्यक्रम भए भाग लिन जान्छन् ।

साँझमा फेरि आधा घण्टा जति बाहिर घुम्न निस्कन्छन् । त्यसपछि टी.भी.मा समाचार हेर्छन् । बेलुका खाना खाइसकेपछि उनलाई केही समय निद्रा लाग्छ । राती निद्रा नलाग्दा उनी उठेर लेख्ने गर्दैनन् । कहिलेकाहीं रोक्नै सकेनन् भने मात्र लेख्छन् ।[५०]

दिनमा भने उनी अझै पूर्ण सक्रियतापूर्वक लेखिरहेका छन् । यसको एउटा जीवन्त प्रमाण उनका कवितासङ्ग्रह किरमिरे धर्साहरू र चिरिबिरी हुन् जुन शोधकार्य चलिरहेकै वेला प्रकाशित भएका कृति हुन् । उनका धेरै कृतिहरू अप्रकाशित छन् भने रचना र अनुवाद दुवैमा उनको हात अझै सक्रियतापूर्वक चलिरहेको छ ।

उमेरले सत्तरी नाघे पनि लेखन र भाषासेवा दुवैमा दुर्गालाल अझै तन्नेरी छन् र आफ्नो समाजवादी आस्था र विश्वासमा अडिग छन् । युवाकालमा उनी जोशिला त थिए नै, दुर्गालालका अहिलेका रचनाहरू पढियो र उनीसँग कुरा गरिहेऱ्यो भने जोकोहीले पनि अहिले उनमा भित्री जोश अझै बढेको अनुभव गर्नसक्दछ र भन्नु नै पर्दछ – दुर्गालाल श्रेष्ठ देश, जनता र मानवताका कहिल्यै बूढो नहुने योद्धा हुन्, जो आफ्नो कविताको तरवारले उच्चतम जोश, जाँगर र विश्वाससहित एक्लै पनि धेरै बेथितिहरूसित लडिरहेका छन् ।

---

[५०] शोधनायक दुर्गालालश्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

# परिच्छेद : ३

# दुर्गालाल श्रेष्ठको व्यक्तित्वको अध्ययन

दुर्गालाल श्रेष्ठको भाषिक, राजनीतिक र अन्य व्यक्तित्व भए तापनि उनलाई चिनाउने मुख्य व्यक्तित्व साहित्यकार व्यक्तित्व नै हो । साहित्यकारभित्र पनि उनी प्रधान रूपमा कवि हुन्, त्यसपछि गीतकार अनि नाटककार । नाटकमा साह्रै रमाउने उनी नाटककार मात्र नभएर निर्देशक तथा कलाकार पनि हुन् । नाटककै चाहनाको विस्तारको रूपमा उनले  आधुनिक युगको प्रवेशको साथसाथै चलचित्रमा पनि हात हालेका छन् । सर्जकका अतिरिक्त उनको अनुवादक व्यक्तित्व पनि त्यतिकै जाज्वल्यमान छ ।

उनी साहित्यकार मात्र नभएर मातृभाषाका अनन्य सेवी पनि हुन् । उनी राजनीतिक चेतनाले पूर्ण लेखक पनि हुन् । उनमा स्वजाति र राष्ट्रप्रेम पनि प्रचुर मात्रा छ ।

यसबाहेक उनको शैक्षिक व्यक्तित्व पनि उल्लेखनीय छ । उनको निजी व्यक्तित्व पनि कम आकर्षक छैन ।

## ३.१ साहित्यकार व्यक्तित्व

### ३.१.१ कवि व्यक्तित्व

दुर्गालाल श्रेष्ठले औपचारिक लेखन नाटकबाट थालेका हुन् । उनी स्वयम्ले धेरै ठाउँमा आफूलाई कविभन्दा पनि गीतकार भनिन रुचाएको कुरा गरेका छन् । तर पनि दुनियाँले दुर्गालाललाई कविको रूपमा चिनेको छ । उनले पनि कविता नै सर्वाधिक रचेका छन् । हुन त उनका कविताहरू पनि गेयताले घनीभूत भएकाले गीत पनि भन्न मिल्छन् । सङ्गीत हालेर गाए त अधिकांश कविता सुमधुर गीत बन्छन् । तर अर्को दृष्टिबाट हेर्‍यो भने उनका सबैजसो गीतहरूले पनि कविताको भाव गहनता बोकेका छन् । उनका अधिकांश गीतहरूले भाव गहनताले गर्दा कविताको धर्म पनि निर्वाह गरेका हुन्छन् भने अधिकांश कविताले लयात्मकता र गेयताको कारण गीति धर्म पनि निर्वाह गरेका हुन्छन् । त्यसैले समालोचकहरूले उनलाई अङ्ग्रेजी भाषाका साहित्यकार शेली र कीट्ससँग दाँजेर 'गायक-कवि' भनेका छन् ।

यति मात्र नभएर उनका नाटकमा पात्रले बोल्ने संवाद पनि कवितात्मक छन् । त्यसैले दुर्गालाललाई मूलरूपमा कवि नै भन्नुपर्छ । बरु समालोचकहरूले भनेजस्तै

उनलाई 'गायक-कवि' भन्नमिल्छ ।[५१] उनी गीतात्मक कवितामा नै बढी खुलेका छन् । एक हिसाबले भन्दा उनी कविमात्र नभएर, उनीसँग एकैछिन मात्र बस्नेले पनि चालपाउँछ, उनको बोलीचालीदेखि सबै कुरा कवितामय छ, साधारण मानिसको भन्दा भिन्न छ । दुर्गालालको यही कवि व्यक्तित्वबाट आकर्षित र प्रभावित भई उनका एक प्रशंसक लेखक रामप्रसाद ज्ञवालीले उनको किरमिरे धर्साहरूको (नेपाली कविता, गजल, गीतको सङ्ग्रह) संक्षिप्त भूमिका लेख्ने क्रममा लेखेका छन्:

*"एउटा कविता सिंहको चालमा मञ्चमा उक्लन्छ र तनक्क तन्किएर उभिएपछि सनसनी उत्पन्न गर्दै कविको वाचन गर्छ । संसारमा कमै यस्तो हुँदो हो । त्यस्तो कविता हो दुर्गालाल श्रेष्ठ । अनुहारमा अनुभवका अनेक पुस्तकहरू सँगालेर कविता दुर्गालाल जब कविको वाचन गर्न थाल्छ तब उसका औंलाहरू एकएक श्लोकमा रूपान्तरित हुँदै जान्छन् र उसका अनुहारका धर्साहरू पङक्तिपङक्ति बनेर लहरिन थाल्छन् । कविता दुर्गालाल सिङ्गो र प्रगाढ जीवनानुभूति बनेर मञ्चबाट कविलाई वाचन गर्छ । म भाग्यशाली छु – आफ्नै आँखाले उसलाई देखेको छु, सुनेको छु र पढेको पनि छु ।"*

त्यस्तै तपक कविताका प्रकाशक अमृतमान शाक्यले पनि सोही पुस्तकमा प्रकाशकको अभिव्यक्तिमा लेखेका छन् : वहाँको सामान्य बोलीचाली पनि कविताझैं लाग्छ ।

दुर्गालालसँगको भेटघाटमा यस्तो अनुभव गर्ने रामप्रसाद ज्ञवाली र अमृतमान शाक्य मात्र नभएर थुप्रै छन् । "कवि कविता होस्, कविता कवि होस्" भनेजस्तै उनी छन् । हुन त उनी आफैं आफ्नो कवितादेखि सन्तुष्ट छैनन् भनेर कतिपय कवितामै र अन्तर्वार्ताहरूमा भनेका छन् । तर कुनै पनि कविलाई आफ्नो कवितामा सन्तुष्टि हुँदैन । कसमा कति कविको गुण छ भन्ने तुलनात्मक कुरा मात्र हो, बुद्धत्व प्राप्त गर्ने भने जस्तो यसको उपलब्धिको अन्तिम बिन्दु त छैन । यस हिसाबले दुर्गालालमा कवित्वको गुण घनीभूत छ । कवि त धेरै हुन्छन्, तर कविमय व्यक्तित्व भएको कवि कमै पाइन्छन् । त्यस्तै दुर्लभ मध्ये एक हुन् - कवि दुर्गालाल श्रेष्ठ । अपूर्णताको र असन्तोषको अनुभव मनमा भइरहनु पनि कविकै गुणहरू मध्ये एक हो । कविता धेरै लेख्ने र धेरैजसो भावना र विचार कवितामा नै व्यक्त गर्ने भएकोले उनलाई कवि भनेरै सबैले चिनेका छन् र हुन् पनि उनी कवि नै ।

---

[५१] "हुन पनि दुर्गालाल अहिलेलाई एक गायक-कवि (lyrical poet) मात्र हुन्, .........।" कमलप्रकाश मल्ल, 'न्ह्यज्वलं' (भूमिका), दुर्गालाल श्रेष्ठ रचित लिसं, (काठमाडौं : मिला प्रकाशन, ने.सं. १०८०), पृष्ठ झ ।
"... अङ्ग्रेजी साहित्यका कवि शेली र कवि कीट्सलाई गायक-कवि भनेर संज्ञा दिए जस्तै हाम्रा कवि दुर्गालाल श्रेष्ठलाई पनि त्यस्तै नभन्नु वा त्यसरी स्वीकार नगर्नु वहाँप्रति मात्र होइन हामीले हामी आफैंप्रति नै पनि ठूलो अन्याय गरेको समान हुन्छ ।" हितकरवीरसिंह कंसाकार, 'सर्गः सिबे नं धरती नमिंग्वाः दुने कवि दुर्गालाल श्रेष्ठ' (भूमिका), दुर्गालाल श्रेष्ठ रचित सर्गः सिबे नं धरती नमिंग्वाः, (काठमाडौं : लूजः प्रकाशन, ने.सं. १०८८), पृष्ठ घ ।

दुर्गालाललाई कविता लेख्न कुनै विशेष ठाउँ र वातावरण चाहिँदैन । उनी स्वच्छन्दतावादी कवि भएकोले पनि होला उनलाई कविता नियोजित रूपमा भन्दा पनि भावावेगको रूपमा आउने प्रतीत हुन्छ । उनले धेरै ठाउँमा कवितालाई प्रतीकको रूपमा प्रेमिका ठानेका छन् । उनले कवितालाई प्रेमिका जस्तै कुरेर बस्दा नआउने, स्वागतको लागि कोठा सजाएर बस्दा नआउने तर कुनै वेला अप्रत्याशित रूपमा आउने प्रेमिकाको रूपमा लिएका छन् ।[५२]

दुर्गालालको बाल्यकालदेखिकै सबभन्दा मिल्ने साथी गायक भृगुराम श्रेष्ठले दुर्गालालले कसरी कविता लेखेका थिए भन्ने एउटा रमाइलो घटना सुनाएका छन् । एक दिन अबेर साँझ उनीहरू दुईजना घुम्न गइरहेका थिए । अलिअलि पिइसकेका पनि थिए । घुम्दै नयाँसडकको दमकल छेउ पुगे । त्यस वेला दुर्गालाललाई अकस्मात् कविता फुरेछ र भृगुरामलाई कविता लेख्न भने ।

भृगुरामले लेख्ने कागज भेट्टाउन सकेनन् । लेख्ने कागज खोजेर पनि नभेट्टाएपछि उनले भृगुरामको लुगाभरि कविता लेखेका थिए । पछि त्यो कविता घर आएर कापीमा सारेको भृगुरामलाई अझै सम्झना छ ।[५३] त्यो कविताको पहिलो अनुच्छेद यस प्रकारको छ :

अय्लाः नवः झन वसिबें नवः जि
जिं थःत सुच्के अय्लाः त्वनाःलि

(अर्थात्, रक्सी गन्हाउँछ, तर म त्योभन्दा पनि गन्हाउँछु । म आफूलाई छोप्छु, रक्सी पिएर ।)

यसलाई गीत बनाएर स्व. द्वारिकालाल श्रेष्ठले गाएका थिए, जुन निक्कै लोकप्रिय भएको छ ।

कविता होस् वा नाटक दुर्गालाललाई लेख्न भन्दा भन्न सजिलो मान्छन् । शायद उनीभित्र भावहरू तीव्रगतिमा उम्रने भएकाले होला, लेख्ने प्रक्रियाले पनि उनलाई भावको प्रवाह बिथोलेको अनुभव हुनसक्छ । त्यसैले दुर्गालालले रातबिरात पनि आफ्नी छोरी सुचितालाई कविता लेखाउँछन् । दुर्गालालले कविता ओकल्छन् र छोरीले आधा रातमा पनि उठेर बोलेको कवितालाई कागजमा उतार्नुपर्थ्यो । यस्तै अनुभव उनको अर्को साथी श्रीकृष्ण 'अणु'को पनि छ । कतिपटक उनीहरू दुवै घाँसको चउरमा

---

[५२] जस्तै, याकःफल्चा, जि स्वयम्भू त्वाथः कविता सङ्ग्रहमा पछाडिपट्टीको आवरणपृष्ठमा लिखित कविका भावनाहरूमा ।

[५३] दुर्गालाल श्रेष्ठका अनन्य मित्र तथा कलाकार भृगुराम श्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

पल्टिरहेका हुन्थे र दुर्गालाललाई कविता फुर्नेबित्तिकै श्रीकृष्णले कलम कागज टिपेर लेखिहाल्नुपर्थ्यो ।

### क) प्रभावशाली तरिकामा कविता पाठ गर्ने कवि

कविता लेख्ने एउटा कला हो भने प्रभावपूर्ण रूपमा कविता पाठ गर्ने कविको अर्को कला हो, जुन सबै कविहरूमा समान रूपमा पाइँदैन । तर दुर्गालाल श्रेष्ठ जति राम्रा कवि हुन्, उनको कविता पाठ गर्ने तरिका पनि उत्तिकै राम्रो र प्रभावशाली छ । दुर्गालालले कविताको भावलाई मिल्ने गरी स्वरलाई तलमाथि गर्दै, तीव्र र मन्द पार्दै साङ्गीतिक लयात्मकता र तालसहित कविता पाठ गर्दा सुन्ने मान्छेहरू मन्त्रमुग्ध हुन्छन् । यसको लागि कविता बुझ्ने र कवितामा रुचि राख्ने मान्छे नै चाहिन्छ भन्ने छैन । कवितामा रूचि नराख्ने मात्र होइन, नेपालभाषामा रचेका कविताहरू उनले पाठ गर्दा भाषा नबुझ्ने व्यक्तिहरू समेत कविता भन्ने शैलीबाट प्रभावित भएका धेरै उदाहरणहरू छन् ।

दुर्गालालले युवाकालको सुरुमा नै भारतीय सांस्कृतिक सहचरी शिवमङ्गलसिंह सुमनसहित उपस्थित भएको एउटा कविगोष्ठीमा नेपालभाषामा कविता सुनाएका थिए । उनले कविता सुनाएपछि सुमनज्यूले भाषा नबुझे तापनि उनको कविता सुनाउने शैलीबाट प्रभावित भएर 'यो मान्छे कवि हो' भनेका थिए । पछि भारतीय राजदूतावासले उनका कविता रेकर्ड पनि गराएको थियो । उनलाई त्यसबापतको पारिश्रमिक त्यति वेला नै अस्सी रूपैयाँ प्रदान गरिएको थियो ।

पछि पनि विदेशीसहितका धेरै कवितागोष्ठीहरूमा विदेशी कविहरू उनले सुनाएका कविता नबुझे पनि भनाइको शैलीबाट प्रभावित भएका धेरै घटनाहरू छन् ।

दुर्गालालको लण्डनस्वां (London Rose) कविता पुस्तक अङ्ग्रेजीमा अनुवाद गर्ने गिरिधर मानन्धरले उनको कविता पाठ शैलीबाट प्रभावित भई सो पुस्तकको मन्तव्यमा यसरी लेखेका छन् :

*"कवि दुर्गालालले आफ्नो लण्डनयात्राको क्रममा रचेका कविताहरू पाठ गर्नुहुँदा मलाई कवि डाइलन टोमस (Dylan Thomas) ले न्यूयोर्कमा आफ्ना श्रोताहरूको अगाडि आफ्नो कविता 'चाइल्डस् क्रिसमस इन वेल्स' (Child's Christmans in Wales) पाठ गर्नुभएको सम्झना भयो ।"*

दुर्गालालको कविता पाठ गर्ने प्रभावशाली शैली उनी कविता रच्ने कवि मात्र नभएर उनको व्यक्तित्व नै कवित्वपूर्ण भएकोको पनि प्रमाण हो ।

### ख) कविताका विभिन्न स्वरूपमा दुर्गालालको विस्तार

कवितामा दुर्गालाल श्रेष्ठले सबभन्दा धेरै फुटकर कविता नै लेखेहोलान् । त्यसपछि गीत, गजल, मुक्तक, रुवाइ, दोहा र भजनहरू आउँछन् । उनले बालगीत र बालकविता प्रशस्तै लेखेका छन् । बालसाहित्यमा उनका रचना फुटकर कविता र गीतदेखि खण्डकाव्यसम्म विस्तार भएका छन् । तर बालखण्डकाव्यहरूमा सन्तको छाता मात्र पूर्णतः मौलिक कृति हो । अन्य अरू नै भाषाका कृतिको अनुवाद वा अरू नै कथामा आधारित कृतिहरू हुन् ।

प्रौढकविताहरूमा उनले मूलतः छन्दमा लेख्न रुचाएको भए तापनि केही कविता गद्यमा पनि रचेका छन् । सुरुका उनको कविता छन्दमा लेखिएका होइनन् अथवा भनूँ त्यस वेला उनी छन्दसित परिचित नै थिएनन् । तर नाटकको लागि लेखिएका केही गीत भने छन्द नजानेकै वेला रचेको भए तापनि आश्चर्यपूर्वक ठ्याक्कै छन्दमा मिलेका छन् । त्यस वेला कविता भनेपछि छन्दमा नै हुनुपर्ने मान्यता भएकोले उनले छन्द सिक्दै लेखे र उनलाई आफ्नो भाव अभिव्यक्त गर्न छन्द नै सजिलो पनि लाग्यो । तर जीवनको पछिल्लो घडीमा आएर उनले पुनः छन्दको बन्धन छोडेर धेरै कविता रचेका छन् । तपक (२०५७) का धेरै कविता गद्यमा लेखिएका छन् भने उनको अप्रकाशित कृति थुया गद्य मुक्तकहरूको सङ्ग्रह हो । तर समग्रमा लिँदा दुर्गालाल मूलतः छन्दमा लेख्ने कवि हुन् ।

लम्बाइको दृष्टिकोणले खण्डकाव्यसम्म विस्तारित भएर पनि त्यस वेलाका छन्दमा लेख्ने धेरैजसो कविहरूले जस्तो उनले महाकाव्य लेख्ने चेष्टा भने गरेनन् । वास्तवमा उनी धेरै योजना बनाएर लेख्ने कवि होइनन् । बाह्य स्थितिले तत्काल मनमा परेका भावना पोख्ने कवि भएकाले उनलाई लामो आकारको धेरै योजना बनाई लेख्नुपर्ने महाकाव्यतिर चासो नभएको हुनसक्छ ।

### ग) दुर्गालालको काव्यधारा र नेपालभाषाका कविहरूमा उनको स्थान

दुर्गालाल श्रेष्ठको कवित्वको विषयमा धेरै समालोचकहरूले लेखेका छन् । त्यसैले उनीहरूको विश्लेषणको अध्ययनबाट नै कवि दुर्गालालको कवित्व र स्थानबारे स्पष्ट हुन्छ ।

नेपालभाषा काव्यमा दुर्गालालको स्थानको विषयमा मल्ल के. सुन्दरले यस प्रकार लेखेका छन् :

*"पूर्वीय परम्परामा हुर्केको नेपालभाषा काव्यमा पाश्चात्य शैलीको प्रभाव भित्र्याउने अग्रजहरू हुन् – बैकुण्ठप्रसाद लाकौल र सिद्धिचरण श्रेष्ठ । अङ्ग्रेजी साहित्यमा शास्त्रीय छन्दवादी परम्परालाई नाघेर रोमानी शैली हुर्काउने विलियम वर्ड्स्वर्थ र कलरिजको अनुकरण नेपालभाषामा प्रयोग गर्ने वहाँहरू दुईजना हुनुहुन्छ ।*

*काव्यमा शैलीगत स्वच्छन्दतालाई प्रयोग गरी पहिलो रचना लेख्ने हिसाबले लाकौलज्यू अगाडि उभिन आउनुहुन्छ भने रोमानी परम्परालाई बलियो गरी हुर्काउने श्रेय सिद्धिचरणज्यूलाई प्राप्त हुन्छ । अझ भनूँ भने वैचारिक सशक्तताको हिसाबले सिद्धिचरणज्यू रोमानी शैलीमा हाम्रा भाषाका शेली हुन् । नारायणदेवी, फणीन्द्ररत्न, रमापतिराज, दुर्गालाल आदिहरू यही शैलीको नयाँपुस्ता र प्रशोधित प्रतिभा हुन्।"* [५४]

डा. वासुदेव त्रिपाठी र रामबाबु सुवेदीले लेखेका छन् :

*"वि.सं. १९९८ सालतिरबाट सुरु भएको मानिने आधुनिक नेवारी साहित्यको स्वच्छन्दतावादी (रोमान्टिक, रुमानी) धाराका प्रतिभाका रूपमा दुर्गालाल श्रेष्ठज्यूको सृजनयात्रा २००४ तिर थालिई र २००८ सालदेखि सार्वजनिक रूप लिई अहिले लगभग आधा शताब्दीको उत्कृष्ट उपलब्धिले भरिपूर्ण बनिसकेको छ । उहाँका सृष्टिका मुख्य फाँट कविता र गीतका साथै नाटकमा अनि बालकविता र बालगीतमा पनि चुरोमा स्वच्छन्दतावादी गुण आजसम्म नै पनि व्याप्त रहेको छ । कवि सिद्धिचरण श्रेष्ठबाट विशेष उत्प्रेरित रही आफ्ना नेवारी-नेपाली दुवैथरी कविताकृतिद्वारा सिद्धिचरणका सरल, मार्मिक र सुन्दर कविताको झझल्कोसमेत दिइरहने दुर्गालाल श्रेष्ठज्यू नेपाली महाकवि लक्ष्मीप्रसाद देवकोटा र नेपाली नेवारी कवि केदारमान व्यथितका रचनाबाट पनि आफूले प्रेरणा पाएको अनुभव गर्नुहुन्छ । त्यसो त उहाँका प्रारम्भिक रचनामा अङ्ग्रेजी कवि पी.बी. शेलीको पनि केही प्रेरणा भेटिने गर्दथ्यो र हिन्दी छायावादी कविहरूबाट पनि सुरुमा आफूले कविताको कलाका केही पक्ष सिक्न सकेको कुरा स्वयं दुर्गालाल श्रेष्ठज्यू बताउनुहुन्छ ।*

*"यी सबै प्रसङ्गबाट उहाँको थालनी स्वच्छन्दतावादी हुनुका साथै उहाँ मुख्यतः स्वच्छन्दतावादी धाराका कवि रहेको कुराको पुष्टि हुन्छ ।*

*"कवि दुर्गालाल श्रेष्ठ आफ्ना अग्रज कविका रूपमा सिद्धिचरण श्रेष्ठ र केदारमान व्यथितसँगसँगै कविकेशरी चित्तधर हृदय, बैकुण्ठप्रसाद लाकौल, धर्मरत्न यमि, सत्यमोहन जोशी, आदिलाई पनि श्रद्धापूर्वक सम्झनुहुन्छ र नेवारी स्वच्छन्दतावादी कविताको यही अग्रदूत पुस्ताको उत्तराधिकारलाई दुर्गालालज्यूले आफ्नो मौलिक प्रतिभा र सृजनाद्वारा क्रमशः नवस्वच्छन्दतावादतर्फ डोऱ्याउनुभयो । उहाँका समवर्ती अरू मुख्य कवि-कवयित्रीहरू थिए – गिरिजाप्रसाद जोशी, मदनमोहन मिश्र र रमापतिराज शर्मा, नारायणदेवी श्रेष्ठ, रामबहादुर कायस्थ, ध्रुवकृष्ण दीप आदि । यसरी नेवारी कवितालाई अगिल्तिर डोऱ्याउने क्रममा दुर्गालाल श्रेष्ठज्यूको मुख्य पहिचान कविता, गीत र नाटकका फाँटमा पनि त्यस्तो स्वच्छन्दतावादी नव धुक्धुकी प्रस्तुत गर्नु नै रह्यो जुन समाज, युग र जीवनको यथार्थको चस्कोप्रति सचेत हुँदै थियो । यसरी नै कवि दुर्गालाल श्रेष्ठ आधुनिक नेवारी कविताको दोस्रो दशकमा स्थापित हुन थाल्नुभएको हो र श्रेष्ठ*

---

[५४] मल्ल के. सुन्दर, 'नेपालभाषा काव्यय् कवि दुर्गालाल' (भूमिका) दुर्गालाल श्रेष्ठ रचित याकःफल्चा, (काठमाडौं : सुमन, सुचिता, सरोज, ने.सं. ११०८) पृष्ठ ङ ।

*सिरपा (२०१७) यसैको स्वीकृति थियो । यसरी वहाँ दुई युगको रसान या सन्धिस्थलमा उभिई स्वच्छन्दतावाद र प्रगतिवादका बीचको सेतु वा पुल खडा गर्नेतर्फ लाग्नुभयो । उहाँका पछिल्ला कविताहरूमा अरू जे जति नयाँ प्रभाव परे पनि र गुणात्मक परिवर्तन र विकास आए पनि उहाँका कविता र गीतका साथै बालकविता र बालगीतको पनि खास स्रोत र शक्ति यथार्थतर्फ उन्मुख सशक्त नव-स्वच्छन्दतावादी धारालाई हुर्काउनु नै हो । उहाँले स्वच्छन्दतावादका यथार्थीकरणमा, नव नेवारीकरणमा र अझ त्यसमा आफ्नो मौलिक निजत्वसमेत स्थापित गर्नमा ठूलो सफलता पाउनुभएको छ ।*

*"धर्ती र जनसाधारणप्रतिको असीम ममता अनि विराट् प्रकृति र मानवताप्रतिको अपरिमित आकर्षणका साथै गाढा देशप्रेम, जातीय र राष्ट्रिय संस्कृतिप्रतिको अगाध ममता अनि खरो न्यायचेतना भएको क्रान्तिको कामनालाईसमेत जम्माजम्मीमा उहाँका कविता र गीतले अँगालेका छन् । संस्कृत, नेवारी र नेपाली-हिन्दी कवितामा प्रचलित वर्णमात्रिक, मात्रिक र वार्णिक (लोक) छन्दसमेतका मधुर शब्दगुञ्जनमार्फत अत्यन्त मार्मिक तथा कलात्मक उच्च भावहरूको व्यञ्जना र सम्प्रेषण गर्ने सहज शैलीका सामर्थ्यले गर्दा उहाँ नेवारी भाषाका श्रेष्ठ कवि ठहर्नुभएको छ । वास्तवमा नै उहाँ परवर्ती प्रयोगवादी पुस्ताका कवि पूर्ण वैद्य, श्यामसुन्दर सैंजु र बुद्ध सायमि आदिको नवधारा (२०२१) देखि भिन्न नै रही स्वच्छन्दतावादी युगका उच्च सौन्दर्यचेतनालाई यथार्थवादी र प्रगतिवादी आधारभूत जागरुकतासहित सुरक्षित गर्दै नेवारी कविताको श्रीवृद्धि गर्ने उत्कृष्ट कवि हुनुहुन्छ । उहाँका, विगत एकदशकका, नेपाली भाषामा प्रकाशित भएका कृतिहरूले पनि त्यस्तै कित्ताको र प्रकारको उत्कृष्ट कवित्वको पुष्टि गर्दछन् ।"* [५५]

दुर्गालालको पुस्ताभन्दा पछि आधुनिक कविता वा विचारप्रधान छन्दविहीन गद्यात्मक शैलीकविताको शुरुवात हुन्छ । त्यसको नेतृत्व कवि पूर्णबहादुर वैद्यले गरेका छन् भने आनन्द जोशी, श्यामसुन्दर सैंजु, बुद्ध सायमि, सुन्दर मधिकर्मि, केशव शाक्य, प्रतिसरा सायमि आदि यस क्षेत्रमा उल्लेखनीय सफल प्रतिभाहरू हुन् । कवि दुर्गालाल त्यस संक्रमणको वेलामा पनि रोमानी शैलीमा नै अडिग रही निरन्तर कविता कोरिरहने कवि हुन् ।

यदि नेपालभाषा साहित्यमा पनि अङ्ग्रेजी साहित्यमा जस्तै एक समयको एकजना सबभन्दा प्रभावशाली कविबाट साहित्यिक युगको नामाकरण गर्ने हो भन्देखि राणाकालको समय सिद्धिदासयुग, अनि त्यसपछिको समय चित्तधर 'हृदय' युग र त्यस्तै चित्तधरपछि वर्तमान्सम्मको युगलाई दुर्गालालयुग भनी नामाकरण गर्न सकिन्छ होला ।

---

[५५] डा. वासुदेव त्रिपाठी र रामबाबु सुबेदी, 'कागजको डुङ्गा बालगीतमालाका रचनाकार दुर्गालाल श्रेष्ठको संक्षिप्त चिनारी', दुर्गालाल श्रेष्ठ रचित कागजको डुङ्गा, (काठमाडौं : एकता बुक्स डिस्टिब्युटर्स प्रा.लि. २०५८) पृष्ठ ३९-४१ ।

### ३.१.२ गीतकार व्यक्तित्व

दुर्गालाल श्रेष्ठले नाटक पनि थुप्रै लेखेको भए तापनि उनी कविकै रूपमा चिनिन्छन् । तर उनी आफैं भने कविभन्दा पनि गीतकार भनाउन रुचाउँछन् । यस बारे उनले धेरै ठाउँमा सार्वजनिक अभिव्यक्ति पनि दिएका छन् । हुन पनि उनका रचनाहरू गेयता र साङ्गीतिकताले घनीभूत छन् । उनका अधिकांश कविताहरू सजिलैसित लय हाली गाउन सकिन्छ र सङ्गीत भरेमा गीत बन्छन् । साथै धेरै गीतहरू भावविस्तारले गर्दा छापामा पढ्ने हो भने कविताको कोटिमा पर्दछन् । उनको आफ्नै भनाइअनुसार उनलाई गीतलेखनमा सङ्गीतकारसँगै बसेर साङ्गीतिक धुनसँगै गीत रचना गर्दा सबैभन्दा सजिलो लाग्छ । यस्तो उनले लेखनको सुरुवातदेखि हालसम्म पनि गर्दै आएका छन् । उनको प्रारम्भिक रचना 'झी ज्यापु ज्यामि सारा, शोषित व सर्वहारा' पनि त्यस्तै रचना थिए, जुन सङ्गीतकारले हार्मोनियम बजाउँदै र उनले गीतका हरफहरू रच्दै पूरा भएको थियो । हालको उनको लोकप्रिय गीत 'फूलको आँखामा फूलै संसार.....' लगायत 'मोमेन्ट अफ ब्लिस' गीतिचक्काका सबै गीतहरू त्यस्तै गरी सङ्गीतकार न्ह्यू बज्राचार्य र गायिका आनी छोइङ डोल्मासँग बस्दै तयार भएका हुन् ।[५६] उनका थुप्रै गीतहरू सङ्गीतकार र गायकहरूको सानिध्यमा यसरी नै तयार भएका हुन् ।

सङ्गीतकारको सानिध्यमा तयार नगरेका गीतहरूको विषयमा पनि धेरै सङ्गीतकारहरूको अनुभव के छ भने दुर्गालालका गीतमा सङ्गीत भर्न साह्रै सजिलो छ । ती गीतको शब्दमा पहिले नै सङ्गीतबद्ध भएको अनुभव यस अनुसन्धानकर्तालाई उनका गीतमा सङ्गीत दिइसकेका सङ्गीतकारले बताएका छन् । उनीहरूको भनाइमा अरूको गीतको लागि उपयुक्त ताल खोज्नुपर्छ तर दुर्गालालका गीतहरू एउटा मात्र ताल नभई धेरै तालमा सुहाउँदा हुन्छन् ।

हुन त उनका थुप्रै साथीहरू छन्: साहित्यकार, राजनीतिक, चित्रकार, पत्रकार, समालोचक, गायक, कलाकार, सङ्गीतकार साथीहरू । तर उनी विशेष गरेर साहित्यिकभन्दा पनि गायक, सङ्गीतकार साथीहरूको माझ बढी रमाएका देखिन्छन् र धेरै समय उनीहरूसँगै बिताएका छन् । उनका अनन्य मित्र त भृगुराम श्रेष्ठ भइ नै हाले, जो गायक र कलाकार हुन् । त्यसपछिका मित्रहरूमा स्व. द्वारिकालाल श्रेष्ठ, स्व. दर्शनदास श्रेष्ठ (जो कालान्तरमा जेठान पनि भए), स्व. मदन परियार, स्व. सत्यनारायण राजभण्डारी, स्व. कान्छाबुद्ध बज्राचार्य, स्व. नातिकाजी, स्व. शिवशङ्कर मानन्धर र पाटनका जलतरङ्ग वादक कृष्णनारायण श्रेष्ठ, हुतराज शर्मा, सङ्गीतप्रवीण केशरमान तुलाधर आदि रहेका छन् । हाल उनी धेरैजसो रचना आफ्नै साथी स्व. परमानन्द वज्रचार्यको छोरा न्ह्यू बज्रचार्यसँग बसेर गर्ने गरेका छन् । उनमा गीतकार

---

[५६] श्रीओम रोदन, 'मातृभाषामा लेख्न बस्दा कलममा मेरो रगत बगेकोजस्तो अनुभव हुन्छ', मधुपर्क, वर्ष ३७, पूर्णाङ्क ४२६ (२०६१ मङ्सिर), पृष्ठ १०२ ।

व्यक्तित्व घनीभूत भएकोले नै होला साहित्यकार भएर पनि उनी सङ्गीतकारहरूसँग बढी रम्ने भएका ।

दुर्गालाल बालककालदेखि नै गीत-सङ्गीतमा संवेदनशील थिए भन्ने कुरा उनको बालककालको एउटा सम्झनाले पनि पुष्टि गर्छ । उनको पुरानो घर भएको दथुननिमा एउटा सिकर्मी थियो । त्यो सिकर्मीलाई सम्झँदै कवि भन्छन् *"रातको शून्यतामा पनि मेरो चोक निदाउँदैनथ्यो । त्यो सन्नाटालाई चिर्दै (बिथोल्दै) छिमेकको सिकर्मी बूढो एकनासले काठमा ट्वाक-ट्वाक पारिरहेको हुन्थ्यो । काठको ट्वाकट्वाकसँगै कहिले ऊ मधुर लयमा गीत गुनगुनाइरहेको हुन्थ्यो भने कहिले मीठो तालमा सुसेलिरहेको हुन्थ्यो । म उसको गीत सुनेर नै ऋतु र समयको ज्ञान पाउँथें । वसन्त ऋतु, गाईजात्रा, शरद् ऋतु, घोडेजात्रा (पाहांचह्रे) आदिको जानकारी म उसैबाट पाउँथें । नजिकै तमोटहरूले भाँडाको काम गर्दा यस्तैखाले साङ्गीतिक आवाजहरू गुन्जन्थे ।"*

त्यसैको प्रभावले नै होला उनले चिनियाम्ह किसिचामा तमोटहरूको सम्बन्धमा 'तांतां तबः दाजु तांतां.....' भन्ने एउटा गीत पनि लेखेका छन्, जसमा तमोटहरूको जीवन र दुःखको वर्णन सरल बालसुलभ भाषामा गरेका छन् । त्यस्तै, बाल्यकालको सिकर्मी बूढोलाई सम्झेर उनले उसकै नामबाट 'ग्यां अरा' शीर्षक कविता लेखेका छन् ।[५७] यसबाट उनी बालककालदेखि नै सङ्गीतबाट औधि प्रभावित हुने स्वभावको रहेको बुझिन्छ ।

उनले तरुण अवस्थामा नै ज्यापुनीको प्रेममा लेखेको "थौं वइ ला कन्हे वइ ला" भन्ने लोकलयको गीत त्यो वेला यति लोकप्रिय भएको थियो कि बिहेमा बाजा बजाउनेहरू, स्वयम्भूमा गुंलाबाज[५८] बजाएर फर्कनेहरू सबैले त्यही धुन बजाउनेसम्म पनि भयो ।

उनले चलचित्र, टेलिचलचित्र आदिमा पनि गीत दिएका छन् । मदनकृष्ण श्रेष्ठ र हरिवंश आचार्यको '१५ गते' नामक चलचित्रमा उनले लेखेको नेपाली गीत 'सय थरि बाजा एउटै ताल ... ' राष्ट्रिय एकता प्रवर्द्धन गर्ने गीतहरूको पङ्क्तिमा धेरै लोकप्रिय भएको थियो र हाल पनि राष्ट्रिय एकता प्रवर्द्धन गर्न आवश्यक वेलामा रेडियो र टेलिभिजनमा बजाइने गरेको छ । नेपालभाषाको लोकप्रिय चलचित्र 'राजमती'मा पनि उनकै गीत छन् । नेपाली चलचित्र 'बीर गणेशमान' मा पनि उनकै शीर्ष गीत छ । नेपालभाषामा उनका कति गीत गाइए, कति रिकर्ड भए गनेर साध्य छैन । ती सबै गीत सङ्कलन गरे पनि दुइचार पुस्तक प्रकाशन गर्न पुग्नेछ ।

---

[५७] दुर्गालाल श्रेष्ठ, जि स्वयम्भू त्वाथः, (काठमाडौं : सुमन-सुचिता-सरोज, ने.सं. ११०६), पृष्ठ ६६ ।

[५८] साउनभदौमा टोलटोलबाट एक महीनासम्म परम्परागत बाजा बजाउँदै स्वयम्भूमा जाने चलन छ ।

विषयवस्तु र लयको आधारमा दुर्गालाल श्रेष्ठका गीतहरू आठ प्रकारमा वर्गीकरण गर्न सकिन्छ :

क) लोकलयमा आधारित प्रेमगीत
ख) आधुनिक प्रेमगीत
ग) भाषाप्रेम/जातिप्रेमका गीत
घ) बालगीत
ङ) प्रगतिशील गीत
च) जीवनदर्शनसम्बन्धी गीत
छ) शोकगीत (रामायण)

## क) लोकलयमा आधारित प्रेमगीत

लोकलयमा आधारित उनका धेरै गीतहरू निक्कै नै लोकप्रिय भएका छन् । तिनमा 'थौं वइला कन्हे वइला', 'ल्याय्मम्ह दाजु तंचाया ला छु', 'माया रे रतन', 'हाइ रे ज्यापुनी तता', 'व छु गल्ली थ्व छु गल्ली' आदि छन् । एकताका ती गीतहरू सबैका मुखमा झुन्डिएका थिए । मञ्चका नाचहरू पनि तिनै गीतको तालमा नाचिन्थे ।

उनका लोकगीतहरू उनले लेखेको भए तापनि साँच्चिकै धेरै वर्ष पुरानै गीत हो कि झैं देखिन्थे । उनको लेखनीमा धेरै मान्छे झुकिन सक्छन् । उनका लोकगीतहरू अहिलेको कसैले लेखेको नभई लोकले परापूर्वकालमै रचेर एक पुस्ताबाट अर्को पुस्तामा हस्तान्तरण हुँदै आएका पो हुन् कि जस्ता लाग्छन् । लेखकको नाउँ झिकिदिने हो भने कुनै सुदूर गाउँबाट सङ्कलन गरिएका हुन् कि झैं लाग्छन् ।

उनका सुरुका लोकगीतहरू लुँबुँ-वहबुँ कृतिमा 'लुँबुँ' खण्डमा सङ्कलित छन् । उनका थुप्रै बालगीतहरू लोकलयमा आधारित छन् ।

उनले लोकगीत, ऋतुगीत पहिले आफ्नै टोलको सिकर्मी बूढोबाट सुनेका थिए भने पछि किसानहरूको सङ्गतबाट उनी लोकगीत र लोकजीवनको सानिध्यमा पुगेका हुन् । त्यसैले उनको लोकगीतमा मायाप्रीति मात्र नभएर किसानहरूको जीवनशैली र तिनको दुःख बढी मात्रामा व्यक्तिएका छन् ।

## ख) आधुनिक प्रेमगीत

आधुनिक गीतहरूमा उनले हल्काफुल्का रसरङ्गका गीतदेखि गम्भीर प्रेमगीतहरू र वेदनाले भरिएका गीतहरू पनि लेखेका छन् । कतिपय गीतहरूले भावविस्तारको कारण पूर्णरूपमा कविताको दायित्व निर्वाह पनि गरेका छन् । साधारण हल्काफुल्का गीतहरूमा उनले कवित्वको मोह त्यागेका पनि छन् र पूर्णरूपमा गीतकार बनेका छन् । यसले उनको गीतकार व्यक्तित्वमा विविधता ल्याएको छ ।

त्यति मात्रै नभई पाश्चात्य शैलीका गीतका लागि त्यस्तै सुहाउँदो रचना रच्न पनि उनी पछि परेका छैनन् । त्यसको सुरुवात आजको पप गीतको व्यापकताको समयमा नभई नेपालमा पाश्चात्य गीतको सुरुवात नै नभएको अवस्थामा अर्थात् सन् १९६४ (बि.सं. २०२१) मा 'बालाबालाचिंगु मिखा' नामको रक एण्ड रोल गीत उनकै शब्दमा तयार भएको थियो । प्रेमध्वज प्रधानले गाएको सो गीत नेवार समुदायका युवामाझ अत्यन्तै लोकप्रिय भएको थियो भने काठमाडौंबासी गैरनेवार समुदायका युवाहरूले समेत मनपराएका थिए । अहिलेसम्म पनि मान्छेहरूले यो गीत बिर्सेका छैनन् । यो गीतको बोल रक एण्ड रोलको लागि साह्रै सुहाउँदो छ र त्यसका एकएक शब्द रक एण्ड रोल सङ्गीतसँग अत्यन्त मिल्दो छ । वास्तवमा त्यो गीत नेपालकै पहिलो पाश्चात्य शैलीको गीत थियो ।[५९] त्यसकै एक वर्षपछि प्रेमध्वज प्रधानकै स्वरमा रिकर्ड भएको उनको अर्को गीत 'पिलिपिलि पिलिक्क' भन्ने रक एण्ड रोल गीतको बोल पनि सङ्गीतलाई त्यतिकै सुहाउँदो छ ।

उनले हिन्दीका लोकप्रिय गीतहरूमा समेत नेपालभाषाका शब्द त्यतिकै सुहाउँदो किसिमबाट हाली गीतरचना गरेका छन् । यस्तो चलन धेरै पहिला डबली नाटकका गीतहरूमा गरिन्थ्यो भने हालै प्रकाशित 'नेवाः बलिउड' सि.डी.मा पनि लता मंगेशकर आदिले गाएका हिन्दी गीतहरूको लयमा मिल्ने गरी नेपालभाषामा मौलिक गीतहरू रचेका छन् । त्यस्ता गीतहरूको बोलमासमेत भावको उच्चता छ ।

**ग) भाषाप्रेम र जातिप्रेमका गीत**

दुर्गालालमा जातीय चेतनाको कविता अलि आगडि रचिएको[६०] भए पनि गीतको रचना वि.सं २०१७ बाट भएको देखिन्छ । उनको भाषाप्रेम र भाषिक असमानता विरुद्धका गीतहरू सर्गःसिबे नं धरती नमिंग्वः गीति सङ्ग्रहमा सङ्कलित छन् । यी रचनाहरू विद्यालय, कलेजका कार्यक्रम र विभिन्न संस्थाका सम्मेलनहरूमा गाइएका गीतहरू हुन् । सो पुस्तकमा गीतको अन्त्यमा तत्तत् कार्यक्रम, स्थान र साल लेखिएका छन् । सो हिसाबले यी गीतहरू दुर्गालालले आयोजक र सहभागीहरूको अनुरोधमा ती कार्यक्रमहरूकै लागि भनेर लेखेको प्रतीत हुन्छ । आयोजकहरूले स्वागत गीत लेखनको लागि पनि उनलाई गुहार्थे । त्यसैले भाषिक कार्यक्रमका थुप्रै स्वागतगीतहरू पनि उनले रचेका छन् ।

---

[५९] नेपाली भाषामा पाश्चात्य शैलीको पहिलो गीत सन् १९६७ मा रेकर्ड भएको थियो । कुमार बस्नेतको स्वरमा रहेको त्यो गीतको बोल थियो 'दिउँला, यो जोबन तिमीलाई दिउँला' ।

[६०] दुर्गालालको पहिलो कविता सङ्ग्रह झसुकाः (२०१४) को अन्तिम कविता (बिनाशीर्षकको) 'नेपाल सम्वत् ११७७ नयाँवर्षको सन्दर्भ'मा लेखिएको छ, जसमा शङ्खधरको इतिहासको अगाडि नेवारजातिको वर्तमान धूमिल भएको भाव व्यक्त छ ।

उनले भाषाप्रेमका गीतहरू २०२२ सालमा बढी रचेका देखिन्छन् । त्यस वेला रेडियो नेपालले नेपालभाषामा चलाइरहेको जीवन दबू कार्यक्रम तत्कालीन प्रशासनले बन्द गरेको थियो । त्यसैको विरोधमा नेवारहरूले टोलटोल गाउँगाउँमा कार्यक्रमहरू गरेका थिए । त्यो एउटा आन्दोलन नै थियो । दुर्गालाल पनि त्यस आन्दोलनका सहभागी थिए । उनले भाषिक दमनको विरोधमा थुप्रै गीतहरू त्यसै वेला रचेका थिए । तिनै कार्यक्रमहरूमा गायकहरूले उनका गीतहरू गाउँथे ।

उनका मातृभाषाप्रेमका गीतहरू सरल र सहज छन् । तर पनि तिनमा आफ्नो भाषामा पढ्न नपाएको दुखेसो, भाषाप्रति राज्यस्तरबाट अख्तियार गरिएको भेदभावपूर्ण नीति र आफ्नो भाषा स्वाभाविक रूपमा फल्नफुल्न नपाएको आदि कारणले चित्त दुःखेको मर्मस्पर्शी भाव गम्भीर रूपमा व्यक्तिएका छन् । शायद यो उनको आफ्नै मनभित्रको चोट बोलेकोले होला भाषाप्रेमका गीतहरू अत्यन्तै सहज र स्वाभाविक रूपमा बगेका छन् । भाषिक र सांस्कृतिक दमन र असमानताको चोट बोकेका नेवारजातिका हृदयका लागि ती गीतहरू आफ्नै अन्तरात्माको आवाजभैंm प्रतीत हुन्छन् । त्यसैले त्यस वेला त ती गीत लोकप्रिय भए नै, साथै त्यति वेला रचिएका ती गीतहरूको लोकप्रियता हालसम्म पनि जस्ताको तस्तै छ । त्यस वेला रचिएका गीतहरूमध्ये केही चुनेर 'लसय् हंगु विरोध' गीति सङ्कलन क्यासेट पनि निस्केको छ । त्यसका केही गीतका नमूनाहरू यसप्रकार छन् :

नुगलय् मि तयाः स्वागत यायेगु जिमित इलं थौं सयेका बिल
जिमि नं मन दु स्वां थें न्हिलेगु किन्तु मिखां मोति हंके बिल

(अर्थात्, मनमा आगो बाली स्वागत गर्न समयले हामीलाई सिकाइदियो । हाम्रो पनि मन छ फूलभैंm हास्ने तर आँखाले मोती गाँस्न लगायो ।)

भीगु भाषा मन्त धाःसा गय् थ्व नेपाः भीगु जुइ
थःगु देय् परदेश जुइकाः म्वायेगु हे नं सीगु जुइ

(अर्थात्, हाम्रो भाषा नभए यो नेपाल कसरी हाम्रो हुन्छ । आफ्नो देश परदेश बनाई बाँच्नु नै पनि मर्नु हुन्छ ।)

घाः जुयाः जक ख्वैगु खः भी स्याःगुलिं सः तैगु खः
भी मसीनि, भी मसीनि धैगु चिं जक ब्वैगु खः

(अर्थात्, घाउ भएकोले मात्र हामी रोएका हौं, दुखेकोले कराएका हौं । हामी मरेका छैनौं भन्ने चिन्ह मात्र देखाएका हौं ।)

उनले नेवार संस्कृति र नेपाल सम्वत्सम्बन्धी पनि धेरै गीतहरू रचना गरेका छन् । ती गीतहरूमा नेवारजातिको सांस्कृतिक धरोहर, पुर्खाको पौरख र विशाल हृदयको

गौरवगाथा गाएका छन् भने अहिलेका नेवारहरूमा व्याप्त व्यक्तिगत स्वार्थीपना, जातीय सचेतताको अभाव र खस्किएको स्थितिबारे असन्तुष्टि र व्यङग्य भाव प्रकट गरेका छन् ।

**घ) बालगीत**

दुर्गालालले थुप्रै बालगीतहरूको रचना गरेका छन् र धेरै लोकप्रिय पनि भएका छन् । नेपालभाषामा चिनियाम्ह किसिचा र ताइभाबा र नेपालीमा कागजको डुङ्गा, चिरिबिरी छन् । उनको बालगीतको क्यासेट नेपालभाषामा 'चुलिचिया चंचं'(भाग १ र २) र नेपालीमा 'कागजको डुङ्गा' छन् । साथै उनका थुप्रै बालगीतहरू पत्रपत्रिकाहरूमा प्रकाशित पनि छन्, जुन पुस्तकमा सँगाल्न बाँकी नै छन् । उनले एकताका सन्ध्याटाइम्सको शुक्रवासरीय परिशिष्टाङ्कमा नियमित रूपमै बालगीत लेखेका थिए । उनका बालखण्डकाव्यहरू पनि वास्तवमा बालगीतिकथाहरू नै हुन् ।

उनका बालगीतका सम्बन्धमा विस्तृत चर्चा यसै परिच्छेदमा बालसाहित्यकार व्यक्तित्व (३.१.३) मा गरिने छ ।

**ङ) प्रगतिशील तथा राष्ट्रिय भावनाका गीत**

दुर्गालालको राजनीतिक विश्वास वामपन्थी विचारधारामा छ । उनले २१ वर्षको उमेरमा नै प्रगतिशील गीत लेखेको पाइन्छ । ने.सं. १०७५ मा लिखित सो गीत र अन्य प्रगतिशील गीतहरू सर्गःसिबे नं धरती नमिंग्वाः मा सङ्कलित छन् । निम्नवर्ग, किसान र मजदूरको दुखःदर्द र विवशता पोख्ने थुप्रै गीतहरू प्रेमगीतका सङ्कलनहरूमा पनि परेका छन् । केही बालगीतले पनि गरिबको पक्ष लिएका छन् र गरिबीको निसहायपन कतै मनै छुने र कतै हास्यव्यङ्ग्यात्मक रूपमा रहेका छन् । तर सर्गःसिबे नं धरती नमिंवाःमा विशुद्ध क्रान्तिका गीतहरू छन् । ती विद्रोहका भावले पूर्ण गीतहरू सरल र लयात्मक भएकाले जनतालाई सजिलै प्रभाव पार्ने खालका छन् । त्यसका केही गीतहरूमा तत्कालीन प्रशासनले प्रतिबन्ध पनि लगाएको थियो ।

सर्गःसिबे नं धरती नमिंग्वाःमा सङ्कलित केही प्रगतिशील गीतका हरफहरू यस्ता छन्ः

दँ छात्र, वर्ण, वर्गभेद मतस्य साम्यभाव ज्वँ
थ्व ख्युँगु देश त्वीके माल, क्रान्तिया मशाल ज्वँ

(अर्थात्, उठ छात्र वर्ण, वर्ग भेद नराखी साम्यभाव लेऊ, यो अँध्यारो देश उज्यालो पार्नुपर्‍यो, क्रान्तिको मशाल समाऊ ।)

बन्द कण्ठ चायकि का, लिकुंगु सः पिका

दम्म हुस्स चीकि का, तुयूगु जः पिका

(अर्थात् बन्द कण्ठ खोल लौ, अड्केको आवाज निकाल । बाक्लो कुहिरो पन्छाऊ लौ, उज्यालो किरण निकाल।)

भ्रीगु गीत, भ्रीगु नाद इन्कलाब
ख्वःम्ह धर्तिया पुकार इन्कलाब
इन्कलाब, इन्कलाब, इन्कलाब

(अर्थात्, हाम्रो गीत, हाम्रो नाद इन्क्लाब ! रोएको धरतीको पुकार इन्क्लाब ! इन्क्लाब ! इन्क्लाब ! इन्क्लाब !)

उनले राजनीतिक विचारबाट निरपेक्ष शुद्ध राष्ट्रिय भावनाका गीतहरू पनि लेखेका छन्। उनले लोकलय र संस्कृत छन्द दुवैमा राष्ट्रिय गीतहरू लेखेका छन् । संस्कृत छन्दका गीतहरू आधुनिक लयमा गाइएका छन् ।

उनले नेवारी लोकलयमा लेखेको 'ख्वाल जि नःलि नःलि स्वान चुलि'[६१] गीतमा नेपाललाई एउटी नेपाली सुन्दरीको रूपमा मानवीकरण (humanisation) गरी वर्णन गरेका छन् । यसमा मेची र महाकालीलाई उनका दुई चुल्ठा भनिएको छ भने हिमाललाई शिरताज, तराईको कालो जङ्गललाई गाजल र तराईकै बालीलाई पाउजु भनिएको छ । यसमा देशको सुन्दरताको वर्णनको साथसाथै राष्टिय एकताको भावना पनि झल्किएको छ ।

त्यस्तै उनको 'जिगु देश छ यः' आधुनिक गीत धेरै गायकहरूले विभिन्न कार्यक्रमहरूमा गाएको गीत हो । यसमा देशप्रतिको असीम माया व्यक्तिएको छ । तर कुनै गीतहरूमा राष्ट्रिय भावनाको साथसाथै राज्यमा वर्गीय र जातीय विभेदप्रति असन्तुष्टि पनि मिसिएर आएको पाइन्छ। यस्तो भाव उनको 'यः जितः नं जिगु देश यः तर गन दु ग्व जिगु देश'[६२] मा प्रकट भएको छ । यसमा उनले आफ्नो देश त प्यारो छ तर गरिबले आफ्नो देश कहाँ छ भनी खोज्नु पर्ने अर्थात् यो देश गरिबहरूको लागि नभएको भाव व्यक्त गरेका छन् ।

### च) जीवनदर्शनसम्बन्धी गीत

जीवनदर्शनसम्बन्धी गीतहरूमा उनले धेरैजसो बौद्ध दर्शनमा आधारित गीतहरू लेखेका छन् । हुन त लिसं मा नै बौद्धदर्शनमा आधारित केही कविता परेका छन् । विद्रोहका गीतहरूको सँगालो भए तापनि सर्गःसिबे नं धरती नमिंग्वाः मा एउटा

---

[६१] दुर्गालाल श्रेष्ठ, लुँबुँ वहबुँ, दोस्रो संस्करण, (काठमाडौं : प्रदीप्त पुस्तकालय, ने.सं. १०९०), पृष्ठ ११-१२ ।
[६२] दुर्गालाल श्रेष्ठ, जि स्वयम्भू त्वाथः, पूर्ववत्, पृष्ठ ८१-८२ ।

बौद्धगीत परेको छ । यो गीत ने.सं. १०८८ को वैशाख पूर्णिमाको अवसरमा बुद्ध जयन्ती समारोह समिति, पाटनद्वारा आयोजित समारोहमा सुनाउनका लागि लेखिएको हो । बौद्धदर्शनमा आधारित उनका नेपालभाषाका गीत, भजन 'ज: मालाच्वंगु सः' (ज्योति खोजिरहेको आवाज) र 'सुमिरणया भगवन्' (सुमिरण गर भगवन्) क्यासेटमा सङ्ग्रहित छन् । उनका केही बौद्ध भजन ज्ञानमाला भजनसङ्ग्रहमा पनि सङ्कलित छन् । नेपालीमा लिखित उनका बौद्ध गीतहरू आनी छोइङ डोल्माद्वारा गाइएको 'Moment of Bliss' (आनन्दका क्षणहरू) क्यासेट तथा सी.डी.मा छन् । 'फूलको आँखामा फूलै संसार, काँढाको आँखामा काँढै संसार' गीत त अत्यन्त्य लोकप्रिय भइ नै हाल्यो, जुन सम्पूर्ण नेपालमा मात्र होइन नेपाली नबुझ्ने विदेशीले समेत मन पराएका छन् । सोही सङ्कलनको अर्को गीत 'खेल्दै थिए बच्चाहरू रम्दै दिनभर, बनाउँदै चउरमा बालुवाको घर'मा बौद्धधर्मको अनित्यता-क्षणभङ्गुरताको दर्शन झल्केको छ । वास्तवमा उनका बौद्धभजनहरू स्तुतिपरक नभई दर्शनको सरल, व्यावहारिक र कवितात्मक प्रस्तुति हो । दर्शनगर्भित गीतहरूमा मात्र होइन, प्रेम, भाषाप्रेम, प्रगतिशील आदि सबै गीतमा उनका यी विशेषता रहेका छन् । नेपालभाषा नबुझ्ने नेपालीहरूले उनका अन्य गीतहरूको शैली र भाषाको अन्दाज 'Moments of Bliss' का गीतबाट पनि गर्न सक्दछन् ।

उनका प्रारम्भिक कविता हेरी समालोचकहरूले उनलाई गायक-कवि मात्र हुन् दार्शनिक-कवि होइनन् भने तापनि उनका पछिल्ला कृतिहरूमा विस्तारै गीतमा नै दर्शनको प्रादुर्भाव हुँदै आएको छ । दार्शनिक-कवि बन्ने लोभमा उनले कृतिम रूपमा दर्शनगर्भित कविता लेखेनन् । बरु आफ्नो मूलस्वभावले दिएअनुसार गीतहरू नै रचिरहे । जीवनको अनुभवबाट खारिँदै निखिँदै उनका गीत र गीतात्मक कविताहरूमा स्वतः दर्शनहरू टुसाउन थाले । उनका पछिल्ला कविता र गीतहरूमा वैचारिक दर्शन नभए तापनि त्यसभन्दा सशक्त जीवनको अनुभवबाट खारिएका जीवनदर्शनहरू सरल र सहज रूपमा प्रकट भएका छन् ।

### छ) शोक-कविता वा शोक-रामायण

हिन्दू धर्मावलम्बी नेवारहरूमा मर्दा मरेको मानिसको सम्झनामा गीतगाउँदै मलामी जाने चलन छ । त्यस्तो गीतलाई 'रामायण' अथवा भनूँ 'शोक-रामायण' भनिन्छ, जुन एक किसिमको शोकगीत हो । दुर्गालालले धेरैजनाको मृत्युमा त्यस्ता रामायण लेखेका छन् । उनले आफ्नी साली अर्थात् दर्शनदासकी बहिनी गुणकेशरी, गजलकार मोहनकाजीकी आमा लक्ष्मीवाणी र नगदेशका वाद्यगुरु लक्ष्मीनारायणलगायत अन्य धेरैजनाको मृत्युमा रामायण लेखिदिएका छन् । लक्ष्मीवाणी रामायण, गुरुनारायण महर्जन मदुगुया बिचाः हना (गुरुनारायण महर्जनको समवेदना) र नगदेशया वाद्यगुरु लक्ष्मीनारां (नगदेशका वाद्यगुरु लक्ष्मीनारां) पुस्तिकाको रूपमा प्रकाशित भएका छन् । उच्च कोटिका कवि भएर पनि उनले परम्परागत काममा नाइँनास्ति गर्ने नगरेका प्रमाण हुन् यी ।

### ३.१.३ बालसाहित्यकार व्यक्तित्व

दुर्गालाल श्रेष्ठ एक सफल बालसाहित्यकार पनि हुन् । उनले थुप्रै मौलिक बालसाहित्यको रचना गरेका छन् । साथै अन्य भाषाका बालसाहित्यको अनुवाद पनि गरेका छन्। कतिपय कृतिहरू अन्य भाषाका कृतिमा आधारित रहेर आफ्नै किसिमले रचेका पनि छन् । उनका बालसाहित्य कृतिहरूमा बालगीत, बालकविता, बालगीतिकथा (खण्डकाव्य) छन् । उनले दशवटा चिनियाँ बालकथा नेपालभाषामा अनुवाद पनि गरेका छन् । ती कथाको सङ्ग्रह 'मचाबाखंचा' नामबाट प्रकाशित भएको छ । मौलिक तथा अनुवाद दुवै गरी उनका बालसाहित्य कृतिहरू एक दर्जनभन्दा बेसी प्रकाशित भइसकेका छन् भने अझै थुप्रै रचनाहरू पुस्तकाकारमा प्रकाशनमा आउन बाँकी छन् ।

कवि दुर्गालाल बालसाहित्यतिर ढल्किनुको कारण शिक्षण पेशाले बालबालिकासँगको सानिध्यमा रहनाले हो । उनले युवावस्थाको सुरुदेखि नै शिक्षण पेशा अँगालेका थिए । सुरुमा उनले प्राथमिक तहमा पढाएका थिए । त्यसैले उनले बालबालिकाहरूसँग भिज्ने अवसर पाएका थिए । बच्चाहरूसँग आफू पनि बच्चै भएर घुलमिल हुने उनको स्वभाव थियो । कथा सुनाउँदा पनि कथामा आउने प्रसङ्गसँग मिल्दो स्वरमा लयात्मक तालमा भन्ने गर्थे । कविताभन्दा पूरै लय हालेर पढ्थे । विद्यार्थी नानीहरू पनि उनको स्वरमा स्वर मिलाएर गाउँथे । उनकै नक्कल गर्ने कोसिस गर्थे ।

त्यसै वेलादेखि उनले बालगीतहरू रचना गरेर विद्यार्थीहरूलाई सुनाउने गरेका थिए । विशेष गरेर उनले उपत्यकामा ऋतुपर्वहरूमा गाउने गीतका लयको आधारमा गीत रचना गर्थे, जस्तै साउनभाद्रमा सिलु गीतको लयमा, पाहांचह्रेको (पिशाच चतुर्दशी वा घोडाजात्रा) वेला धातुगीतको लयमा, दशैंताका मालश्रीको लयमा र तिहारको वेला धनाश्रीको लयमा । यसरी उनले विद्यार्थीहरूलाई गीतकै माध्यमबाट धेरथोर ऋतुगीतहरूको ज्ञान पनि दिने गरेका थिए ।

साथै उनका बालगीतहरू सङ्कलनका रूपमा प्रकाशनपूर्व नै विद्यालयका कार्यक्रमहरूमा गाइने गरिन्थे, ती गीतहरूमा नृत्य प्रस्तुत गरिन्थ्यो । केही छोटा कथासहितका अलिक लामा गीतका बोलमा छोटो भावनृत्य (ballet) पनि प्रस्तुत हुन्थ्यो ।[६३] त्यसैले उनका धेरै बालगीतहरू सङ्कलित भई पुस्तकका रूपमा प्रकाशन हुनु अघि नै लोकप्रिय भइसकेका हुन्थे ।

उनको पहिलो बालगीत सङ्ग्रह चिनियाम्ह किसिचा (मिश्रीको हात्ती) २०२१ सालमा मात्र प्रकाशनमा आएको थियो भने त्यसको एक वर्षपछि नै ताइभाबा (चन्द्रमा) प्रकाशित भएको थियो । तर उनले बालगीत शिक्षण पेशाको सुरुवात अर्थात् २०१३ देखि नै रचना गरेको हुनुपर्छ । सङ्कलित भएर पुस्तकाकार लिन मात्र धेरै वर्ष लागेको हुनुपर्छ । एकै वर्षको अन्तरालमा दुई सङ्ग्रह निस्केकाले पनि यस तथ्यको पुष्टि गर्दछ ।

---

[६३] जस्तै, चिनियाम्ह किसिचाको 'मायाचा' भन्ने गीतमा भावनृत्य प्रस्तुत भएको थियो ।

यी दुई मौलिक बालगीत सङ्ग्रहपछि २०२३ र २०२४ सालमा क्रमशः चिनियाँ बालकविताका दुई अनूदित कृतिहरू चिनिया चम्पा (चिनियाँ चम्पा) र कुलिकासा (मित्रताको खेल) प्रकाशित भएका छन् । यिनमा सङ्ग्रहित कविता चिनिया सांस्कृतिक क्रान्तिताका रचेका र कम्युन जीवनको झल्को भएका बालकविता हुन् । त्यसपछि उनको लामो रचना बालगीतिकथा वा बालखण्डकाव्यहरू प्रकाशित भएका छन् । त्यस वेला उनले बालकविता वा बालगीतहरू नरचेका होइनन्, तर सङ्ग्रहका रूपमा प्रकाशित नभएका मात्र हुन् । पछिल्ला बालगीत सङ्ग्रहमा कागजको डुङ्गा र चिरबिरी छन् । नेपालीमा प्रकाशित यी बालगीत सङ्ग्रहहरू पनि नेपालभाषाका बालगीतहरू जस्तै सरल, सरस र लयात्मक छन् ।

उनका बालगीतिकथा वा बालखण्डकाव्यहरूमा सलछ्योंया बेला (घोडेटाउके बेला, २०२५), उलिंचा बाखं, ह्यू खः थ्व छगू तुङ्गोया (एउटा परिवर्तन हो यो तुङ्गोको, २०५५) र सन्तको छाता (२०५८) छन् ।

सलछ्योंया बेला चिनियाँ लोककथामा आधारित बालगीतिकाव्य हो । उलिंचा बाखं थुलिं अलेक्जाण्ड पुश्किनको माझी र सुनको माछा को नेपालभाषामा अनुवाद हो भने उनले फेरि सोही कृतिमा केही मौलिकता थपी नेपालीमा इच्छाको सिमाना नामबाट प्रकाशित गरेका छन् । ह्यू खः थ्व छगू तुङ्गोया चिनियाँ लोककथामा आधारित बालखण्डकाव्य हो । सन्तको छाता (नेपालभाषामा सन्तया कुसा नामबाट सहप्रकाशन भएको) भने उनको बालसाहित्यको उत्कर्ष नै हो । यसमा मौलिक कथातत्व छ भने कल्पनाशीलता पनि उच्चकोटिको छ । हुन त लयात्मकता, भाषिक मृदुलता र आवश्यक ठाउँमा भनाइमा चोटिलोपना सलछ्योंया बेला र इच्छाको सिमाना मा पनि उत्तिकै देख्न सकिन्छ । तर सन्तको छाता मा कल्पनाको उँचाइ धेरै माथि छ र बालकाव्यमा नै यो एउटा दरिलो दर्शन पनि दिन सक्षम भएको छ ।

विषयवस्तुको हिसाबले दुर्गालालले विविध विषयमा बालगीत रचना गरेका छन् । उनका विषयवस्तुहरूमा प्रकृति, जनावर, बालबालिकासँग सम्बन्धित खेलौना, सामग्रीहरू, सामाजिक जीवन आदि छन् । कतै उनी पूरै बालक भएर रमाइलो विषयमा मात्र केन्द्रित भएका छन् भने कति ठाउँमा सामाजिक विसङ्गतिहरूलाई पनि बालगीतको विषय बनाएका छन् । त्यस्तो गीतमा किसान, मजदूर आदिको जीवन चित्रित छन्, जस्तै ताम्राकार, वैद्य, कुह्माले आदिका । तर उनी बामपन्थी विचारधाराका भएर पनि तिनमा प्रगतिशीलताको नाराबाजी भने छैन । बरु जीवनका विसङ्गति र विवशता, कतैकतै हल्का हास्यव्यङ्ग्यमिश्रण गरेर, चित्रण भएका छन् । आफैंले कम्युनिस्ट सिद्धान्तको बालगीत नलेखे तापनि उनले चीनको सांस्कृतिक क्रान्तिताकाको कम्युन जीवन झल्किने चिनियाँ बालकविताहरू अनुवाद गरेका छन् । चिनिया चम्पा र कुलिकासा त्यसका उदाहरण हुन् । कुनैकुनै गीतमा भने खाते, अपाङ्ग बालबालिकालाई पनि विषयवस्तु बनाएका छन्, जुन गीतहरू पूर्ण रूपमा करुण रसका छन् ।

संसारमा नै बालसाहित्यलाई गाह्रो विधाको रूपमा लिइन्छ, किनभने बालबालिकहरूले बुझ्ने भाव र भाषा प्रयोग गरी बालबालिकाहरूको मनमा पस्नु सजिलो कुरा होइन । तर दुर्गालालको बालसाहित्य पढ्यो भने उनले सहजतापूर्वक नै यस्तो गाह्रो कामलाई फत्ते गरेको देखिन्छ । उनका बालगीत र बालखण्डकाव्यहरू मौलिक हुन् वा अनूदित, नेपालभाषामा होस् वा नेपालीमा, बालबालिकाहरूका लागि उपयुक्त भाषा र भावसहितका छन्, लयात्मकताले प्रचुर भएर चित्ताकर्षक बनेका छन् । ती भाषामा सरल भएर पनि भावमा गम्भीर छन् । तिनमा बालबालिकाहरूका लागि उपयुक्त प्रतीक र उपमाहरू, वाक्यांश र टुक्काहरू प्रयोग भएका छन् ।

जुन कृतिहरूमा सम्पूर्ण रूपमा बालभाषा प्रयोग गर्न कतै केही चुकेका छन् त्यहाँ उनले इमान्दार भएर त्यस कुरालाई स्वीकारेका छन् । ह्यू खः थ्व छगू तुङ्गोयाको मन्तव्यमा उनले कृतिलाई राम्रो बनाउने लोभमा बाल-खण्डकाव्य लेख्ने लक्षमा इमान्दार हुननसकेको र त्यो आफ्नो कमजोरी भएको स्वीकार गरेका छन् । त्यस्तै चिरिबिरी मा पनि त्यसमा सङ्कलित बालगीतका केही विषयवस्तु बालरुचिसँग ठ्याक्क मिल्न नसकेको बताएका छन् ।[६४] यस हिसाबले उनी बालसाहित्यका तत्त्वप्रति सम्वेदनशील लेखक हुन्, जसलाई आफू कहाँ चुकेका छन् भन्ने कुराको सचेतता पनि छ ।

तर उनी कवि धेरै र शिक्षाविद् वा बालमनोविज्ञ कम भएकाले उनका बालसाहित्यहरूमा कुन उमेरवर्गका बालबालिका र कुन तहका विद्यार्थीका लागि उपयुक्त कृति हो भन्ने कुरा उल्लेख छैन । एउटै कृतिमा पनि फरक-फरक उमेर र तहका लागि सुहाउँदा रचनाहरू सङ्कलित छन् । हुन त त्यसरी बालशिक्षा (pedagogy) अनुसार बालसाहित्य कृति निकाल्ने चलन हालसम्म पनि नेपालमा सुरु भएको छैन । वास्तवमा यस्तो कुरा साहित्यकारबाट मात्र सम्भव कुरा पनि होइन । त्यो साहित्यकारका कृतिलाई विज्ञ सम्पादकबाट सम्पादन हुँदा मात्र सम्भव हुने कुरा हो ।

वास्तवमा उनका पुस्तकाकार रूपमा प्रकाशित साहित्यका कृतिको सङ्ख्या गन्ने हो भने बालसाहित्यले अन्य साहित्य कृतिलाई पनि जितेका छन् । साथै उनका अप्रकाशित र सङ्ग्रहित हुन बाकी बालगीत/बालकविता पनि थुप्रै छन् । बालकविता र बालगीतका सर्जकका रूपमा नेपालभाषाको बालसाहित्यको क्षेत्रमा दुर्गालाल श्रेष्ठ गुणात्मक र सङ्ख्यात्मक दुवै हिसाबले अद्वितीय प्रतिभाका रूपमा रहिरहेका छन् । उनले जति बालकविता रच्ने कवि न त अरू छन् न उनको लयात्मकता र बालसुलभभाषाको उच्चतालाई अरू कसैले छुन सकेका छन् । नेपाली भाषामा नै पनि उनले आफ्नो बालसाहित्यिक व्यक्तित्वको उचाइ प्रदर्शन गरेका छन्, जुन हत्पती अरूले छुन गाह्रो नै छ । प्रौढकवितामा उनीभन्दा सशक्त कविता लेख्ने होलान्, नाटकमा

---

[६४] 'चिरिबिरी बालोपयोगी कविताको किताब हो । यसलाई मैले बालकविताको संज्ञा दिन सकिनँ, कारण बालहृदय भएर पनि ममा अझै बालसुलभ अभिव्यक्तिको अभाव छ ।' दुर्गालाल श्रेष्ठ, 'निवेदन', चिरिबिरी, (काठमाडौं : मूल्याङ्कन प्रकाशन गृह प्रा.लि., २०६१), पृष्ठ ३ ।

उनीभन्दा राम्रा नाटककार होलान्, तर नेपालभाषामा त उनी जत्तिको राम्रो बालकविता रच्ने कवि आजसम्ममा अरू देखिंदैन ।

### ३.१.४ नाटककार व्यक्तित्व

दुर्गालाल श्रेष्ठ कविका रूपमा बढी परिचित भए तापनि उनको लेखनको सुरुवात भने नाटकबाटै भएको पाइन्छ, त्यो पनि पूर्णाङ्की नाटकबाट । एघारै वर्षको उमेरमा पूर्णाङ्की नाटक लेख्ने उनले सचेत रूपमा लेखनधर्म थालेपछि एकाङ्की, पूर्णाङ्की, गीतिनाटक आदि लेख्न थाले । हुन त उनको साहित्यिक व्यक्तित्व जति कविको रूपमा व्यक्तिएको छ, त्यति नाटककारको रूपमा छैन । यसको कारण हो, उनी कविता जसरी स्वाभाविक रूपमा आफ्नो मनमा उब्जेका भावमा बगेर लेख्ने गर्छन्, नाटक त्यसरी लेख्ने होइनन् । पहिलो नाटक जसरी परिस्थितिको कारण लेखेका थिए, त्यसपछि पनि परिस्थितिको आवश्यकता पूरा गर्न मात्रै लेख्ने गरेको देखिन्छ । कवि भएकैले पनि होला उनका गीतिनाटकहरू बढी साहित्यिक, सरस र प्रभावपूर्ण छन् ।

उनले नाटक कसरी लेख्ने गरेका छन्, यस सम्बन्धमा उनको आफ्नै भनाइ छ : *"कथा आँखामा झल्किँदा नाटक बन्छ । मैले धेरै नाटक पनि लेखेको छैन । फेरि मैले नाटक लेख्नु पऱ्यो भनेर मनमनै कथा रचेर, त्यसलाई महिनौंदिन गुनेर, आमा बन्ने गर्भवती आइमाईले पेटको बच्चालाई स्याहार गरी जन्माएजस्तै गरी नाटक लेख्ने मान्छे पनि म होइन । कसैले लेख्नुपऱ्यो भन्छ, अनि लेखिदिने हो । त्यो पनि आफू मूड (mood) मा डुबेर कराइदिने मात्रै हो, लेख्ने (टिप्ने) मान्छे त अर्कै हुन्छ । नाटक देखाउनेहरू पहिला जान्नेसुन्नेहरू कहाँ गएर हात थाप्न जान्छन् । तिनीहरूकहाँबाट हार खाएपछि मकहाँ आउँछन् । मकहाँ आएपछि नाटक बन्छ । त्यसरी लेखिने भएकोले मेरो नाटकमा नाटकलाई चाहिने भित्री तत्व नभएको पनि हुनसक्छ ।"*[६५]

यसै कुरालाई अनुसन्धाता माधवलाल प्रधानले दुर्गालालको एङ्काकीसम्बन्धी शोधपत्रमा यसरी लेखेका छन् : "दुर्गालाल प्रतिभाशाली नाटककार हुन् । नाटकको लागि आफ्नो विचारमा डुबेर बौलाहाजस्तै कराउँदा डिक्टेट गर्नेको कापीमा नाटक बनिसक्छ । एउटादुईटा सिटिङ्गमा नै वहाँले सशक्त नाटक रच्नसक्नुहुन्छ यो धेरै साथीहरूलाई थाहा भएको कुरा हो ।"[६६] सोही शोधपत्रमा भृगुराम श्रेष्ठसँग लिइएको अन्तर्वार्तामा भृगुराम भन्छन् : दुर्गालालले लेख्ने धेरैजसो निद्रा नलाग्दा हो । अँध्यारोमा पनि लेख्नसक्छ उसले । नाटक लेख्न (उसलाई) एकान्त चाहिन्छ । लेख्दाखेरि धेरैजसो आफैं नलेखी अगाडि जो छ उसलाई डिक्टेट (dictate)गराउँछ । उसले खररर भन्छ, हामी डिक्टेट गर्छौं । डिक्टेट गर्ने कहिले म हुन्छु त कहिले श्रीकृष्ण 'अणु' वा अगाडि

---

[६५] सुरेश, 'जिगु नाटक जिम्ह पात्र', <u>सन्ध्याटाइम्स</u>, ने.सं. ११२४ नयाँ वर्षको विशेष परिशिष्टाङ्क, पृष्ठ ३४ ।

[६६] माधवलाल प्रधान, <u>दुर्गालालया एकांकी नाटक : छगू अध्ययन</u> (शोधपत्र), पूर्ववत्, पृष्ठ ९९ ।

जो छ उही (पनि हुन्छ) । डिक्टेट गरिसकेपछि उसलाई सुनाउँछु, अनि उसले करेक्शन (correction) गर्छ ।"[६७]

आजभन्दा चारपाँच दशकअघि टोलटोलमा देखाइने डबलीनाटकको प्रचलन थियो भने, एकदुई दशकअघि राष्ट्रिय सभागृह, प्रज्ञाप्रतिष्ठानमा कलेज, सङ्घसंस्था आदिबाट नाटक प्रदर्शन र प्रतियोगिताहरू भइरहन्थे । यस्तोमा कलेज, सङ्घसंस्थाहरूलाई नाटकको आवश्यकता हुन्थ्यो। त्यसको लागि ती मण्डली दुर्गालालकोमा आउँथे । दुर्गालालसँग तयारी नाटक त हुँदैनथ्यो । तर उनी कसैलाई खाली हात फर्काउँदैनथे । त्यही मण्डलीलाई कलम समाउन लगाई आफूले केही भावाभिव्यक्तिसहित संवादआदि भन्थे । उनका धेरै नाटकहरू श्रीकृष्ण 'अणु' ले (जो आफैं पनि नाटककार, निर्देशक र अभिनेता थिए) टिप्ने काम गरेका थिए ।

वास्तवमा दुर्गालाल नाटककारमात्र नभई नाटकका कलाकार, निर्देशक र सल्लाहकार पनि हुन् । उनले आफ्नोमात्र नभई अरुको नाटकमा पनि कलाकार, निर्देशक लगायत विविध भूमिका निर्वाह गरेका छन् । उनी डबलीसँग सबै किसिमले भिज्ने र तत्कालीन डबलीलाई बुझ्ने र डबलीमा नै रमाउने सम्पूर्ण रङ्गकर्मी हुन् । त्यसैले उनको नाटकमा संवादमात्र नभई मञ्चको सजावट, कलाकारको हाउभाउबारे पनि लेखिएको हुन्छ ।

उनले नाटक लेख्दा लेखकमात्र नभई तत्कालीन रङ्गमञ्चको सीमा बुझ्ने रङ्गकर्मी भई नाटक प्रदर्शनका व्यावहारिक समस्या समेतलाई ध्यानमा राखी नाटक रच्ने गरेकोले पनि उनको नाटक लेखनमा शुद्ध नाटककारको दृष्टिले केही कमी आएको हुनुसक्छ ।

दुर्गालालका नाटकबारे कुरा सुन्दा उनमा नाटककारको प्रतिभा मात्र होइन व्यावहारिक चातुर्य पनि प्रशस्त भएको देखिन्छ । मञ्चको खासै सुविधा नभएको र भनेजस्तो कलाकार नपाइने त्यस वेलाको अपर्याप्ततालाई ख्याल गरी त्यसै अनुरूप आफ्नो नाटक प्रदर्शन गर्न मिल्ने गरी चतुरतापूर्वक नाटक प्रदर्शनलाई व्यवहारिक बनाउन उनले त्यसैअनुरूप नाटक लेखेका धेरै उदाहरणहरू  छन् ।

पहिले पहिले नाटक बनाउने युवाहरूको एउटा जमात हुन्थ्यो । ती युवाहरूलाई मञ्चमा ल्याउन त्यसअनुसारको पात्र सिर्जना पनि गर्नु पर्दथ्यो । अर्थात् पात्रअनुसारको कलाकार होइन, कलाकारअनुसारको पात्र सिर्जना गर्नुपर्दथ्यो । त्यस जमातमा एकजना भकभकाउने मान्छे पनि थियो । उसलाई पनि नाटकमा खेलाउनु पर्ने भएको थियो । अब भकभकाउने मान्छेलाई कसरी नाटकमा उभ्याउने ? उनले त्यसको निम्ति बोल्न नपर्ने राजकुमारको चरित्र सिर्जना गरे । नाटकभरि उसले बोल्न पर्दैनथ्यो । नाटक

---

[६७] पूर्ववत्, पृष्ठ ११९ ।

प्रदर्शन हुँदै गएपछि मानिसहरूले उसलाई 'नबोल्ने राजकुमार' भन्नथाले र ऊ 'नबोल्ने राजकुमार'को रूपमा लोकप्रिय भयो ।[६८]

त्यस्तै 'व मिसा' (त्यो आइमाई) भन्ने नाटकमा नाटकको मूलपात्र त्यो आइमाई साह्रै सशक्त चरित्र थियो । तर त्यो आइमाई कहिल्यै पनि मञ्चमा देखापर्दैन । त्यसको कारण थियो, महिला पात्रको अभाव । दुर्गालालले चतुरतापूर्वक प्रमुख आइमाई पात्रलाई मञ्चमा ल्याउन नपर्ने गरी नै सशक्ततापूर्वक यस नाटकको सिर्जना गरेका छन् ।[६९]

तर गीतिनाटकको हकमा भने दुर्गालालले कथालाई गुनी सप्रयास कविता गीतहरू  लेख्थे । साथै सौन्दर्य वृद्धिको लागि धेरै सुधार्थे पनि । त्यसैले पनि उनको नाट्यप्रतिभा अन्यमा भन्दा गीतिनाटकमा बढी छचल्किएको पाइन्छ ।

दुर्गालालको नाटकको वर्गीकरण गर्दा स्वरूपको हिसाबले तीन प्रकारमा विभाजित गर्न सकिन्छ :

क) पूर्णाङ्की नाटक अथवा परम्परागत डबली नाटकको लागि रचिएका नाटकहरू । यस प्रकारका पूर्णाङ्की नाटक प्राथमिक चरणमा रचिएका थिए ।

ख) एकाङ्की नाटक : आधुनिक साहित्यको प्रभावपछि बन्द रङ्गमञ्चमा खेलाइन बनाइएका एकाङ्की नाटकहरू ।

ग) गीति नाटक : बौद्ध साहित्यमा आधारित गीति नाटकहरू । यी परम्परागत रूपमै रचिएका गीति नाटक भए पनि प्रदर्शनको हिसाबले आधुनिकताको प्रभाव पनि पाइन्छ ।

### क) पूर्णाङ्की नाटकका नाटककार

दुर्गालालले नाटक लेखनको सुरुवात डबली नाटक अर्थात् पूर्णाङ्की नाटकबाटै गरेका हुन्। पश्चिममा पनि एकाङ्की नाटक पूर्णाङ्कीको अनुज नै हो अर्थात् एकाङ्की पूर्णाङ्कीभन्दा पछि मात्र प्रादुर्भाव भएको हो । पूर्णाङ्की युगौंयुग पुरानो हो भने एकाङ्की आधुनिक युगको योगदान हो । दुर्गालालले नाटक थाल्दा नेपालमा कि त नेवार समुदायको डबली-नाटक (जसलाई ज्यापुप्याखं पनि भनिन्थो) कि त राणाहरूको दरबारमा खेलाइने उर्दू-अरबी-फारसी प्रभावका नाटक नै थिए । ती दुवै पूर्णाङ्की नै थिए । दुर्गालालको पहुँच र रुचि दुवै थरी डबली नाटकमा थियो । आधुनिक विश्व साहित्यसँग उनको त्यस वेला परिचय भएको थिएन । त्यसैले उनले परम्परादेखि चल्दै आएको आफूले देखेको डबली नाटकको लागि पूर्णाङ्की नै रचे । आफ्नै परम्पराको र

[६८] सुरेश, 'जिगु नाटक जिम्ह पात्र', सन्ध्याटाइम्स, ने.सं. ११२४ नयाँ वर्षको विशेष परिशिष्टाङ्क, पृष्ठ ३६ ।
[६९] पूर्ववत् ।

जनताको पहुँच पनि भएकोले वर्षौंसम्म उनी डबली नाटकमै रमिरहे । उमेर पनि किशोरावस्था भएकोले सबै अरू काम छाडी नाटकमै रमेका थिए । भनौं, उनको किशोरावस्था र प्रारम्भिक युवावस्था डबली नाटकमा नै बितेको थियो । त्यस वेला उनले आफ्नै चारवटा मात्र डबली-नाटक (पूर्णाङ्की) लेखेको भए तापनि अन्यका नाटकमा पनि अभिनय, निर्देशन आदि गरी सक्रिय भूमिका निर्वाह गरी नाटकमा रमेका थिए ।

आफ्नो लेखनको पूर्वकालमा दुर्गालालले निम्न पाँच पूर्णाङ्कीहरू (डबली नाटक) रचेका छन्:

१. प्रेम जीवन अन्धकार (बि.सं. २००४)
२. ग्राम्य जीवन (बि.सं. २००९)
३. पश्चाताप (बि.सं. २०११, प्रेमबहादुर कंसाकारको करुणाकुञ्ज मा आधारित)
४. त्याग (बि.सं. २०१४)

'प्रेम जीवन अन्धकार' मा खेलेका भृगुराम श्रेष्ठको सम्झनाअनुसार सो नाटक बालनाटक हो । खास त्यो दन्त्यकथाजस्तो देखिन्छ । त्यसमा राजा नै तीनवटा छन् । दुर्गालाललाई आँखामा घोच्ने जुन नाट्यसमूह थियो, त्यसको नाटकमा दुईवटा राजा भएकोले त्यसलाई जित्नुपर्छ भनेर दुर्गालालले आफ्नो नाटकमा तीन-तीनवटा राजा राखेका थिए । भृगुराम त्यसमा राजकुमार भई खेलेका थिए ।

युवा हुँदानहुँदै उनी राजनीतिक रूपमा सचेत भए र वामपन्थी विचारधाराबाट प्रभावित भए, जनताको निम्ति लेख्नुपर्छ भन्ने भावना आयो । त्यसपछि उनले किसान, मजदूर आदि निम्नवर्गीयको पक्षमा र शोषणको विरोधमा प्रगतिशील नाटकहरू लेख्न थाले । 'ग्राम्य जीवन' यस कोटिमा पर्छ । 'पश्चाताप' र 'त्याग' सामाजिक चेतनासहितका नाटक हुन् । 'पश्चाताप' प्रेमबहादुर कंसाकारले लेखेको करुणाकुञ्ज नाटकमा आधारित भई त्यसमा धेरै हेरफेर गरेर र गीतहरू थपी तयार गरिएको नाटक हो ।

**ख) एकाङ्कीकार**

दुर्गालालमा जसै साहित्यिक, सामाजिक, राजनीतिक चेतना आउँदै जान्छ उनले पूर्णाङ्की छोडेर एकाङ्की लेख्दै गएको पाइन्छ । त्यसैले उनको पूर्णाङ्कीमा भन्दा एकाङ्कीमा धेरै साहित्यिक धर्म छ र एकाङ्कीमा नै बढी सामाजिक, राजनीतिक सचेतता पाइन्छ ।

उनको पहिलो एकाङ्की 'उद्घाटन' हो । यो २०१६-१७ सालतिर प्रदीप्त पुस्तकालयको जन्मोत्सवमा मञ्चनको लागि रचिएको थियो । यो कतै छापिएको छैन । यस नाटकका प्रमुख कलाकार भई अभिनय गर्ने भृगुराम श्रेष्ठका अनुसार उनी स्वयम्

कवि भएर खेलेका थिए । कवि आफ्नै धुनमा मस्त भइरहँदा उनकी श्रीमतीले कविको बाहिर प्रेमिका पो छ कि भन्ने शङ्का गरेकी हुन्छिन् । पछि यसको रहस्योद्घाटन हुन्छ, यसैलाई नै उद्घाटन भनिएको हो । भृगुराम श्रेष्ठले सम्झेअनुसार नाटकको मञ्चमा कार्ल मार्क्स, लेनिन, अब्राहम लिङ्कन आदिको तस्बीर राखिएका थिए । यसबाट नाटकमा राजनीतिक सन्देश पनि भएको हुनुपर्छ भन्ने अन्दाज गर्न सकिन्छ । तर यो नाटक हेर्न/पढ्न नपाएकोले यसै भन्न सकिँदैन । प्रदीप्त पुस्तकालय राजनीतिक रूपमा सचेत समूहबाट खोलिएकोले मञ्चमा सजाउनकै लागि मात्र पनि ती तस्बीरहरू राखिएको हुनसक्छ । नाटक र अन्य भाषण कार्यक्रमको लागि पनि एउटै मञ्च प्रयोग हुने भएकोले पनि यस्तो भएको हुनसक्छ ।

दुर्गालालका नाटकहरूमा सङ्ख्याको हिसाबले सर्वाधिक धेरै एकाङ्कीहरू नै छन् । उनका १४ एकाङ्की प्रकाशित छन् भने तीन अप्रकाशित छन् । दुर्गालालको एकाङ्की नाटकका शोधकर्ता माधवलाल प्रधानले आफ्नो शोधपत्रमा उनका प्रकाशित एकाङ्कीहरूलाई विषयवस्तुको दृष्टिले पाँच प्रकारमा वर्गीकरण गरेका छन्,[७०] जुन निम्नानुसार छन् :

१) मातृभाषा प्रेम र साहित्यमा प्रगतिवाद । यसमा 'जि सिद्धिदास' (म सिद्धिदास), 'बिहाँचुलि' (बिहानी) र 'तत:जा:गु मेच' (अग्लाअग्ला मेचहरू) पर्दछन् ।

२) कर्मचारी वर्गको समस्या । यसमा 'रामबहादुरया संसार' (रामबहादुरको संसार), 'ईंचा बांलूगु चन्द्रमा' (हँसिया आकारको चन्द्रमा), 'न्ह्याय् ध्यना: सर्ग: छाय् स्वये ' ( नाक काटेर आकाश किन हेर्ने) पर्दछन् ।

३) विवाह र महिलावर्गको समस्या । यसमा 'नकतिनि लूगु निभा:' (भरखरै उदाएको घाम), 'व मिसा' (त्यो आइमाई), 'न्हू छेँया भम्चा' (नयाँ घरकी बुहारी), 'न्यँ, अभ्यन्तरया चिल्लाय्' (सुन्नू, अभ्यन्तरको चिच्याहट), 'मातंक्वथा' (मटानको कोठा)

४) राजनीति, विद्यार्थी आन्दोलन र गाउँको समस्या । 'तर इतिहास न्ह्यानांच्वनी' (तर इतिहास अघिबढ्दै गर्छ), 'मिजला' (राँको), 'भू सी दइ' (रहस्य उध्रिन्छ), 'वाया दुने जाकि दु' (झगडाको बीउ) ।

५) गौतम बुद्ध । 'श्रीमती' र निमन्त्रणा बुद्धकालीन नाटकहरू हुन् । यी दुवै गीति नाटक हुन् । कवि-गीतकार व्यक्तित्व भएकोले होला दुर्गालालका यी दुइ गीतिनाटक गद्यनाटकभन्दा धेरै नै परिमार्जित, कलापूर्ण र नाट्यगुणले परिपूर्ण छन् । साहित्यिक रूपले पनि यी नाटक अत्यन्त सफल छन् । प्रदर्शनमा पनि यी नाटक सफल भएका थिए । यी गीतिनाटकहरू त्यस वेला रङ्गमञ्चमा लगातार महिनादिनभन्दा बढी प्रदर्शन भएका थिए ।

---

[७०] माधवलाल प्रधान, दुर्गालालया एकांकी नाटक : छगू अध्ययन (शोधपत्र), पूर्ववत्, पृष्ठ १९ ।

उपर्युलिखित उपलब्ध एकाङ्कीबाहेक उनका केही अनुपलब्ध एकाङ्की पनि छन् । उनका कतिपय नाटकहरू प्रदर्शनको लागि लेखियो र प्रदर्शनसँगै हराएका पनि छन् । ती कतै पनि प्रकाशित नभएका र लेखक स्वयम्सँग पनि नभएकाले हाल अनुपलब्ध छन् । अनुपलब्धमा 'उद्घाटन'बारे माथि नै चर्चा गरिसकिएको छ । अन्यमा 'कचिमचाया बाखं', 'मातंक्वथा' र 'भावना' छन् ।

'कचिमचाया बाखं' नेपालभाषाको लोकगाथामा आधारित हो । रणबहादुर शाहले बिफर आएका बच्चाहरूलाई उपत्यका काट्न लगाएको र त्यसबाट उपत्यकाबासीले पाएको दुःखको कथा हो ।[७१]

अर्को अनुपलब्ध नाटक 'मातं क्वथा' (मटानको कोठा) हो । यो उनकै चोकमा घटेको घटनामा आधारित नाटक हो । उनको चोकमा एकजना पढेलेखेको भनाउँदो मान्छेको घर छ । त्यो मान्छेलाई पढाउन उसका आमा र भाइले निकै मेहनत गरेका थिए । उनीहरूको कमाइबाटै उसले गरिब परिवारमा जन्मेर पनि पढ्न पाएका थिए । तर बिहे गरेपछि श्रीमतीको कुरा सुनेर ऊ घरबाट छुटेर भिन्नै बस्न गयो । यस घटनाले त्यस वेला आई. ए. पढ्दै गरेका दुर्गालाललाई पढेर यस्तै मान्छे बन्नु छ भने के पढ्नु ? भन्ने भाव जगाएर पढाइबाट बिमुख बनाइदिएको थियो ।[७२]

'भावना' भन्ने नाटक उनले लेखेका थिए । तर यो नाटक न कतै प्रदर्शन भयो, न प्रकाशनमा नै आयो । यसको प्रति उनीसँग पनि छैन । तर यो नाटक लेखनको पृष्ठभूमि रमाइलो छ । त्यस वेला हडताल जुलुस भइरहेको थियो । कन्यामन्दिर विद्यालय अगाडि पुलिसले लाठीचार्ज गरेको र टियरग्याँस छोडेको कारणले मानिसहरू दौडादौड गर्दै थिए । दुर्गालाल र अरू शिक्षकहरू विद्यालयभित्र थिए । त्यसै वेला एउटा सानो केटाले अर्को केटालाई समातेर तान्दै ल्याएको देखियो । त्यस्तो दृश्य देखेर उनीहरूले डर छोडेर विद्यालय बाहिर गई ती केटाहरूलाई विद्यालयभित्र ल्याए । जुन केटालाई घिसार्दै ल्याइरहेको थियो त्यसको खुट्टामा चोट लागेको थियो । सोधपुछबाट के थाहा पाइयो भने ती दुई केटाहरू साइनो नपर्ने मात्र होइन कि एक अर्कासित परिचित पनि थिएनन् । अनि किन समात्दै ल्याएको त भनी सोध्दा त्यो ल्याउने केटाले दौडादौडमा अरूले कुल्चेला भनेर ल्याएको भनेर जवाफ दियो । त्यो जवाफ सुनेर उनीहरू सबै चकित भए । देश बनाउने नेताहरू कसैलाई वास्ता नगरी भागाभाग भइरहेका छन् । कसैलाई वास्ता गर्ने फुर्सद पनि छैन । तर त्यो बालकको भावना हेर, आफूले चिन्दै नचिनेको केटालाई पनि त्यत्रो भागदौडको बीचमा सकीनसकी तान्दै बचाउँदै ल्याइरहेको छ । एउटा बालकमा पनि कति ठूलो भावना, कति ठूलो कर्तव्यबोध ! यसै घटनाबाट प्रभावित भई दुर्गालालले सो नाटक लेखेका थिए ।[७३]

---

[७१] शोधनायक दुर्गालाल श्रेष्ठले शोधार्थीलाई दिएको जानकारीअनुसार ।

[७२] सुरेश, 'जिगु नाटक जिम्ह पात्र', सन्ध्याटाइम्स, ने.सं. ११२४ नयाँ वर्षको विशेष परिशिष्टाङ्क, पृष्ठ ३६ ।

[७३] पूर्ववत् ।

त्यस्तै उनले आफ्नो अन्तर्वार्तामा 'स्वयनगु' नाटकको पनि उल्लेख गरेका छन् : *"अपेरामा मैले पहिलो 'स्वयनगु' लेखेको जस्तो लाग्छ । 'स्वयनगु' हाम्रै पुरानो गीतमा आधारित नाटक हो । त्यसमा नयाँ शब्द राखेर नाटक बनाएँ । त्यो पाटन (संयुक्त) कलेजमा देखाइएको थियो । त्यसमा सिद्धिलाल सिंह आदि कामरेड साथीहरू पनि खेलेका थिए ।"*[७४] यो नाटक पनि हाल उपलब्ध छैन । तर दुर्गालाल श्रेष्ठले दिएको जानकारीअनुसार यो उर्दू-अरबी-फारसी पाराको प्रेम त्रिकोणमा आधारित नाटक हो । यसको मूलकथा नेपालभाषाको लोकगाथाबाट लिइएको छ ।

**ग) नेपालभाषा नाट्यसाहित्यमा नाटककार दुर्गालालको स्थान**

नेपालभाषा साहित्यमा नाटकको स्थानबारे डा. कमलप्रकाश मल्लले यसरी भनेका छन् :

*"विशुद्ध साहित्यको चश्माले हेर्दा हामीले टाउको उठाउनसक्ने कुनै ठाउँ वाङ्मयले दिएको छ भने त्यो ठाउँ नाटकले मात्र दिएको छ किनभने काव्य, गीत र नाटक आदि सिर्जनात्मक कृतिहरू मध्ये सबैभन्दा धेरै नाटक र सबभन्दा थोरै काव्य देखिन्छन् ।"* [७५]

यस्तो पुरानो परम्परा भएको र चाडपर्वजस्तो जनजीवनसँग गाँसिएको नेपालभाषाको नाटक विधाले आधुनिक युगमा कम मात्र विकास हुन पायो । आधुनिक युगमा कविता धेरै विकसित भयो र नाटक त्यसको छाँयामा पऱ्यो । दुर्गालालको नाटककार व्यक्तित्व पनि त्यस्तै हुनपुगेको छ । एक प्रतिभाशाली नाटककार भए तापनि कवि व्यक्तित्वले उनको नाटककार व्यक्तित्वलाई थिचिदिएकोले नाटककारहरूको चर्चापरिचर्चा र समालोचना हुँदा पनि उनको नाम छुट्न गएको छ । एकाङ्कीमा उनको बेग्लै कवितात्मक शैली र भावुक संवादको विशेषता पाइन्छ । साधारण सामाजिक विषयवस्तुमा पनि प्रभावशाली नाटक बनाउनसक्ने उनको खूबी छ । नेपालभाषाका थुप्रै नै कार्यक्रम र प्रतियोगिताहरूमा उनका नाटक प्रदर्शन भएका छन् र ती नाटकले नाटकसहित विविध विधामा पुरस्कृत पनि भएका छन् । गीतिनाटकको क्षेत्रमा उनका नाटक हटाइदियो भने नेपालभाषाको गीतिनाटक क्षेत्र नै शून्य होला । उनी एक्लैले नेपालभाषाको गीतिनाटकमा अतुलनीय योगदान गरेका छन् तैपनि उनको कवि व्यक्तित्वको भारले नाटककार व्यक्तित्व दबिएको र समालोचकहरूले पनि यतातिर ध्यान नदिएकाले उनको नाटककार व्यक्तित्वको राम्रो मूल्याङ्कन भएको छैन । साथै साहित्यिक मूल्याङ्कनका लागि कृति प्रकाशित हुनु पनि आवश्यक छ । उनका नाटकहरू प्रकाशितभन्दा धेरै मञ्चित भएका छन् । २०१६ सालतिरै एकाङ्की लेखेर मञ्चन

---

[७४] रेडियो नेपाल एफ. एम. काठमाडौंको 'स्वनिगः सछि'को कार्यक्रममा प्रसारित कृष्णा ताम्राकारद्वारा दुर्गालाल श्रेष्ठसँग लिइएको अन्तर्वार्ताअनुसार ।

[७५] डा. कमलप्रकाश मल्ल, न:लि स्वना, (काठमाडौं : च्वसापासा, ने.सं. १०९८), पृ. ख (भूमिका खण्ड)

गराइसकेका दुर्गालालको एकाङ्कीको सङ्कलन २०४१ सालमा मात्र प्रकाशित भएको पाइन्छ । त्यही प्याखंपिचा (नाटकको झोला) उनको एक मात्र एकाङ्की सङ्ग्रह हो । यस सङ्ग्रहमा नपरेका र कुनै पत्रिकामा पनि प्रकाशित नभएका अनि मात्र प्रदर्शन भएका उनका धेरै नाटकहरू हाल उपलब्ध छैनन् ।

नेपालभाषाको एकाङ्कीमा दुर्गालालको छुट्टै योगदान छ । उनको नाटकलेखनको शैली पनि अरूको भन्दा बेग्लै छ । तर उनले अरूको अनुरोध र आवश्यकता पूर्तिको हिसाबले मात्र एकाङ्की लेखेकोले अझ धेरै जुन परिमार्जन आउनसक्थ्यो त्यो आउन सकेन । तर गीतिनाटकको क्षेत्रमा उनी अत्यन्त कुशल, परिमार्जित र बहुगुणसम्पन्न देखिन्छन् । ईश्वरानन्दबाट सुरु भएको नेपालभाषाको आधुनिक नाटकको क्षेत्रमा त्यसै पनि धेरै लेखक त छैन । सामाजिक समस्यामा नाटक लेख्ने ईश्वरानन्द, ऐतिहासिक नाटक लेख्ने हेमलाल जोशी अनि वासु शशी, सत्यमोहन जोशी, गिरिजाप्रसाद जोशी, रामशेखर, पद्मरत्न तुलाधर, श्रीकृष्ण अणु, विजय मल्ल आदि नाटककारहरूको बीचमा एकाङ्कीकारका रूपमा दुर्गालालको छुट्टै व्यक्तित्व छ । गीतिनाटककारका रूपमा भने उनको व्यक्तित्व अद्वितीय नै छ ।

## ३.२ अनुवादक व्यक्तित्व

दुर्गालालले आफ्नो अनूदित कृति चिनिया चम्पामा आफ्नो कुरा राख्ने क्रममा लेखेका छन् : *"साहित्यमा अनुवादकहरूलाई 'मूर्ख'को उपाधि दिएको पनि मैले कतै देखेको छु । यो भनाइलाई सत्य ठान्नेहरूले मुखमा बुजो हाल्नुपर्ला किनभने बोलीचालीको भाषा पनि मनको भाषाको रूपान्तर नै हो । यही तर्क प्रस्तुत गरेर म यतातिर अघि सरें ।"* [७६]

यस भनाइबाट उनले अनुवाद गर्ने कामलाई सार्थक प्रयासमात्र मानेका छैनन् बरु जसरी एउटा मानिसले आफ्नो मनको भाव शब्दले रूपान्तर गर्छ त्यसरी नै एउटा भाषाको कृतिलाई त्यत्तिकै बुझेर र सम्वेदनशील भएर अर्को भाषामा अनुवाद गर्नुपर्छ भन्ने अनुवादकको दायित्वबोध पनि गरेका छन् ।

छन्दकवि भएका कारणले विभिन्न भाषाका छन्दका कविता तथा गीतिकृतिहरूको अनुवादमा दुर्गालालको विशेष दखल छ । हुन त उनी न त हिन्दी, न अङ्ग्रेजी, न संस्कृत भाषाका विज्ञ हुन् । तर उनले संस्कृत, हिन्दी, अङ्ग्रेजी तीनवटै भाषाबाट साहित्यिक कृतिको नेपालभाषामा सोही छन्दमा रूपान्तर गरेका छन् । उनी भाषाविज्ञभन्दा बढी कविताको मर्म बुझ्ने कवि भएर अनुवाद गरेका छन् । त्यसैले उनले शाब्दिक अर्थभन्दा कविताको भावलाई आफ्नो भाषामा ल्याएका छन्, जुन

---

[७६] दुर्गालाल श्रेष्ठ, 'अनुवादक', चिनियाचम्पा, (काठमाडौं : सूर्योदय प्रकाशन, ने.सं. ११०८७), मन्तव्य भाग ।

कविताको अनुवादको सही तरिका पनि हो । यसरी अनुवाद गर्दा उनले मूलकृतिको भाव नबिथोल्ने गरी केहीकेही कुरा आफ्नै भाषाका वाक्यांश र टुक्का प्रयोग गरेका छन्, साथै आफ्नै सांस्कृतिक परिवेशका कुरा पनि मिश्रण गरेका छन्, जसले गर्दा पाठकलाई अनूदित कृति होइन, आफ्नै भाषाको कृति पढिरहेको जस्तो आनन्द आउँछ । निचोडमा भन्दा माथि उल्लेख गरिएझैं एउटा मानिसले मनको भाव शब्दमा पोख्न जुन किसिमको रूपान्तरको कार्य गर्छ उनले कृतिको रूपान्तरमा पनि त्यही किसिमको कार्य गरेका छन् । एउटा कवि भएकोले उनले अर्को भाषामा लेखिएको भए पनि कविको मर्मलाई बुझ्न सकेका छन् र त्यस भावलाई आफ्नो भाषामा सशक्त रूपमा पोख्न उनमा शब्द-सामर्थ्य छ ।

दुर्गालालले बालसाहित्य र प्रौढकविता तथा गीतको अनुवाद गरेका छन् । बालसाहित्यमा दुई चिनियाँ बालकवितासङ्ग्रह, एक रूसी खण्डकाव्य र एक चिनियाँ बालकथासङ्ग्रह अनुवाद गरेका छन् । प्रौढकविता तथा गीतमा नेपाली कवि सिद्धिचरण श्रेष्ठको उर्वशी, संस्कृत कवि हर्षदेव भूपतिको दशबलस्तोत्रम्, हिन्दी कवि बच्चनको मधुशाला, बङ्गाली कवि काजी नजरुल इस्लामका प्रतिनिधि गीतसङ्ग्रह Selected Songs of Kazi Nazrul Islam छन् । उनले धेरै रचनाहरू नेपालभाषा र नेपाली दुवै भाषामा रचेका छन् । ती कृतिहरू वास्तवमा नेपालभाषामा रचिसकेर पछि नेपालीमा अनुवाद गरेका हुन् । नेपालीभाषामा पनि उत्तिकै पकड भएकोले ती नेपालीपछि रूपान्तर गरेका नभई मूल रूपमा नै नेपालीमा रचेका कृतिजस्ता देखिएका छन् ।

दुर्गालालले अनुवादको काम बालसाहित्यबाट थालनी गरेका हुन् । उनको पहिलो अनुवाद कृति हो, चिनिया चम्पा (चिनियाँ चम्पा, २०२३) । एकै वर्षभित्र प्रकाशित भएको र सोही प्रकारको अर्को अनुवाद कृति हो, कुलिकासा । यी दुवै चिनियाँ भाषामा लिखित बालकविताहरूको भावानुवाद हो । नेवार बालबालिकालाई सुहाउँदो हुने गरी उनले यी अनुवाद गीतहरू नेवारी लोकलयमा प्रस्तुत गरेका छन् । यही नै अनुवादको मुख्य विशेषता र उपलब्धि हो । त्यस वेलासम्ममा दुर्गालालले आफ्नै भाषामा थुप्रै बालगीत रचिसकेकाले अनुवादमा प्रशस्त परिष्कृति भेटिन्छ । यिनमा प्रयुक्त बालभाषाले उनका मौलिक बालगीत कृति चिनियाम्ह किसिचा र ताइभाबा को सम्झना गराउँछ । यी गीतसङ्ग्रह चिनियाँ सांस्कृतिक क्रान्तिको पृष्ठभूमिमा रचिएकाले ठाउँठाउँमा चिनियाँ कम्युन जीवनको उल्लेख र झझल्को छ, जुन नेपाली बालबालिकाको लागि अनौठो लाग्नसक्छ ।

उलिंचा बाखं थुलिंचा रूसी कवि अलेक्जाण्डर पुश्किनको प्रसिद्ध बालगीतिकथा माझी र सुनको माछा (Fisherman and the Goldfish) को नेपालभाषा अनुवाद हो । यसलाई उनले नेवारहरूमा लोकप्रिय राजामतीको लयमा अनुवाद गरेका छन् । साथै यस अनुवाद कृतिमा नेपालभाषाका प्रचलित र घतलाग्दा उखान, टुक्का तथा भाषाशैली प्रयोग गरी बालभाषामा नै प्रभावशाली भावसम्प्रेषण गरेका छन् । यसै कृतिमा केही आफ्नै कुरा समेत थपी उनले इच्छाको सिमाना नामबाट नेपालीमा बाल-गीतिखण्डकाव्य प्रस्तुत गरेका छन् । यो कृति २०४८ मा तयार गरेको भए तापनि

प्रकाशन २०५५ मा मात्र भएको छ । नेपाली लेखनतर्फको उनको पाइला यसै कृतिले डोऱ्याएको हो । एक किसिमले यसको लेखनमा यो शोधकर्ता पनि पृष्ठभूमिमा रहेको छ । त्यस वेला यसले विश्वबालसाहित्यलाई नेपालीभाषामा प्रस्तुत गर्ने जमर्को गरेको थियो । यो उलिंचा बाखं थुलिंचा बाट औधि प्रभावित भएको थियो । यसै क्रममा यसले दुर्गालाल श्रेष्ठ, जसले सो कृति नेपालभाषामा प्रस्तुत गरेका थिए, लाई नेपालीमा पनि प्रस्तुत गर्न अनुरोध गरेको थियो । अनुवाद गर्ने क्रममा उनले केही आफ्नै कुरा थप्दै जाँदा सो कृति अनुवादभन्दा पनि मूलकृतिमा आधारित पुनर्सिर्जना बन्नपुग्यो । यस कृतिको प्रकाशनबाट उनमा नेपालभाषाजस्तै नेपालीभाषामा पनि व्यापक पकड भएको कुरा उनी स्वयम् र अन्य धेरै साहित्यकारहरू सचेत भए । २०४७ सालसम्म आफ्नो नेपालभाषाको कृति इन्कलाबको पदचाप चित्तरञ्जन नेपालीलाई नेपालीमा अनुवाद गराउने उनी इच्छाको सिमाना को प्रकाशनपछि केही कृति नेपालीमा लेख्न र केही कृति नेपालभाषा र  नेपाली दुवैमा सहलेखन गर्ने भए । बालसाहित्य कृतिमा सन्तको छाता बालखण्डकाव्य नेपालभाषा र नेपाली दुवैमा उनले सँगै प्रस्तुत गरेका छन्, जुन दुवै भाषामा उत्तिकै उत्कृष्टताका साथ प्रस्तुत भएका छन् ।

दुर्गालालको अर्को बाल-गीतिखण्डकाव्य सलछ्योंया बेला कतैकतै अनुवाद भनी उल्लेख भएको भए तापनि त्यसलाई अनुवाद भन्न मिल्दैन । चिनियाँ लोककथामा आधारित कथामा उनले गीतिकाव्य सिर्जना गरेका हुन् । त्यसैले यसलाई अनुवाद होइन, चिनियाँ मूलकथामा आधारित मौलिक सिर्जना भन्नुपर्छ ।

त्यस्तै उनले मचाबाखंचा (बालकथा) नामबाट दसवटा छोटाछोटा चिनियाँ बालकथाहरूको अनुवाद पनि गरेका छन् । यही नै उनको गद्यभाषा भएको कृति हो । नगदेशका नेपालभाषाका लेखक गणेशराम लाछिको लेखक छोरा सुभाषराम लाछिको साहित्यिक व्रतबन्धको अवसरमा दुर्गालालले यो अप्रकाशित अनुवाद कृति नै उपहार प्रदान गरेका थिए । सोही समारोहमा उपस्थित कैलाशभक्त प्रधानाङ्गले यसको प्रकाशनको जिम्मा लिएका थिए र यो २०५१ सालमा प्रकाशित भएको थियो । यस कृतिमा प्रयुक्त सरल शब्द र वाक्य बालबालिकाका लागि उपयुक्त छन् । वर्णन गर्ने भाषा र संवादमा विशुद्ध नेवारीपना छ ।

नेपालभाषा र नेपाली दुवैमा उत्तिकै कलम चलाउने कविवर सिद्धिचरण श्रेष्ठको बहुचर्चित खण्डकाव्य उर्वशी को नेपालभाषामा अनुवाद गर्ने कार्य शान्तहर्ष बज्राचार्यसँग दुर्गालाल श्रेष्ठले सहअनुवादकको रूपमा गरेका थिए । सिद्धिचरणका कविताबाट अत्यधिक प्रभावित भएका र उनकै स्वच्छन्दतावाद पछ्याउने दुर्गालालले यस कृतिको अनुवाद प्रभावशाली रूपमा गरेका छन् ।

उनको अनुवादक खुबी हर्षदेव भूपतिको  संस्कृत कृति दशबलस्तोत्रम् को अनुवादमा विशेष देख्नसकिन्छ । यसमा उनले विभिन्न संस्कृत वार्णिक छन्दमा लेखिएका स्तोत्रहरूको सोही छन्दमा नेपालभाषामा अनुवाद गरेकाछन् । अन्त्यानुप्रास सहितका यी स्तोत्रहरू लयात्मक भएर साह्रै सुरुचिपूर्ण छन् । स्तोत्र भनेको दिनका दिन पढिने कुरा

हो । त्यसैले जति पटक पढे पनि रस आइरहने अर्थात् धेरैपटक पढे पनि नअघाउने गुण स्तोत्रमा हुनु आवश्यक छ । यस्तो गुण उनको दशबलस्तोत्रम् को अनुवाद भगवान् दशबलया तुतः मा देख्नसकिन्छ । हर्षदेवको मूल संस्कृत श्लोकजस्तै अनुवादमा पनि उत्तिकै रसमाधुर्य, उत्तिकै लयात्मकता र थप अन्त्यानुप्रासले जति पटक पढ्यो त्यति नै ताजा अनुभव गराउन सक्ने अद्भुत क्षमता छ ।

उनको उल्लेख्य अनुवाद कृति सुलिं हो । यो हिन्दी भाषामा सबैभन्दा लोकप्रिय कविता कृति हरिवंशराय बच्चनको मधुशालाको नेपालभाषा अनुवाद हो । यसको अनुवाद गुणमा रहेको उत्कृष्टताले गर्दा नै दुर्गालाललाई अनुवादतर्फ 'श्रेष्ठ सिरपाः' पुरस्कार पनि प्रदान गरिएको हो । धेरै वर्षअघि नै दुर्गालालले रुबाइ शैलीमा रक्सीको सफल कविता सङ्ग्रह पीजा रचिसकेका थिए । बच्चनको मधुशाला पनि सोही शैली र प्रतीकव्यवस्था भएको कृति भएकोले पनि होला यो अनुवाद धेरै उत्कृष्ट भएको छ । साथै मुसलमान संस्कृतिमा हाला र प्याला, मधुशाला र मधुबाला[७७] जस्तै नेवारी संस्कृतिमा अय्लाः (रक्सी) र अन्ति (रक्सी राख्ने भाँडो), सलिं (रक्सी खाने प्याला) र सुलिं (भट्टी) अनि सुलिंमैं (रक्सी हालिदिने नारी) को प्रचलन रहेकोले पनि यो अनुवाद सुहाएको हुनसक्छ । मुख्यतः बच्चन र दुर्गालालको कविता धारा र शैली एकै भएकोले पनि एक कविले अर्को कविको हृदय बुझ्न सजिलो भएको हुनसक्छ । मधुशालाको अनुवादले उनलाई अनुवादक मात्र नभएर अनुवादक-कविको रूपमा प्रस्तुत गरेको छ । यसै कुरालाई लेखक, समालोचकहरूले सुलिं मा यसरी व्यक्त गरेका छन्[७८] :

केदारमान व्यथित : *कविवर बच्चनको लेखनसिद्धिको रूपमा प्रकाशित "मधुशाला" को अनुवाद "सुलिं" पनि उत्तिकै नै रससम्पन्न भएको छ । यो कवि दुर्गालालको कविप्रतिभाको प्रमाण हो ।*

प्रेमबहादुर कसाः : *बच्चनलाई मैले चिनेको छैन तर दुर्गालालले चिनाइदियो । त्यसैले "सुलिं"भित्र बच्चनभन्दा दुर्गालाल नै अन्ति[७९] लिई उभिरहेको देखें । उसले हाल्दै गयो, म पिउँदै गएँ ।*

मदनमणि दीक्षित : *सोम पिएर वैदिकहरूले आफूलाई देउता ठानेजस्तै दुर्गालालको "सुलिं"ले मानिसहरूलाई आफू नै देउता भएको अनुभव गराउँछ ।*

मोहन हिमांशु थापा : *"सुलिं"ले मधुशालाको मूल्य बढाइदिएको छ ।*

---

[७७] हाला - रक्सी; प्याला - रक्सी खाने विशेष कचौरा; मधुशाला - भट्टी; मधुबाला - पिउनेलाई रक्सी राख्नेआउने बाला ।

[७८] दुर्गालाल श्रेष्ठ, सुलिं, 'सुलिमय् वंपिनि धापू', पुस्तकको आवरणको पछाडिको पातामा ।

[७९] अन्ति (नेपालभाषा) - रक्सी राख्ने बुट्टासहितको धातुको भाँडो ।

पद्‌मरत्न तुलाधर : *कविताको अनुवाद पनि यति सुन्दर ढङ्गले हुन्छ भन्ने कुरा "सुलिं" सुनेपछि बुझें ।*

मल्ल के. सुन्दर : *मुसलमान संस्कृतिको "मधुशाला" दुर्गालालज्यूले नेपालभाषामा ल्याउँदा हाम्रै आफ्नै संस्कृतिको फिंजले भरेको रक्सी भएको छ ।*

अर्को उनको कवि व्यक्तित्व झल्किने अनुवाद कृति हो – काजी नजरुल इस्लामया छपासः म्ये (Selected Songs of Kazi Nazrul Islam) । यो विद्रोही कविको नामबाट विख्यात बङ्गाली रुमानीवादी कवि काजी नजरुल इस्लामको अङ्ग्रेजीमा अनूदित प्रतिनिधि गीतिसङ्ग्रहको नेपालभाषा अनुवाद हो । दुर्गालाल आफैं पनि नजरुल जस्तै रुमानीवादी गायक-कवि हुन् । सो अनुवाद सङ्ग्रह हेर्दा नजरुल र दुर्गालालका कविताको विषयवस्तु र भावना पनि समान देखिन्छन् । त्यस सङ्ग्रहका सुरुका कविता दुर्गालालको प्रथम कविता सङ्ग्रह झसुकाः मा जस्तै प्रेम र विछोडका गीत छन् । एउटा बालगीत, केही देशभक्तिका गीत, केही धार्मिक भक्तिगीत र अन्त्यमा एउटा लोकगीत र एउटा जागरण गीत (किसान, मजदूरको) छन् । यी सबै दुर्गालालकै रचनाविविधतासँग ठ्याक्कै मेल खाने विषयवस्तुहरू हुन् । साथै ती गीतमा प्रयुक्त छन्द र लय गीत गाउन सहज छन् । त्यसैले नै होला यो अनूदित कृति पढ्दा अनुवाद नभएर नेपालभाषामा नै सिर्जित कृति पढिरहेको जस्तो अनुभव हुन्छ ।

यस कृतिको अनुवादको सम्बन्धमा कृतिका सम्पादक माधवलाल कर्माचार्यले सोही कृतिमा यसरी लेखेका छन् :*"... स्वच्छन्द रूपमा उन्मुक्त भएर भाव, प्रतिभाव व्यक्त गर्नमा अभ्यस्त कवि दुर्गालालज्यूले काजी नजरुल इस्लामका गीतहरूको भाषान्तरणमा पनि त्यही सीप, प्रविधि प्रयोग गर्नुभएको छ भन्दा फरक पर्दैन । अनुवाद गरेर सङ्कलन भएका सबैजसो गीतमा हामीले देखिरहेका छौं – अनुवादमा पनि वहाँ कति स्वच्छन्द हुनुहुँदोरहेछ, उन्मुक्त हुनुहुँदोरहेछ । अङ्ग्रेजी मूलमा प्रयुक्त भएका कुनै पनि पद वा पदावली, वा कुनै अभिव्यञ्जना वा अभिव्यञ्जनावलीले वहाँलाई अवरोध सिर्जना गरेको छैन, अभिव्यक्तिको कुनै क्रम वा सिलसिला वहाँको अनुवादमा व्यवधान भएको छैन । त्यो अङ्ग्रेजी मूल स्वरूपले आफ्नो ठाउँमा आफ्नै किसिमले आफ्नो शैली, प्रकृति, पदावली समातेर बसेको छ भने दुर्गालालज्यूले गर्नुभएको भाषान्तरणमा त्यस्तै किसिमले आफ्नै शैली, प्रकृति र पदावली सँगालेर बगिरहेको छ ।*

*"यसरी स्पष्ट हुन्छ – कवि दुर्गालालज्यूको लागि अन्य कुराहरू, गीत र कविता रचनालाई जसरी उपयुक्त विषय भएका छन्, काजी नजरुल इस्लामका गीत पनि त्यस्तै नै भावाभिव्यक्तिका विषय भएका छन् । नाम भाषान्तर भए पनि कामले यी सबै गीत वा कविता-रचना नै हुनपुगेका छन् । यसप्रकारले यी सबै भाषान्तर एक प्रकारको स्वतन्त्र रचना भएका छन् । त्यसैले यी सबै त्यतिकै सजिलोसित बगेका छन् जसरी वहाँका अरूअरू रचनाहरू बगेका छन् । भनौं, यसमा अनुवादको गन्ध त्यति पाइँदैन ।.....*

*"जे होस्, यसमा वहाँले बङ्गालीभाषामा, बङ्गाली छाँटले गीत गाउने, बङ्गाली ढङ्गले सोच्ने नजरुल इस्लामलाई प्रस्तुत गर्नुभन्दा नेपालभाषामा, नेपालभाषी छाँटले, नेपालभाषाका उखान, टुक्का र लय प्रयोग गरी गीत गाउने, नेवारी पारामा सोच्ने इस्लामलाई प्रस्तुत गर्नुभएको छ – यो साँच्चिकै रमाइलो कुरा हो ।"*

बालसाहित्य होस् वा प्रौढसाहित्यको अनुवाद, दुर्गालालले आफूले रच्ने गरेको विधा र विषयसँग मिल्दा कृतिहरूको मात्र अनुवाद गरेका छन् । अर्थात् उनले छन्दका कविता र गीतिधर्मले पूर्ण रचनाहरूको अनुवाद गरेका छन् । वास्तवमा अनुवाद भनेकै गाह्रो कुरा हो भने, छन्दका रचना वा लयात्मक गीतिधर्म भएका रचनाहरूको अनुवाद त झनै गाह्रो कुरा हो किनभने ती कृतिको अनुवादमा शब्द र भावको मात्र नभई एक किसिमले मूल रचनामा निहित छन्द र लयसमेत रूपान्तर गरिने भाषामा सुहाउने गरी अनुवाद गर्नुपर्ने हुन्छ । दुर्गालाल आफैं पनि छन्द र गीतात्मक कविताका मूधर्न्य कवि भएकाले उनले गरेका छन्दका कविता र गीतहरूको अनुवाद उत्कृष्टताका नमूना भएका छन् । उनले आफ्नो रचना-सामर्थ्य जुन विधामा छ त्यस्तै कृतिहरू छानीछानी अनुवाद गरेकोबाट उनमा आफ्नो सामर्थ्यप्रति सचेतता भएको पुष्टि हुन्छ र आफ्नो सामर्थ्यभित्र परेका कृतिहरू छानीछानी अनुवाद गर्नु उनको चातुर्य पनि हो ।

हालसम्म उनका सात अनूदित कृतिहरू प्रकाशित भइसकेका छन् भने रूसी कवि मायकोवस्कीको लेनिनको अनुवाद प्रकाशन हुन बाँकी छ र उनले विपश्यना ध्यान केन्द्रका बौद्ध दोहाहरू लगायत अन्य कृतिहरू हालसम्म पनि अनुवाद गरिरहेका छन् ।

## ३.३ चलचित्र संवाद लेखक

नाटकमा रम्ने दुर्गालालले जीवनको पछिल्लो चरणमा आएर उनले चलचित्रमा पनि हात हालेका छन् । गैरनेवार समुदायमा पनि लोकप्रिय चलचित्र 'राजमति'को कथा र संवाद दुर्गालाल र रामशेखर मिलेर लेखेका थिए । उनले 'खण्डहरको फूल' नामको नेपाली चलचित्रमा गीत र कथालेखनमा सघाएका थिए । तर सो चलचित्रको छायाङ्कनको कार्य धेरै भइसकेको भए पनि पूरा हुनसकेको छैन ।

## ३.४ मातृभाषानुरागी व्यक्तित्व

मल्ल के. सुन्दरको मूल्याङ्कनमा "दुर्गालालमा जति भाषिक मोहको सुगन्ध र विद्रोह अरू कुनै पनि समकालीन कविहरूमा छैन भन्दा पनि हुन्छ । बरु वहाँको प्रभावमा अरू नयाँ टुसा पलाउन थालेको देख्नसकिन्छ ।" वास्तवमै पनि कवि दुर्गालाल मातृभाषाका अनन्य प्रेमी र सेवक हुन् । उनको सम्पूर्ण जीवन नै मातृभाषाको सेवामा बितेको छ । हुन त नेपालमा राणाकालदेखि आजसम्म जुनसुकै व्यवस्था आए पनि थोरै या धेरै सबैले राष्ट्रिय भाषाहरूलाई दबाउने र उपेक्षा गरेकै कारणले नेपालभाषाका सबैजसो लेखकहरू नै लेखकमात्र नभएर भाषिक आन्दोलनका कार्यकर्ता पनि बनेका

छन् । तर दुर्गालालमा जति मातृभाषानुराग तीव्र छ, त्यति अन्य लेखकका रचनामा फेलापार्न गाह्रो छ । यसको साक्षी उनका भाषिक चेतनाजागरणका गीत, कविता र नाटकहरू छन् । उनले २०२२ सालमा रचेका भाषिक जागरणका गीत हालसम्म पनि उत्तिकै लोकप्रिय छन् । उनले एउटा अन्तर्वार्तामा भनेका छन्, "अरू भाषामा लेख्दा अभ्यासले मात्र म समर्थ हुन्छु तर मातृभाषामा लेख्नबस्दा कलममा मेरो रगत बगेको जस्तो अनुभव हुन्छ ।"[८०] उनले आफ्नो विचार यसरी पनि प्रकट गरेका छन् – *बहुजातीय सांस्कृतिक विविधता नै नेपालको राष्ट्रियता हो ।* [८१]

उनी भाषिक अधिकारको पक्षमा लाग्ने लेखकमात्र नभएर भाषिक आन्दोलनका अग्रपङ्क्तिका कार्यकर्ता पनि हुन् । २०२२ सालको भाषाआन्दोलनमा उनी संक्षिप्त भाषणसहित जागरणका कविता सुनाउँथे । भाषिक आन्दोलनमा लागेकैले उनले भूमिगत जीवन पनि बिताउनुपरेको थियो, जुन अगाडि नै चर्चा भइसकेको छ । २०४६ को प्रजातन्त्रपछिको भाषिक आन्दोलनमा पनि उनी अग्रपङ्क्तिमा उभिनेमध्ये हुन् । उनी युवाकालदेखि नै भाषिक संस्थाहरूमा लागेका व्यक्ति हुन् । हाल पनि उनी धेरै भाषिक संस्थाहरूमा कार्यरत छन् ।

उनी 'नेपालभाषा मंकाः खलः'मा स्थापनाकालदेखि सक्रिय रहेका छन् । उनले त्यहाँ एक दशक उपाध्यक्षको रूपमा काम गरेका छन् । हाल पनि उनी सदस्यको रूपमा सो संस्थामा सक्रिय छन् । उनले 'नेपालभाषा म्ये गुथि' मा पनि स्थापनाकालदेखि सक्रिय भई साङ्गीतिक सम्मेलनहरूको आयोजना गरेका थिए । सो गुथिबाट उनको गीत भएका धेरै श्रव्यगीतिचक्काहरू बजारमा आएका थिए । नेपालभाषाका लेखकहरूको संस्था 'च्वसापासा'मा उनले धेरै वर्ष सचिव भएर कार्य गरेका थिए । उनी 'नेपालभाषा परिषद्'मा पनि सदस्य थिए । उनी 'नेपाल लिपि गुथि'का संरक्षक पनि हुन् ।

उनी 'नेपालभाषा अकादमी'मा पहिले कार्यसमितिका सदस्य थिए भने हाल साधारण सदस्य रहेका छन् । उनी 'नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान'का मानार्थ सदस्य रहेका छन् । त्यहाँ उनले नेपालभाषाका साहित्यकारको प्रतिनिधित्व गरेका छन् ।

दुर्गालाल श्रेष्ठका व्यक्तित्वहरूमा साहित्यकार व्यक्तित्व सबभन्दा प्रमुख हो भने त्यसको हाराहारीमा आउनसक्ने अर्को व्यक्तित्व मातृभाषाप्रेमी व्यक्तित्व नै हो । यसको अगाडि उनको राजनीतिक व्यक्तित्व पनि फिक्का हुन्छ । बरु कतै उनले भाषिक समानताकै आशामा वामपन्थी राजनीतिक धार पक्रेका हुन् कि भैं पनि लाग्छ ।

---

[८०] श्रीओम रोदन, 'मातृभाषामा लेख्न बस्दा कलममा मेरो रगत बगेकोजस्तो अनुभव हुन्छ', मधुपर्क, पूर्णाङ्क ४२६ (मङ्सिर २०६१), पृष्ठ १०३ ।

[८१] तुलसीहरि कोइराला, 'फूलैफूलको संसार हेर्न चाहने वरिष्ठ कवि दुर्गालाल', मधुपर्क, पूर्णाङ्क ४३३ (असार २०६२), पृष्ठ ३० ।

## ३.५ राजनीतिक व्यक्तित्व

उमेरको ढल्काइसँगै भनूं वा व्यावहारिकतामा जकडिँदै जाँदा मानिसमा विचलन आउँछ, विश्वासमा परिवर्तन आउँछ । यस्तो विचलन धेरै महान् व्यक्तित्वहरूमा पनि आएको छ, नेपालकै कवि, साहित्यकारहरूमा पनि यस्तो प्रवृत्ति देखापरेको छ । तर दुर्गालालको जीवनको एउटा प्रमुख विशेषता नै आफ्नो विश्वासमा सधैं अडिग रहनु हो, अविचलित रहनु हो । चाहे त्यो मातृभाषाप्रेममा होस् वा मार्क्सवादी (सामाजवादी) विचारधारामा । उनले एकपल्ट समाएको विश्वासको बाटो छोडेको देखिँदैन । युवाकालमा उनले ठम्याएको प्रगतिशीलताको बाटोमा उनी आज जीवनको पछिल्लो घडीसम्म आइपुग्दा पनि त्यत्तिकै आत्मविश्वासपूर्वक अगाडि लम्किरहेका छन् । अझ भनूं भने जतिजति समय बित्दै गयो, उनमा यस सिद्धान्तप्रतिको निष्ठा झन्झन् बलियो हुँदै गएको आभास हुन्छ । तर नेपालका वामपन्थी पार्टीहरूबारे उनको के विचार छ भने ती पार्टीहरू गरिबको पक्षमा बोल्ने भए तापनि मध्यमवर्गका मानिसहरूको बाहुल्य भएकाले साँचो अर्थमा तिनले गरिब जनताको भावनाको प्रतिनिधित्व गर्न सकेका छैनन् ।[८१]

उनले कुनै पार्टीको सदस्यता त लिएका छैनन् तर उनले २०१५ सालको आमचुनावमा पुष्पलाल श्रेष्ठको नेपाल कम्युनिस्ट पार्टी र २०४६ सालको प्रजातन्त्रपछि नेपाल कम्युनिष्ट पार्टी एमाले (ने.क.पा. एमाले) लाई चुनाव प्रचारप्रसारमा नारा, गीत आदि तयार गरिदिएर सहयोग गरेको पाइन्छ । तर पछि ने.क.पा. एमाले पार्टीबाट नराम्रोसित मोहभंग भएको पाइएको छ । सो पार्टीले संस्कृत भाषालाई विद्यालयमा अनिवार्य बनाएको निर्णयप्रति उनी निकै दुःखित भएको बुझिन्छ । साथै उनका अनन्य मित्र पद्मरत्न तुलाधर पनि सोही मन्त्रीपरिषद्मा भएकोबाट पनि निकै चित्त दुखेको थियो । उनको विचारमा त्यस वेला पद्मरत्नले राजिनामा गरेका भए पद्मरत्नको उँचाइ अझै बढ्ने थियो । चुनावमा जाँदा ने.क.पा. एमालेले जुन वचनहरू दिएको थियो, सत्तामा गइसकेपछि जनताका भाषाहरूको पक्षमा केही निर्णय नहुँदा उनलाई सो पार्टीप्रति वितृष्णा उत्पन्न भएको थियो । यहाँ दुर्गालालमा विचलन आएको नभई पार्टीका सञ्चालकहरूमा नै विचलन आएको देखिन्छ जसले गर्दा आफूले एक पल्ट असाध्य विश्वास गरेको पार्टीबाट पनि उनलाई धोखा भएको अनुभव भयो र उनमा विचलन आयो । यो उनको विश्वासमा परिवर्तन आएको होइन ।

अहिलेको अवस्थामा हेर्दा दुर्गालालको वैचारिक समर्थन उग्रवामपन्थीधारातिर ढल्केको देखिन्छ । किरिमिरे धर्साहरूका कतिपय कविताहरूले स्पष्ट रूपमा नै त्यतातिर सङ्केत गरेका छन् । हालसालैको मधुपर्कमा प्रकाशित कविताको एक अंश यसप्रकारको छ :

जत्ति होस् रक्ताम्य धरती, जत्तिकै होस् त्रासद,
लाग्छ मेरो निम्ति यो क्षण आखिरी हो सायद,

---

[८१] शोधनायक दुर्गालाल श्रेष्ठसँगको कुराकानीमा आधारित ।

क्रान्तिको इतिहास जुन हो लेखिने युद्धोत्तर,
हुन म पाए पुग्छ त्यसको मात्र यौटा अक्षर ।[८३]

२०४६ साल र त्यसपछिसम्म पनि उनी प्रजातन्त्रको समर्थकका रूपमा देखापरेका थिए । तर उनलाई प्रजातन्त्रका सत्ताधारीहरूबाट पनि मोहभंग भएको देखिएको छ । यस्तो हुनुको एउटा कारण प्रजातान्त्रिक व्यवस्थामा भाषिक र जातीय समानता पाउने जुन आशा उनले लिएका थिए, त्यसको विपरीत कार्य भएकोले त्यस्तो वितृष्णा उनमा जागेको देखिन्छ ।

सिधै प्रगतिशील कविताबाहेक उनले तत्कालीन राष्ट्रिय-अन्तर्राष्ट्रिय राजनीतिक घटना र परिप्रेक्ष्यको प्रतिक्रियास्वरूप पनि धेरै कविताहरू लेखेका छन् । भियतनाम युद्ध, संयुक्त राज्य अमेरिका र तत्कालीन सोभियत रूसबीचको विद्वेष, २०४६ सालको आन्दोलन, जेठ १९ को नारायणहिटी दरबार काण्ड आदि राजनीतिक घटनाको तत्काल प्रतिक्रियामा उनले धेरै कविताहरू लेखेका छन् । यसबाट उनी राजनीतिकर्मी नभए पनि राष्ट्रिय-अन्तर्राष्ट्रिय राजनीतिक घटनाक्रमप्रति सचेत र जिम्मेवार कवि हुन् भन्ने चिनारी पाइन्छ ।

वास्तवमा उनलाई वामपन्थी विचारधारा वा प्रगतिशील लेखक भन्नुभन्दा पनि जनपक्षीय लेखक भन्नु बढी उपयुक्त हुन्छ । उनले आफ्नो लेखनमा शोषित, पीडित, गरिब र बहुसङ्ख्यक जनताको दुःख, पीडा र मर्मलाई व्यक्त गर्ने काम बढी गरेका छन् । उनको रचनामा वामपन्थी विचारधाराको सिधा वकालत कतै-कतै मात्र पाइन्छ ।

## ३.६ मिलनसार व्यक्तित्व

दुर्गालाल कवि भए तापनि कवि स्वभावले अन्तमुर्खी भई एकान्तमा बस्न रुचाउने खालका मान्छे होइनन् । उनी बालककालदेखि नै टोलका अन्य साथीहरूसँग रमाउने र अरू दौंतरीहरूका नाइके बनी समूहको नेतृत्व दिने खालका थिए । सबैसँग घुलमिल हुने र साथीहरूबीच सक्रिय मान्छे हुन् उनी । त्यसैले अनुहार निक्कै छाँटिलो नभए तापनि हँसिलो र उज्यालो भएकोले उनमा एउटा आकर्षण छ । बोलीचाली पनि मजाको भएकोले उनलाई मन पराउने मान्छेहरू धेरै छन् । त्यसैले नै होला सानैदेखि उनको मित्रमण्डली ठूलो थियो र अहिलेसम्म पनि निक्कै ठूलो छ । साहित्यिक जगत्का मित्रहरू त भए नै, साथै सङ्गीत, राजनीति आदि सबै वर्गका मानिसहरूसँग उनको चिनजान, मित्रता, घुलमिल छ । उमेरको हिसाबले पनि आफ्नै उमेरका व्यक्तिहरूसँग मात्र नभई सबै उमेरवर्गका मानिसहरूसँग उनको मित्रता छ । सानोमा आफूभन्दा पाका व्यक्तिहरूसँग पनि उनको राम्रो मित्रता थियो । अझ आफूभन्दा केही वर्षले ठूलाहरूलाई समेत उनले आफ्नो नेतृत्वभित्र समावेश गर्ने खूबी उनमा थियो । यो कुरा

[८३] दुर्गालाल श्रेष्ठ, 'यौटै इच्छा', मधुपर्क, (पूर्णाङ्क ४३३) असार २०६२, पृष्ठ २८ ।

उनले एघारै वर्षको उमेरमा नाटक तयार पारेर सफल प्रदर्शन गरेबाट पनि प्रमाणित हुन्छ । नाटक एउटा सामूहिक कार्य (team work) हो र सो कार्यमा उनले सफल नेतृत्व प्रदान गरेका थिए । यस कार्यको सफलतामा उनीभन्दा ठूला किशोरहरूको ठूलो हात छ । आफ्नो नेतृत्वभित्र सानाठूला सबैलाई कसरी समाहित गरेर लाने भन्ने सीप उनमा सानैदेखि थियो ।

दुर्गालाललाई अहिले पनि भेट्न गयो भने उनी आफ्नो घरको चोटामा शयनकक्षको बाहिरको आगन्तुक कोठामा पलेंटी कसेर बसिरहेका पाउँछौं । उनको अगाडि एउटा होचो टेबुल हुन्छ, जसमा उनी कागज अड्याएर लेख्छन् । यसै कक्षमा उनी आगन्तुकहरूलाई भेट्छन् । अहिले पनि उनको यस कक्षमा साहित्य, सङ्गीत, भाषा तथा राजनीतिक क्षेत्रका मानिसहरू आइरहन्छन् । सबैसँग उनी भेटिरहन्छन्, बोलिरन्हछन् ।

उनको सान्निध्यमा सबै उमेरका मानिसहरू आउँछन् । सबै उमेरका मानिसहरू उनका साथी छन् । सबै उमेरका मानिसहरूसँग साथीकैं व्यवहार गर्नसक्नु उनको एउटा खुबी हो । उनको घरमा आउने नवप्रतिभाहरूसँग पनि उनी त्यही न्यानो व्यवहारका साथ प्रस्तुत हुन्छन् र प्रेरणा प्रदान गर्छन् । विशेष गरी उनी नवलेखकहरूले लेखेका रचनालाई अझ राम्रो बनाउन खुलेर सल्लाह र सहयोग दिन्छन् । त्यसैले लेखकहरू उनकहाँ सिक्न र सल्लाह लिन धाइरहन्छन् पनि । प्रकाशनको मुखमा पुगेका कतिपय कृतिलाई आफ्नो सुझावले शोभावृद्धि गरिदिने काम पनि उनी गर्छन् । नेपालभाषामा कलम चलाउने जस्तोसुकै नवप्रतिभालाई पनि सिकाइदिने र हौसला दिइरहने उनको स्वभाव छ । गीत, कविता र नाटकको लागि स्थापित लेखकहरूसमेत उनीसँग सल्लाह-सुझाव माग्न आउँछन् । उनको व्यवहारले कसैलाई पनि आफूभन्दा धेरै पाको र वरिष्ठ कविको सामुन्ने बसिरहेको छु भन्ने भान हुँदैन ।

यस्तो मिलनसार स्वभाव भएकै कारण उनको मित्रमण्डली धेरै ठूलो छ । उनका मित्रहरू धेरै साहित्य, सङ्गीत, कला क्षेत्रका छन् । यी क्षेत्रका उनीभन्दा अग्रज र अनुज दुवै उमेरका व्यक्तित्वहरूलाई उनले सहजै मित्र बनाएका छन् । तिनीहरूसँग विभिन्न मञ्च र संस्थाहरूमा साथसाथै काम गरेका छन् ।

दुर्गालालका सबभन्दा मिल्ने साथी हुन् – भृगुराम श्रेष्ठ । उमेरले दुर्गालालभन्दा केही वर्षले जेठो उनी बाल्यकालदेखिको सबभन्दा मिल्ने साथी हुन् । दुवै एकै टोलका, दुवै नाटकमा रमाउने र दुबै भाषिक आन्दोलनमा साथसाथै लागेकाले उनीहरूको बाल्यदेखिको मित्रता बुढेसकालपर्यन्त उस्तै रह्यो । उनीहरू दुईजना यस्तरी मिलेका थिए कि अझै पनि यी दुईमा भ्रम परेर दुर्गालाललाई भृगुराम र भृगुरामलाई दुर्गालाल भनेर बोलाउनेहरू छन् । दुर्गालाल साहित्यकार हुन् भने भृगुराम कलाकार । भृगुराम नाटकको राम्रो कलाकार भएकाले धेरैजसो नाटकमा नायक भएर खेल्छन् । राम्रो अभिनेतामात्र नभएर उनी राम्रो नर्तक र गायक पनि हुन् । उनको आवाज कति मीठो छ भने उनी मञ्चमा बिना बाजा नै गीत गाउने गायकका रूपमा चिनिएका

छन् । उनको राम्रो आवाजले गर्दा बिना कुनै सङ्गीत गीत गाउँदा पनि मानिसहरू मन्त्रमुग्ध हुन्छन् । उनले दुर्गालालका थुप्रै प्रेमगीतहरूको साथसाथै भाषिक आन्दोलनको मञ्चमा भाषिक अधिकारका गीतहरू पनि गाएका छन् । उनले दुर्गालालका गीति नाटकहरूमा खेल्नुको साथसाथै तिनमा गीत पनि गाएका छन् ।

उनका धेरैजसो मिल्ने साथीहरू अहिले यस दुनियाँमा छैनन् । तीमध्ये उनले धेरै सम्झने व्यक्ति हुन् : क्षेत्रपाटीको कन्यामन्दिर माध्यमिक विद्यालयका प्रधानाध्यापक रहेका स्व. केदारनाथ न्यौपाने । उनी दुर्गालालका मित्रभन्दा पनि हितचिन्तकका रूपमा रहेका छन् । दुर्गालाल स्वयम्लाई पनि अनौठो लाग्छ किन उनले दुर्गालालका लागि त्यति धेरै चिन्ता लिएर सहयोग गरेका होलान् । दुर्गालालको हालको ठमेलको घर बन्नुमा उनकै तत्परता र योगदान रहेको छ । हुन त केदारनाथ न्यौपाने नेवार होइनन्, तर दुर्गालालले घरबनाउन रिनको लागि नेपालीमा निवेदन दिँदा उनले दुर्गालाललाई नेपालभाषाको त्यत्रो ठूलो कवि भएर पनि किन आफ्नो भाषामा निवेदन नदिएको भनेर नेपालभाषामा नै निवेदन लेख्न लगाएका थिए । उनले दुर्गालालको चिनियाम्ह किसिचा र ताइभाबा दुवैमा नेपालभाषामा छोटा मन्तव्य लेखेका छन् ।

विद्यालयको अभिलेखमा दुर्गालालको नामको अगाडि उनले ‘कवि’ भन्ने दुई अक्षर नछुटाईकन लेख्थे । त्यस्तो किन लेख्ने गरेको होला भनेर दुर्गालाललाई कौतूहल हुन्थ्यो । तर उनको निधनपछि मात्र दुर्गालालले थाहा पाए – त्यही कवि भन्ने दुई अक्षर थपेर उनले दुर्गालाललाई मासिक पारिश्रमिकमा सामान्यतया प्रदान गर्ने रकममा केही थपेर दिने गरिरहेका थिए । त्यस वेला दुर्गालाल अचम्ममा पर्नुको साथै उनीप्रति मनमा ठूलो श्रद्धाभाव उर्लेको थियो ।

दुर्गालालका मित्रहरूमा धेरै कलाकारहरू नै छन् । उनी साहित्यकार, राजनीतिक व्यक्तिहरूभन्दा कलाकारहरूको माझमा रम्ने मानिस हुन् । कलाकारहरूमा पिउने एउटा नराम्रो बानी हुने भएकोले पनि होला उनका धेरै कलाकार मित्रहरूले यो धरती छोडिसकेका छन् । तर त्यसो भनेर उनका सबै बितिसकेका मित्रहरू पिएकैले नै स्वर्गे भएका होइनन् । उनका बितिसकेका कलाकार मित्रहरूमा गायकहरू द्वारिकालाल श्रेष्ठ, सत्यनारायण राजभण्डारी, स्वर सम्राट् नारायणगोपाल छन् भने सङ्गीतकारहरूमा मदन परियार, शिवशङ्कर मानन्धर, नातिकाजी, हुतराज शर्मा, कान्छाबुद्ध बज्राचार्य, जलतरङ्गबादक कृष्णनारायण श्रेष्ठ, सङ्गीत प्रवीण केशरमान तुलाधर आदि छन् । नाटकको क्षेत्रमा नाटककार भिक्षु सुदर्शन र गोविन्द चिकंमू उनका अग्रज भए तापनि सान्निध्यका सहकर्मी पनि हुन् ।

बितिसकेका साहित्यकार मित्रहरूमा परमानन्द बज्राचार्य, प्रेमबहादुर कंसाकार, कवि केशरी चित्तधर हृदय, गिरिजाप्रसाद जोशी, सिद्धिचरण श्रेष्ठ, हृदयचन्द्रसिंह प्रधान, भूपि शेरचन र केदारमान व्यथित छन् । हुन त यिनमा धेरैजसो व्यक्तित्व उनीभन्दा ज्येष्ठ र उनका प्रेरकहरू पनि छन् । त्यसैले सबैलाई ठ्याक्कै मित्र भन्न त मिल्दैन, तर उनको जीवनको धेरै समय उनीहरूको सान्निध्यमा बितेको थियो । दुर्गालालले

हृदयचन्द्रसिंह प्रधानले लेखेको नेपाली नाटक 'गङ्गा-दशरथ' मा दशरथ चन्दको भूमिकामा अभिनय पनि गरेका थिए ।

राजनीतिक क्षेत्रका व्यक्तित्वहरूमा उनी स्व. पुष्पलाल श्रेष्ठ र स्व. तुलसीलाल अमात्यसँग केही नजिकिएका थिए । स्व. शम्भूराम श्रेष्ठसँग पनि उनको केही उठबस भएको थियो । टोलनजिकै भएकोले स्व. गणेशमान श्रेष्ठसँग कहिलेकाहीं उनको भेट हुन्थ्यो तर धेरै नजिकिएका थिएनन् । उनले स्व. मङ्गलादेवीको मृत्युमा शोककविता लेखेका थिए भने 'वीर गणेशमान' चलचित्रको लागि गीत लेखेका थिए ।

हालका उनका गायक/लेखक मित्रहरूमा पद्मरत्न तुलाधर, मल्ल के. सुन्दर, न्ह्यू बज्राचार्य, प्रेमध्वज प्रधान, मदनकृष्ण श्रेष्ठ, हरिवंश आचार्य, योगेश वैद्य, रामशेखर, श्रीकृष्ण 'अणु', भूषणप्रसाद श्रेष्ठ आदि छन् ।

कला, साहित्य, राजनीति सबै क्षेत्रका आफूभन्दा अग्रज आफ्नो समकालीन र अनुज सबै प्रभावशाली व्यक्तित्वहरूसँग उनको राम्रो चिनजान छ । सबैसँग बोल्ने, घुलमिल हुने स्वभावका भएकाले उनका चिनजानका व्यक्तिहरू धेरै छन् । तर राजनीतिक चेतना भएका व्यक्ति भए पनि दुर्गालालका राजनीतिक व्यक्तिहरूसँगको सानिध्य कम छ । उनी साङ्गीतिक क्षेत्रका कलाकारबीच रमाउने व्यक्ति हुन्, त्यसपछि उनका मित्रहरू साहित्यिक जगत्का र नेपालभाषाको भाषिक क्षेत्रका व्यक्तित्वहरू छन् । राजनीतिक व्यक्तित्वहरूसँग परिचय भए पनि उनी धेरै नजिकिएका थिएनन् । पद्मरत्न तुलाधर र मल्ल के. सुन्दर पनि राजनीतिक व्यक्तित्वभन्दा नेपालभाषाका लेखक र भाषा आन्दोलनका नेताका रूपमा नजिकिएका हुन् । उनीहरू राजनीतिमा प्रवेश गर्नुअघि भाषिक कार्यकर्ता तथा लेखक थिए ।

## ३.७ शैक्षिक व्यक्तित्व

दुर्गालाल श्रेष्ठको जीवनको लामो समय शिक्षण पेशामा नै बितेको थियो । नवयुवक वेलादेखि उमेरको कारण अवकाश नपाउञ्जेलसम्म उनी शिक्षण पेशामा नै रहे । उनले बिवाहपछि घरमै विद्यार्थीहरूलाई पढाएर शिक्षण पेशाको सुरुवात गरेका थिए । त्यसपछि उनले आफ्नै टोलमा बालकेतन विद्यालय पनि खोलेर सञ्चालन गरेका थिए, जुनवेला उनी भरखरै युवावस्थामा प्रवेश गरेका थिए । यो विद्यालय २०१६-१७ सम्म सञ्चालन भएर पछि बन्द भयो । धरतीसिबे नं सर्गः नमिं ग्वाःमा उनका दुई गीतहरूको गायन स्थलको रूपमा बालकेतन (विद्यालय) को उल्लेख गरिएको छ । ती जागरण गीतहरू २०१२-१३ (ने.सं. १०७५ र १०७६) सालका हुन् । उनको जीवनको लामो खण्ड कन्यामन्दिर माध्यामिक विद्यालयमा बितेको थियो भने उनले कलेजहरूमा पनि नेपालभाषा र नेपाली पढाउने काम गरेका थिए ।

बालबालिकाको शिक्षाको लागि विशेष चासो दिने व्यक्ति भएकैले होला उनले शिक्षण पेशासँगसँगै बालसाहित्य पनि रच्दै गए । हालसम्म पनि उनले बालकविताहरू रचिरहेकै छन् । आफू शिक्षाविद् नै नभए पनि प्रचलित घोकन्ते शिक्षण प्रणाली चित्त नबुझेरै होला उनले बालबालिकाको लागि रुचिकर बालगीतहरू रचेका र विश्वबालसाहित्यबाट अनुवाद गरेका हुन्। त्यसैले उनलाई शिक्षक मात्र नभनी शिक्षाप्रेमी भन्नुपर्छ ।

उनले नेपालभाषाको पाठ्यपुस्तक निर्माणमा पनि विशेष कार्य गरेका छन् । उनले श्री ५ को सरकारद्वारा निर्धारित नेपालभाषाको पाठ्यपुस्तक पलेस्वां पाँच भाग र लुँहिति तीन भाग अन्य सहकर्मीहरूसित मिली तयार गरेका छन् । यस क्रममा उनले सम्पादन मात्र गर्ने नभई पाठ्य पुस्तकको लागि सुहाउँदा कथा, कविता, निबन्ध, प्रबन्ध आदि पनि लेखेका छन् ।

उनको शिक्षण-जीवनको अर्को पक्ष शिक्षक-सङ्घर्षमा (२०३८को) भाग लिनु पनि हो । यस संघर्षकै कारण उनी माथि भनिएझैं भूमिगत भई बस्नुपरेको पनि थियो । शिक्षक-सङ्घर्षमा उनले कन्यामन्दिर विद्यालयको प्रतिनिधित्व गरेका थिए ।

# परिच्छेद : ४

# दुर्गालाल श्रेष्ठका कृतित्वको अध्ययन

दुर्गालालले एघारै वर्षको उमेरमा नाटक लेखनबाट सिर्जनयात्रा सुरु गरेका हुन् । सोह्र वर्षको उमेरबाट उनले साहित्यिक मञ्चमा कविता वाचन गर्न सुरु गरे । उनका प्रारम्भिक रचना हस्तलिखित पत्रिकामा प्रकाशित भएका हुन् । छापाखानाबाट मुद्रित रूपमा प्रकाशन हुने पत्रिकामा प्रकाशित उनको पहिलो कविता 'सान्त्वना' हो, जुन धर्मोदय (पूर्णाङ्क ९२/९३,ने.सं. १०७५) मा छापिएको थियो ।[८४] उनले युवाकालको सुरुवातमा एउटा छोटो कथा पनि लेखेका छन्, जुन पासा पत्रिकामा प्रकाशित भएको थियो । तर कथालेखन आफ्नो दक्षताको विधा नभएको ठानेर हो कि उनले त्यसपछि कथा लेखेनन् ।

पुस्तकाकार रूपमा प्रकाशित उनका कृतिहरूमा मौलिक र अनूदित कृतिहरू छन् । यहाँ उनका पुस्तकका रूपमा प्रकाशित मौलिक कृतिहरूको छोटकरीमा चर्चा गरिनेछ । अनूदित कृतिहरूको विषयमा परिच्छेद ३ मा अनुवादक व्यक्तित्वअन्तर्गत उल्लेख गरिसकिएको हुँदा यहाँ दोहऱ्याइएको छैन ।

## ४.१ झसुका:

झसुका: (सुस्केरा) कवि दुर्गालालको पहिलो प्रकाशित पुस्तकाकार कृति हो । यो फुटकर कविताको सङ्ग्रह ने.सं. १०७७ गोवर्द्धन पूजाको दिन अर्थात् नयाँ वर्षको अवसरमा (वि.सं. २०१४) प्रकाशित भएको हो ।[८५] गोष्ठीहरूमा कविता सुनाउँदै गए पछि उनलाई कविका रूपमा धेरैले चिने र रुचाए । तर उनलाई कवितासङ्ग्रह नै प्रकाशन गर्नुपर्छ भन्ने चेतना दिने पहिलो व्यक्ति उपन्यासकार धूस्वां सायमि हुन् । त्यो पुस्तक नेपालभाषाका अनन्य भाषासेवी स्वयम्भूलाल श्रेष्ठको 'श्रेष्ठ प्रकाशन'बाट प्रकाशित भएको थियो । तर त्यो पुस्तकको प्रकाशनको वेलासम्म दुर्गालालले

---

[८४] फणीन्द्ररत्न वज्राचार्य (सम्पा.), म्हसीका धलः (Who is Who in Nepalbhasa), (काठमाडौं : नेपालभाषा एकेडेमी, २०५९), पृष्ठ ११८ ।

[८५] फणीन्द्ररत्न वज्राचार्य (सम्पा.), म्हसीका धलः (Who is Who in Nepalbhasa), पूर्ववत्, मा दुर्गालाल श्रेष्ठको पहिलो प्रकाशित कृति चिनियाम्ह किसिचा को प्रकाशन समय ने.सं. १०७५ उल्लेख छ । त्यस्तै माधवलाल प्रधानले पनि आफ्नो अनुसन्धानप्रबन्ध दुर्गालालया एकाङ्की नाटक : छगू अध्ययनको परिशिष्टमा झसुका:लाई प्रकाशित कविता पुस्तकहरूको विवरण कालक्रमअनुसार तेस्रो स्थानमा राखेका छन् । तर दुर्गालाल श्रेष्ठका सबै प्रकाशित पुस्तकहरूमा प्रकाशन साल हेर्दा झसुका: नै उनको पहिलो कृति भएको प्रमाणित हुन्छ । चिनियाम्ह किसिचा को पहिलो संस्करण ने.सं. १०८५ को गोवर्धन पूजाको दिन प्रकाशित भएको तथ्य सोही पुस्तकमा उल्लेखित छ ।

स्वभम्भूलाल श्रेष्ठलाई चिनेका थिएनन् । दुर्गालालको भनाइमा उनी त्यो पुस्तकको प्रकाशनको लागि स्वयम्भूलाल श्रेष्ठभन्दा पनि धूस्वांप्रति बढी कृतज्ञ छन् किनभने धूस्वांले नै उनलाई पुस्तक प्रकाशन गर्नुपर्छ भन्ने कुराको बोध गराएका थिए र उनलाई पुस्तक प्रकाशन गर्न निरन्तर प्रेरणा दिएका थिए ।

झसुकाः निश्चय पनि प्रेम र वियोगको आँसुले भरिएका कविताहरूको सँगालो हो । नामैबाट पनि यो कुरा झल्किन्छ । तर वास्तवमा त्यति मात्र पनि होइन । यस कुरालाई कमलप्रकाश मल्लले लिसं को भूमिकामा यस पुस्तकबारे गरेको टिप्पणीले स्पष्ट पार्छ :

*"... 'झसुकाः' काव्य निश्चय पनि व्यथाप्रधान, प्रणयकाव्य भने पनि हुन्छ । प्रेममा वियोग, व्यथा र निराशाको व्यञ्जना कुनै नयाँ विषय नभएकोले 'झसुकाः' लाई परम्परावादी कृति भने पनि हुन्छ भन्नेहरू पनि होलान् । तर 'झसुकाः'मै पनि भावको सघनता, भाषाको सुकोमलता र वेदनाको तीव्रता भएको कारण दुर्गालाललाई वेदनाको मात्र नभई वेदनाजनित विद्रोहको कवि भन्दा पनि हुन्छ ।"* [८६]

६१ पृष्ठको यस पुस्तकमा उनका ३२ वटा कविता सङ्ग्रहित छन् । ईश्वरानन्दले यसमा लामो भूमिका लेखेका छन् । प्रेमकविताको सङ्ग्रह भए पनि अन्तिम एउटा कविता भने नेपालसम्वत् १०७७ को नववर्षारम्भको पृष्ठभूमिमा नेवार जातिको गौरवमय इतिहास अहिले धमिलिंदै गएकोमा चोटिलो व्यङ्ग्य गरेका छन् । यसका कविताहरू मात्रिक छन्दमा लेखिएका छन् । तर बाइसौं कविता 'छ नं बिन्दु .....' भने छन्दमा लेखिएको छैन ।

## ४.२ लिसं

लिसं (रसान) दुर्गालाल श्रेष्ठको दोस्रो कृति हो । यो झसुकाःको प्रकाशनको तीन वर्षपछि अर्थात् ने.सं. १०८० मा प्रकाशित भएको हो । लिसंको प्रकाशनमा डा. कमलप्रकाश मल्लको प्रमुख हात रहेको छ । दुर्गालालका यत्रतत्र छरिएका फुटकर कविताहरू आफैं सङ्ग्रह, सम्पादन गरी लामो र सारगर्भित भूमिकासहित पुस्तकको रूपमा प्रकाशन गर्ने सम्पूर्ण अभिभारा विद्वान् प्राध्यापक डा. कमलप्रकाश मल्लले पूरा गरेका थिए । यस कृतिको एउटा विशेषता भनेको नेपालभाषामा पश्चिमी शैलीमा प्रकाशन भएको पुस्तकहरूमा यही नै पहिलो हुनुपर्छ । यस पुस्तकको अर्को महत्वपूर्ण कुरा यसले नेपालभाषा साहित्यको सबभन्दा गरिमामय पुरष्कार श्रेष्ठ पुरस्कार (वि.सं.: २०१७) प्राप्त गरेको थियो ।

---

[८६] दुर्गालाल श्रेष्ठ, लिसं, (काठमाडौं : मिला प्रकाशन, ने.सं. १०८०), पृष्ठ ट (भूमिका खण्ड) ।

झसुका:का कविताहरूभन्दा लिसंका कविताहरूमा विषयवस्तु र सामाजिकताबोध फराकिलो भएको छ । मात्रिक छन्दमा रचिएका यसका चौवन्न वटा कविताहरूलाई विद्वान् सम्पादक डा. कमलप्रकाश मल्लले चार खण्डमा विभाजित गरेका छन् – जीवन, मतिना (प्रेम), प्रकृति र समष्टि । 'जीवन' खण्डमा झसुका: कै विवश र निराश कवि झल्केको छ भने 'मतिना' खण्डमा पनि वियोग-वेदना नै धेरै छ । तर 'प्रकृति' खण्डबाट उनको नयाँ रूप सुरु हुन्छ । यहाँबाट जीवनप्रद कविताहरू सुरु हुन्छ । यसमा 'पन्ति' (पनौती) र 'राजमती' जस्ता classic (अमर) बन्नसक्ने कविताहरू छन् । 'समष्टि' खण्डका कविताहरूमा जीवनदर्शन झल्केका छन् । यसमा बौद्धदर्शनका कविताको साथसाथै अन्यायप्रति विद्रोहका कविताहरू पनि छन् ।

यसै कुरालाई मनन गर्दै सोही कृतिको भूमिकामा प्रा. कमलप्रकाश मल्लले लेखेका छन् *"…. झसुका:देखि लिसंसम्मको बीच कविको भावलोकमा जीवनको बृहद् अनुभूति क्षेत्र कुनै न कुनै रूपमा भित्रिने प्रयास गरिरहेको देखिन्छ । वहाँको काव्य सिर्जनाको आदर्श, स्वरूप, शिल्प, शैली र दक्षतामा बढ्दै आइरहेको प्रौढताको सँगसँगै काव्यगत दृष्टिकोणको सङ्गठन र सिलसिला पनि स्पष्ट हुँदै आइरहेको छ, अनि साथसाथै वस्तु र भावभूमिको सेरोफेरो पनि विस्तारै फैलिँदै गएर जीवन र समाजको बृहद् क्षेत्रबाट विषय निर्वाचन हुँदै आइरहेको छ ।"*

## ४.३ चिनियाम्ह किसिचा

शिक्षण पेशाको सुरुवातदेखि नै दुर्गालालले विभिन्न समयमा आफ्ना विद्यार्थीहरूका लागि रचना रच्दै गरेका थिए । यसरी रचना गर्दै जाँदा थुप्रै बालगीत जम्मा भइसकेका थिए । तर उनी ती सबै सँगालेर पुस्तकाकार दिने कुरामा त्यति सचेत थिएनन् । उनले त्यसरी बालकविता लेख्ने गरेको विद्यालयका प्रधानाध्यापकले थाहापाएर उनलाई ती कविता सङ्गालेर किताब प्रकाशन गर्नका लागि प्रोत्साहित गरे । ती प्रधानाध्यापक थिए – दुर्गालालका अत्यन्त शुभचिन्तक केदारनाथ न्यौपाने जो गैरनेवार भएर पनि नेपालभाषामा सिद्धहस्त थिए । उनले सो पुस्तकमा एउटा छोटो भूमिका पनि लेखेका छन् ।

पुस्तक प्रकाशनको लागि नेपालभाषाका उपन्यासकार मथुरा सायमि (रमा प्रकाशन) अघि सरे । ने.सं. १०८५ को नयाँ वर्षको अवसरमा दुईहजार प्रति छापिएको सो प्रथम संस्करण दुई महिनामा नै सकिएको थियो । केही महिनापछि नै फेरि यसको दोस्रो संस्करण पाँचहजार प्रति छापियो । त्यो पनि सकियो । पछि यो पुस्तक विद्यालयको पाठ्यपुस्तकको रूपमा पनि राखिएको थियो । त्यसपछि त एकपछि अर्को गर्दै निक्कै संस्करण प्रकाशित भयो ।

५६ पृष्ठको चिनियाम्ह किसिचामा बत्तीसवटा बालगीतहरू सङ्कलित छन् । यस पुस्तकका विषयमा साहित्यकार प्रकाशक मथुरा सायमिले यस प्रकार लेखेका छन् :

*"धेरैजसो (यसका) कविताहरू (दुर्गालाल श्रेष्ठले) बच्चाहरूसित बच्चै भएर डिक्टेसन गराइएका हुन् । केही समयमा नै यति धेरै रसले परिपूर्ण फल फलाउनसक्ने वहाँको विलक्षण प्रतिभा हो । ...... सरल आकर्षक भाषा र बालमनोवैज्ञानिक सत्यता मात्र होइन, यसमा आवश्यक मात्रामा प्रसाद गुण पनि छ । जीवनलाई बुझ्ेर अगाडि बढ्न देखाइएका उदाहरणहरू यसमा धेरै छन् जसले बाटो नबिराईकन बच्चाहरूलाई आआफ्नो लक्ष्यमा पुग्न सघाउँछ ।"*

विषयको हिसाबले बालकविताका परम्परागत र बालप्रिय विषयहरू जस्तै कोपिला, चन्द्रमा, चरा, चङ्गा, जूनकीरी आदि एकातिर छन् भने अर्कातिर बालकविताको विषयका रूपमा अपरम्परागत सामाजिक विषयहरू पनि छन् । तिनमा मायाचा, ढ्विंनी तता (रातो माटो बेच्ने दिदी), हलूचा वँ (हलूचा पागल), हकलाः दाजु (हर्कलाल दाइ), पिवाः दाजु (रुँगालो दाइ), सिँ फाइम्ह (काठ चिर्ने मान्छे), तबः दाजु (तमोट दाइ) आदि छन् । यी कविताहरूमा उनले कुनै पात्र (यथार्थ र काल्पनिक दुवै) लाई आधार लिएर सामाजिक विसङ्गतिहरूलाई सरल बालभाषामा व्यक्त गरेका छन् ।

'मायाचा' कवितामा माया भन्ने एउटी सानी गरिब बालिका प्रमुख पात्र छ र यो उसको दुःखपूर्ण कथा हो । माया गरिब त छँदैछ, उसकी आमा बितिसकेकी छ, बुबा अन्धो छ । मायाले माग्ने काम गर्छे । करुण रसले भरिएको यस कवितामा अरू बालिकाहरू विद्यालय गएको देखेर मायालाई पनि विद्यालय जान मन लागेको तर जान नसकेको कुराबाट गरिबले समान अवसर नपाएको सामाजिक यथार्थ झल्केको छ । यो कविता अलिक लामो पनि भएको र कथासहित बगेकोले गीतिकथाको गुण यसमा छ । त्यसैले विभिन्न विद्यालयमा यो कवितामा बालबालिकाहरूले छोटो गीतिकथा मञ्चन पनि गरेका छन् ।

अर्को त्यस्तै गीतिकथाको गुण भएको कविता हो 'हकलाः दाजु' । यसमा असनमा आलु बेच्ने हकलाः दाइ प्रमुख पात्र छन् । यसमा हास्य रसप्रधान छ भने अन्त्यमा करुण रस छ । गरिब हकलाः गरिब भए पनि एउटा रमाइलो हास्य पात्र हो । ऊ दैनिक रूपमा असनमा आलु बेच्छ । उसको परिवारमा एउटी लाटी छोरी, एउटा सानो छोरा र एउटी जहिले पनि चिन्तामग्न श्रीमती छन् । हाँसीहाँसी बाँच्ने हकलाःको कविताको अन्त्यमा छोरा बित्छ । तर ऊसँग छोराको अन्तिम क्रिया गर्ने पैसा हुँदैन । यस कवितामा दैनिक व्यापारबाट खानुपर्ने अतिनिम्न व्यापारीको सामाजिक यथार्थ यसरी व्यक्तिएको छः

उखुनु पसः हर्ताल जूबले
इमि छें मि हे मच्याः हं
मस्त पित्यानाः खोगु स्वयाः वं

जल्ल मिखाय् ख्वबि तल हं[८७]

(अर्थात्, त्यो दिन पसल हडताल हुँदा तिनीहरूको चुल्हामा आगो बलेन रे । बच्चाहरू भोकले रुँदा उसको पनि आँखा रसायो रे ।)

त्यस्तै सिँ फाइम्ह (काठ चिर्ने मान्छे) को अन्तिम हरफ यस प्रकार छः

न्हिच्छिया ज्याला घौछित पाय्छि
हन्चित गय् याय् नुगले वाय्की

पिने नं कःति दुने नं कःति
गन जक सुत ज्वी उलिमछि मोती ?

(अर्थात्, दिनभरको ज्याला घण्टाभरलाई मात्र पुग्छ । भरे के गर्ने होला भनी मनमा खेलाउँछ । बाहिर पनि करौंती, भित्र पनि करौंती । कहाँ सुके होलान् त्यतिका मोती ?)

'हलूचा वें' जस्तो सडकमा भौंतारिँदै हिँड्ने बौलाहा पनि उनको बालकविताको विषय भएको छ । आजभन्दा चालीस वर्ष जति अगाडि 'हलूचा वें' भन्ने बौलाहा काठमाडौंका सडकमा अनेक विचित्र क्रियाकलाप गर्दै हिँड्थ्यो । सबै बच्चाहरू उसलाई उसका अनौठा कामले गर्दा चिन्थे । त्यसैले दुर्गालालले हलूचा वेंलाई पनि बालकविताको विषय बनाएका होलान् । हास्य रस र करुण रस मिश्रित यो कविता रमाइलो र मार्मिक छ ।

उनका अरू बालकविताले पनि अत्यन्त सरल भाषामा जीवनका सन्देश दिएका छन् । जस्तै पुलुपुलु गेरा (जूनकिरी) ले अँध्यारोसँग नथाकीकन लडिरहने र चानाहःगु भुतमालि (काटिएको चङ्गा) ले माथि पुग्यो भन्दैमा घमण्ड गर्न नहुने सन्देश दिएको छ ।

यस सङ्ग्रहका सबै कविताहरू सरल तथा बालसुलभ भाषामा लेखिएका छन्, तर तिनले गहकिला सन्देश दिएका छन् । गेयगुणले परिपूर्ण भएकाले यसका गीतहरू पढ्दा लयात्मक भएर रमाइला छन् । यसका धेरै गीतहरू गाइएका छन् ।

## ४.४ ताइभाबा

चिनियाम्ह किसिचाको सफलताको एकै वर्षको अन्तराल अर्थात् ने.सं. १०८६ मा सोही प्रकारको अर्को बालगीतसङ्ग्रह ताइभाबा (चन्द्रमा) प्रकाशित भयो । यसलाई

---

[८७] दुर्गालाल श्रेष्ठ, 'हकलाः दाजु', चिनियाम्ह किसिचा, (काठमाडौं : रमा प्रकाशन, ने.सं. १०८५), पृष्ठ ४३-४६

चिनियाम्ह किसिचाकै निरन्तरता भन्दा फरक नपर्ला । यसमा सङ्कलित बालगीतहरू पनि दुर्गालालले विद्यार्थीहरूलाई सिकाउने क्रममा रचेका हुन् । ताइभाबालाई उनले 'लयसमेत भएको गीत वा कविता' भनेर उल्लेख गरेका छन् । यसका अधिकांश गीतहरूमा पुरानो लयसमेत उल्लेख गरेका छन्, जुन लयमा आधारित भएर यसका गीतहरू सिर्जिएका छन् ।

आकारको दृष्टिकोणले पनि यो चिनियाम्ह किसिचा जस्तै छ । यसका ३५ वटा कविताहरू ५६ पृष्ठमा फैलिएका छन् । यसमा साहित्यकार ईश्वरानन्दले १५ पृष्ठ लामो भूमिका लेखेका छन् ।

यसको पहिलो गीत 'जिगु कतांमरि' (मेरो पुतली) एउटी बालिकाले आफ्नो पुतलीलाई फकाउन गाइएको गीत भए पनि धेरै महिलाहरूले आफ्नै घरका शिशुहरूलाई फकाउनलाई गाएका छन् । यसका शब्द र लय रमाइलो भएकोले बच्चाहरूका लागि रचिएको यो गीत ठूलाले पनि टिपेको हुनुपर्दछ ।

यसमा पनि चिनियाम्ह किसिचामा जस्तै प्रकृतिको रमाइलो, आर्थिक अभावको पीडा आदिका गीत छन् । तिनको अलावा ताइभाबामा परम्पराको विरोधको प्रवृत्ति पनि थपिएको छ । 'कान्तां दबदब' गीत यसको नमुना हो जसमा धर्मको नाममा दान गर्ने चलनको विरोध गरिएको छ । यसका अन्य विशेषताहरू चिनियाम्ह किसिचाकै समान छन् । शायद यसमा चिनियाम्ह किसिचाकै रचनाकालका रचनाहरू पनि होलान् जुन चिनियाम्ह किसिचामा परेका थिएनन् ।

## ४.५ पीजा

उमर खैयामको रुबाइ र बच्चनको मधुशालाको परम्परामा रक्सीलाई प्रतीक बनाएर लेखिएका प्रेमसम्बन्धी मुक्तकहरूको सङ्ग्रह हो - पीजा (फींज) । यसमा १६ र १४ मात्राको मात्रिक छन्दमा रचित ६१ वटा रुबाइ शैलीका मुक्तक सङ्कलित छन् । प्रेमिकालाई सम्बोधन गर्दै रक्सी, प्याला, मधुबाला, आदिका प्रतीक लिएका यी कविताहरूमा मुख्यतः हार्दिक प्रेमको महानताको बखान गरिएको छ । साथै प्रेममा अप्राप्ति र नैराश्यको भाव पनि समेटिएका छन् । कतैकतै क्षणिकवाद र जीवनको कटु यथार्थ पनि झल्किएका छन् । सारमा यस कृतिले कवि दुर्गालाललाई पूर्ण रूपमा प्रेम कविताका गायक रूपमा उभ्याएको छ । यस पुस्तकमा कविवर स्व. सिद्धिचरण श्रेष्ठले सारगर्भित भूमिका लेखेका छन् ।

## ४.६ सलछ्योंया बेला

सलछ्योंया बेला (घोडेटाउके बेला) अन्त्यन्त सरस बालखण्डकाव्य हो । कतिपय ठाउँमा यसलाई अनूदित कृतिको रूपमा उल्लेख भए तापनि वास्तवमा यो मौलिक कृति

हो ।[८८] दुर्गालालले यसको कथा चिनियाँ सचित्र कथामा पढेका थिए । सो कथाबाट प्रभावित भएर उनले सोही चित्रकथालाई गीतिकथाको रूप दिई यो खण्डकाव्य रचेका हुन् ।

यो गीतिकथा नेवारहरूमा लोकप्रिय राजामती लयमा लेखिएको छ । यस लयमा ६ हरफको एक पद हुन्छ । यस कृतिमा सम्बोधनसहित ९८ कवितापद छन् भने तिनलाई १० परिच्छेदमा विभाजन गरिएको छ । यस कृतिको प्रमुख विशेषता बालबालिकालाई मनपर्ने खालको भाषाको प्रयोग र लयात्मकता हो । त्यसैले यसमा बालसाहित्यमा हुनुपर्ने सम्पूर्ण गुण छ भन्न सकिन्छ ।

यसको कथामा गाउँको एउटा सोझो युवक आफ्नो मेहनतले जितेर पनि सामन्तहरूको चालले गर्दा कसरी हार्छन् भन्ने कुरा देखाइएको छ । यस कथाले प्रायःजसो सारङ्गीको टुप्पोमा घोडाको टाउको किन कुँदिएको हुन्छ भन्ने चिनियाँ लोकधारणा पनि प्रष्ट्याएको छ ।

यो कृति २०३४ सालमा प्रकाशित भएको हो ।

## ४.७ सर्गःसिबे नं धरती नमिंग्वाः

सर्गःसिबे नं धरती नमिंग्वाः (आकाशभन्दा पनि धरती राँकिएको छ) पनि गीतहरूको सङ्ग्रह नै हो । यसमा पनि प्रकाशनपूर्व नै विभिन्न मञ्चमा गाइएर लोकप्रिय भइसकेका गीतहरू छन् । तर लुँबुं वहबुँमा प्रेमका गीतहरू छन् भने यसमा विद्रोहका गीतहरू  छन् । यसका गीतहरूमा दुई कुराका विरोध छन् । एकातिर भाषिक एकाधिकारको विरोध छ भने अर्कोतिर साम्यवादको समर्थनमा तत्कालीन राजनीतिक व्यवस्थाको विरोध छ । तर यसमा दुईवटा गीतको भाव अन्यसँग नमिलेको झुक्किएर यसमा परेका जस्ता छन् । क्रमले चौथो गीत (अय्लाः नवः झन) नैराश्य र पलायनको गीत हो भने पाँचौं प्रेमविरहको गीत हो ।

यसमा ने.सं. १०७५ देखि १०८८ सम्मका गीतहरू छन् । प्रत्येक गीतको पुछारमा सो गीत कुन सालमा कहाँ गाइएको हो लेखिएको छ । ६६ पृष्ठको यस पुस्तकमा ५५ वटा गीत छन् । तर केही गीतका हरफहरू तत्कालीन प्रशासनले आपत्तिजनक ठहऱ्याएकोले यसका चार पृष्ठ च्यातिएर बजारमा आएको थियो । त्यसैको कारण दुर्गालाल श्रेष्ठले थानामा हाजिर हुनुपरेको थियो । यसका गीतहरू मात्रिक र वार्णिक छन्दमा रचिएका छन् र धेरै रचनाहरू वीररसले ओतप्रोत छन् । यसमा भएका

---

[८८] दुर्गालाल श्रेष्ठकै कृतिहरू जस्तै सुलिं र ह्यू खः थ्व छगू तुङ्गोयामा उनका प्रकाशित कृतिहरूको विवरणमा यस कृतिलाई अनूदित कृतिमा राखिएको छ । तर उनीसँगको कुराकानीमा शोधार्थीलाई उनले यो कृति अनुवाद नभई चिनियाँ मूलकथामा आधारित भएर लेखेको बताएका छन् ।

अधिकांश भाषिकअधिकारका गीतहरू पछि गायकहरूद्वारा पुनः गाइएर क्यासेटको रूपमा पनि प्रकाशित भएका छन् । यसका धेरै गीतहरू अझै पनि नेपालभाषाका एफ.एम. रेडियो कार्यक्रमहरूमा बज्ने गरेका छन् । यस कृतिमा त्यसका सम्पादक हितकरबीरसिंह कंसाकारले सारगर्भित भूमिका लेखेका छन् ।

## ४.८ लुँबुँ वहबुँ

लुँबुँ वहबुँ (सुनको फूल, चाँदीको फूल अर्थात् तोरीको फूल, मूलाको फूल) प्रेमगीतहरूको सङ्ग्रह हो । यसको पहिलो खण्ड 'लुँबुँ' मा लोकलयमा आधारित गीतहरू छन् भने 'वहबुँ' खण्डमा आधुनिक गीतहरू छन् । यसको पहिलो खण्डमा २२ वटा र दोस्रो खण्डमा २९ वटा गीतहरू छन् । यसमा रचनाकाल ने.सं. १०७४ देखिका गीत सङ्कलित छन् । यो पुस्तक दुर्गालाल श्रेष्ठका प्रकाशनभन्दा धेरै वर्षअघिदेखि लोकप्रिय भइसकेका गीतहरूको सङ्ग्रह हो । यसका धेरैजसो गीतहरू अहिले पनि लोकप्रिय रही आधुनिक रूपमा रेकर्ड भएर क्यासेट, सीडीमा निस्केका छन् । यसका गीतहरूको विशेषता भनेकै कालजयी लोकप्रियता हो । यसका लोकगीतहरू पुराना लोकलयमा आधारित भएर लेखिएका छन् । ती गीतहरूद्वारा दुर्गालाल श्रेष्ठले एक किसिमले पुराना लोकलयहरूलाई पुनर्जीवन नै प्रदान गरेका छन् । साथै मात्रिक छन्दका आधुनिक गीतहरूद्वारा उनले पुरानो लोकलयमा मात्र सीमित नरही समयानुकूल नयाँ किसिमका गीतहरूको सिर्जना गरेका छन् । विषयको हिसाबले यसका सबै गीतहरू प्रेमप्रधान छन् । तर एउटा गीत भने अपवादको रूपमा राष्ट्रिय गीत छ । तर त्यो लोकगीत वीररसको नभएर श्रृङ्गाररसको छ । त्यस गीतमा नेपाललाई युवतीको रूपमा वर्णन गरिएको छ । 'लुँबुँ' खण्डको उन्नाइसौं गीतमा भने गरिब परिवारलाई चाड मान्न गाह्रो भएको कुरा लोग्नेस्वास्नीको संवादबाट व्यक्त गरिएको छ ।

## ४.९ निमन्त्रणा

निमन्त्रणा बुद्धकालीन महिला वासवदत्ताको जीवनीमा आधारित गीतिनाटक हो । यसमा रूप-यौवनको क्षणभङ्गुरता र बुद्धधर्मको विराट्तालाई कलात्मक र काव्यात्मक रूपमा अभिव्यक्त गरिएको छ । यस कृतिमा उनको रचना-परिष्कार र कलात्मकता दुवै घनीभूत रूपमा देख्नपाइन्छ । वास्तवमा दुर्गालाल नाटक, गीत र कविता तीनवटै विधाका सिद्धहस्त लेखक हुन् र यो कृति प्रमुख रूपमा नाटक भए तापनि यी तीनवटै विधाको सङ्गम स्थल हो ।

निमन्त्रणा पूर्णाङ्की हो वा एकाङ्की सो कृतिमा केही उल्लेख गरिएको छैन । यसमा दृश्यको हिसाबले १३ दृश्य छन् । तर यसमा अङ्क विभाजन गरिएको छैन । त्यसैले एकाङ्की नै पनि भन्न सकिन्छ । तर धेरै दृश्य भएको र दृश्यहरूको स्थानको दूरी धेरै

भएको र समयको हिसाबले पनि धेरै समयको अन्तराल बोकेकोले यसलाई पूरापूर एकाङ्की भन्न पनि गाह्रो छ । जे भए पनि यो लामो गीतिनाटक हो ।

यस नाटकको लेखनको सन्दर्भमा लेखकले सोही कृतिमा यसरी लेखेका छन् : "दुई तीन वर्ष अघि – यस्तै बुद्धपूर्णिमाको समय, कान्छाबुद्धको घरमा एक हूल साथीहरूको बैठक भयो – सांस्कृतिक कार्यक्रमको आयोजना गर्ने सन्दर्भमा । एउटा रूपक प्रदर्शन गर्ने निर्णय भयो – सुदर्शन भन्तेले लेख्नुभएको यही नाटक 'निमन्त्रणा' । त्यसलाई मैले फेरि अर्को ढङ्गबाट (नाटक) खेल्न मिल्ने गरी संवाद पनि बनाएर भन्तेको अनुमति लिएँ ।" यसबाट बुझिन्छ यस नाटकका कथा-लेखक भिक्षु सुदर्शन हुन् भने यसलाई गीति गुण दुर्गालालले प्रदान गरेका थिए ।

यो नाटक २०२५ सालमा प्रदर्शन हुँदा अन्त्यन्त लोकप्रिय भएको थियो र २५ भन्दा धेरै दिनसम्म चलेको थियो । यो नाटकको सुरुवात प्रेमगीतबाट भएको छ र बीचबीचमा पनि धेरै प्रेमगीतहरू छन् । साथै बीचमा एउटा बुद्धदर्शनसम्बन्धी गीत पनि छ । ती गीतहरू नाटकको अङ्गका रूपमा मात्र नभई स्वतन्त्र गीतका रूपमा पनि अद्यापि लोकप्रिय छन् । नाटक हेर्नेलाई रमाइलो प्रदान गर्न बीचबीचमा हास्य प्रसङ्गहरू पनि सुहाउँदिलो किसिमबाट राखिएका छन् । यस नाटकको प्रभावशालिता पुस्तकको रूपमा प्रकाशित हुँदा पनि धेरै संस्करण प्रकाशित भएको तथ्यबाट पनि प्रमाणित हुन्छ ।

## ४.१० जि स्वयम्भू त्वाथः

जि स्वयम्भू त्वाथः (म स्वयम्भूको खुड्किलो) को प्रकाशन दुर्गालाल श्रेष्ठको कवि व्यक्तित्वको एउटा मोड हो । प्रेम कविता र विरोधको जोशमा अल्झिएका उनका कविताहरूले यस कृतिमा पहिलेका कृतिहरूभन्दा फरक अर्के मोड लिएका छन् । हुन त यी नयाँ रचना नभई समयसमयमा विभिन्न पत्रपत्रिकामा प्रकाशित भएका रचनाहरूकै सङ्कलन हो । दुर्गालालको पचास वर्षको उमेरमा छापिएको यस कृतिमा उनी २६ वर्ष हुँदादेखिका कविताहरू पनि समाविष्ट छन् । खास गरी यस कृतिमा विषयचयन फराकिलो र समसामयिक भएको छ, वैचारिक प्रौढता प्रकट भएको छ । अभिव्यक्तिमा अझै सशक्तता आएको छ । यसअघिसम्म दुर्गालाल श्रेष्ठलाई गायककवि मात्र भन्ने गरिएको विपरीत यसमा विचारकवि प्रकट भएको छ । यसको खास विशेषता भनेको छन्दमा रचिएका भए तापनि यसका कविताहरूले समसामयिक विषय र वैचारिक प्रौढता बोकेका छन् । सारांशमा भन्दा यसका कविताहरू संरचनामा परम्परागत भएर पनि विषय र विचारले आधुनिक भएका छन् । यिनमा छन्दको रमाइलो र गद्य कविताको विचारप्रधानता दुवैको एकैपल्ट रसास्वादन गर्न पाइन्छ । यसै कुरालाई याकःफल्चाको भूमिकामा मल्ल के. सुन्दरले यसरी लेखेका छन् : *"पद्यवादी परम्परा भएर पनि कवितामा पुरानो बिम्ब, प्रतीक, उपमा, उपमेयको सट्टामा आफ्नै प्रकारको नयाँनयाँ प्रतीक प्रयोग गर्ने कुरामा वहाँ सचेत हुनुहुन्छ भन्ने कुरा वहाँको जि स्वयम्भू त्वाथः र याकःफल्चा भित्रका रचनाहरूले यथेष्ट प्रमाणित गरेका छन् । ....... शैलीगत*

*रूपमा पुरानोपना र वैचारिक रूपमा आधुनिकपनाको संवाहक कवि दुर्गालाल हाम्रो काव्यक्षेत्रको हिजो र आजको एउटा दरिलो समन्वय हो ।”* [८९]

यसका कविताका विषयमा ‘चुगां’ (चुगाउँ) र ‘किपुली घौछि’ (कीर्तिपुरमा एकछिन) जस्ता उपत्यकाका परिवेश छन् भने ‘बलिबेदी गुयेन भान ट्रोइ’, ‘होचिमिन्हया निधनय्’ (होचिमिन्हको निधनमा), ‘भियतनाम जिगु छन्त प्रणाम’ (भियतनाम तिमीलाई मेरो प्रणाम) जस्ता भियतनाम युद्धका प्रसङ्गहरू छन् । यसमा जनमत २०३८ को परिणाम जस्तो राष्ट्रिय राजनीति पनि उनका कविताका विषय भएका छन् । उनले यस कृतिमा माओ त्से तुङ्गको मृत्युमा मात्र होइन प्रेसको एउटा साधारण कम्पोजिटरको मृत्युमा पनि ‘नां न गांगु शहिद-पङ्क्ती मेम्ह नं छम्ह झोछुत’[९०] (नाउँ-न-गाउँका सहीदहरूको पङ्क्तिमा अर्को एकजना पनि थपियो) भनी कविता लेखेका छन् ।

१०२ पृष्ठको यस कृतिमा ५८ वटा कविताहरू छन् ।

## ४. ११ याकःफल्चा

जि स्वयम्भू त्वाथःको एकै वर्षपछि प्रकाशित याकःफल्चा (एक्लो पाटी) जि स्वयम्भू त्वाथःकै निरन्तरता र अझ उत्कर्षतर्फको यात्रा हो । यसका ५९ वटा कविताहरूको अध्ययन गरी सोही पुस्तकका भूमिकाकार मल्ल के. सुन्दरले तिनमा छवटा प्रवृत्ति भएको उल्लेख गरेका छन्[९१] । ती हुन् : आत्मचिन्तन, मानवीय मूल्यको खोज, यात्रावर्णन, शोक र संस्मृति, घटनामूलक । हुन त यी प्रवृत्ति याकःफल्चाको मात्र नभई जि स्वयम्भू त्वाथः र त्यसपछिका कृतिहरूमा पनि समान रूपमा भेटिन्छन् ।

याकःफल्चाभित्र ‘जि’ (म) कविताले उनको आत्मचिन्तन प्रवृत्तिको प्रतिनिधित्व गरेको छ । यसको निचोडमा कविले यस्तो भनेका छन् : “खः, जि वहे खः, मदु धाय् मजियाः जक हे खः दैच्वंम्ह” (अर्थात्, हो म त्यही हूँ, जो छैन भन्न नभएर मात्र नै भइरहेको) । अन्तर्यात्रा, धकिं खिनाः थःत स्वयाबले (पर्दा खोलेर आफूलाई हेर्दा), शून्य व जि (शून्य र म) पनि सोही प्रवृत्तिका सशक्त कविता हुन् ।

मानवीय मूल्यको खोजको प्रवृत्तिको प्रतिनिधित्व गरेको छ ‘न्हू सतक’ (नयाँ सडक) कविताले । त्यस्तै बालदिवस, ह्याउँमचा (शिशु), भ्वीसँम्वोगु छ्यों स्वस्वं (कपाल

---

[८९] मल्ल के. सुन्दर, ‘नेपालभाषा काव्यय् कवि दुर्गालाल’ (भूमिका) दुर्गालाल श्रेष्ठ रचित याकःफल्चा, (काठमाडौं : सुमन-सुचिता-सरोज), ने.सं. ११०७, पृष्ठ झ्य (भूमिका खण्ड) ।

[९०] दुर्गालाल श्रेष्ठ, ‘भूवन मन्त’, जि स्वयम्भू त्वाथः, (काठमाडौं : सुमन-सुचिता-सरोज, ने.सं. ११०६), पृष्ठ ९७ ।

[९१] मल्ल के. सुन्दर, ‘नेपालभाषा काव्यय् कवि दुर्गालाल’ पूर्ववत्, पृष्ठ त्र (भूमिका खण्ड। ।

फुलेको टाउको हेर्दै), कविता मालांच्वना (कविता खोज्दै छु) आदि यसै प्रवृत्तिका कविताहरू हुन् ।

पिस्कर गां (पिस्कर गाउँ), पडरिया, मनकामना, लुम्बिनीया क्यबय् (लुम्बिनी बगैंचामा), तामाङ गामय् (तामाङ्ग गाउँमा) आदि यात्रावर्णनका कविता हुन् । तर तिनमा यात्राको विवरण मात्र नभएर जीवनदर्शन नै छ । त्यसैले यो प्रवृत्तिलाई यात्रावर्णनमात्र नभनेर यात्रादर्शन नै भन्दा पनि फरक पर्दैन । यस सम्बन्धमा मल्ल के. सुन्दरले सोही पुस्तकको भूमिकामा यस्तो भनेका छन् : *"यात्रावर्णनमा यात्राको अनुभूति भेट्टिनु सामान्य स्वभाव हो । तर यसमा पनि मानवीय जीवनदर्शनको सुगन्ध भेट्टाउनसक्नु वहाँ (दुर्गालालको) विशेषता हो । त्यसैले वहाँको यात्रावर्णनभित्र यात्राको तीतोमीठो स्वादमात्र होइन वहाँभित्र लुकेका दर्शन पक्षको बाहुल्य पनि त्यत्तिकै छ । यही यात्रावर्णनको बाटोबाटै आफ्नो वैचारिक रथ अगाडि बढाउनमा पनि वहाँ उतिकै सचेत हुनुहुन्छ ।"* [९१]

यस सङ्ग्रहका शोक-कविताहरूमा धर्मादित्य धर्माचार्य, ज्यान बहादुर नेवाः, चित्तधर हृदय, गोविन्द चिकंमू, स्वयम्भूलाल श्रेष्ठ आदि नेपालभाषाका सेवी तथा साधकहरूको मृत्युमा लेखिएका कविताहरू पर्छन् । उल्लेखित प्रख्यात व्यक्तित्वहरूको साथसाथै उनले एउटी अनाथ आइमाईको बच्चाको मरणमा पनि एउटा कविता लेखेका छन् । उनी प्रेमवियोगका रुन्चे कविता लेख्न सिपालु भए तापनि उनका शोक-कविताहरूमा भने नैराश्यभन्दा जागरण र जीवनवादी भावना नै बढी पाइन्छ । स्वर्गीय व्यक्तित्वबाट प्रेरणा लिनुपर्ने र उनले गरेका कार्यलाई नयाँ पुस्ताले निरन्तरता दिनुपर्ने जस्ता सन्देश उनका शोक-कवितामा पाइन्छन् ।

दुर्गालाल तत्काल संवेदनाका कवि हुन् । त्यसैले उनका धेरै कविताहरू बाह्य घटना वा परिवेशले उनको मनमा परेका प्रभावको प्रतिक्रिया हुन् । उदाहरणको लागि उनले कुनै पत्रिकामा छापिएको तस्बीरमा एउटा बच्चाले काँधमा बन्दूक बोकिरहेको देखे र उनले त्यसैको प्रतिक्रियास्वरूप 'ब्वहलय् तुपः दुम्ह मचा' (काँधमा बन्दूक बोकेको बालक) कविता लेखे । यस कवितामा उनले बालबालिकालाई युद्धमा प्रयोग गर्नुको विरोध गरेका छन् । यस सङ्ग्रहमा उनले नितान्त निजात्मक घटनादेखि राष्ट्रिय अन्तर्राष्ट्रिय घटनाहरूको प्रतिक्रियामा तीक्ष्ण संवेदनापूर्ण कविताहरू लेखेका छन् । 'ब्यागलं'(भिन्नै), 'बालदिवस' आदि यस्तै कविता हुन् ।

मात्रिक छन्दका कविताहरूको यस सङ्ग्रहमा 'थ्व गज्याःगु यातना' (यो कस्तो यातना) एउटा भने गद्यकविता हो । यसले उनी छन्दका कवि भए पनि छन्दका कट्टर आग्रही होइनन् भन्ने प्रमाणित गर्छ । यसपछि उनले धेरै गद्यकविताहरू पनि लेख्न थालेको पाइन्छ ।

---

[९१] पूर्ववत्, पृष्ठ ध्य (भूमिका खण्ड) ।

## ४.१२ इन्कलाबया पला:स:/इन्कलाबको पदचाप

यो २०४६ सालको जनआन्दोलनको पृष्ठभूमिमा रचिएका कविताहरूको सङ्ग्रह हो । जनआन्दोलनको पूर्वभूमि, आन्दोलनरत वेला र आन्दोलनको पराकाष्ठा र त्यसको लगत्तैपछि भएका घटनाहरूको तत्कालीन प्रतिक्रिया स्वरूप यी कविताहरूको रचना भएको हो । कुनै एउटा विशेष घटनाको सन्दर्भमा तत्काल र थुप्रै कविताहरू रच्न थालेको यो दुर्गालालको पहिलो कृति हो भने यस्तो प्रवृत्तिको निरन्तरता चस्किँदो घाउ इतिहासको, लण्डनस्वां र तपकमा भएको छ ।

यसपछिका धेरै कृतिहरू दुर्गालाल स्वयम्ले नेपालभाषा र नेपाली दुवैमा सहलेखन गरेका छन् तर यो कृतिका कविताहरूको नेपाली अनुवाद उनको नभई चित्तरञ्जन नेपालीको हो । यस कविताकृतिका कविताहरूमा जनआन्दोलनको पूरा इतिहास नै प्रतिबिम्बित भएको छ ।

## ४.१३ प्याखंपिचा

दुर्गालाल श्रेष्ठले जीवनमा थुप्रै एकाङ्की लेखेको भए तापनि उनको एक मात्र एकाङ्की सङ्ग्रह प्रकाशित भएको छ । त्यो हो – प्याखंपिचा (नाटकको थैलो) । यसमा पनि उनका सबै एकाङ्की समेटिएका छैनन् । यसमा जम्मा १२ वटा एकाङ्की नाटकहरू छन् ।

यसमा भएका नाटकहरूमा 'जि सिद्धिदास' (म सिद्धिदास) र 'ततजा:गु मेच' ( अग्लाअग्ला कुर्सी) भाषाप्रेमका नाटक हुन् । 'जि सिद्धिदास' नेपालभाषाका महाकवि सिद्धिदासको जीवनीमा आधारित नाटक हो । विषयवस्तुको हिसाबले यसलाई ऐतिहासिक नाटक पनि भन्नसकिन्छ । तर यस नाटकमा कविको जीवनी नै भन्दा पनि कविको आर्थिक अवस्थाको कारण घरमा भइरहने कचमच र सोको बावजूद पनि कविको टसमस नहुने भाषाप्रेमको उदाहरण प्रस्तुत भएको छ । त्यसैले यो ऐतिहासिकभन्दा शुद्ध भाषाप्रेमको नाटक हो । यसमा सिद्धिदासको जीवनीको केही आधार त लिइएको छ, तर सबै संवाद र स्थिति सोही आधारमा दुर्गालालको कल्पनाद्वारा निर्मित भएका हुन् । अभावको परिस्थितिमा पनि सिद्धिदासको अद्वितीय भाषाप्रेम देखाएर दर्शकमा भाषाप्रेम जगाउने यसको मूल उद्देश्य हो ।

यस नाटकको अर्को विशेषता हो नारी पात्रहरूको (सिद्धिदासकी धर्मपत्नी र बहिनी) प्रमुख भूमिका भएर पनि मञ्चमा उनीहरू देखापर्दैनन् । त्यस वेला नाटकमा खेल्ने महिला कलाकारको अभावले गर्दा उनले मञ्चनमा समस्या नआओस् भनेर यसरी महिला पात्र मञ्चमा आउनै नपर्ने गरी नाटकलेखनमा व्यवस्था गरेका हुन् । यसलाई अङ्ग्रेजीमा theatre guiding the drama (मञ्च निर्देशित नाटक) भनिन्छ । १६ औं शताब्दीका विश्वप्रसिद्ध अङ्ग्रेजी नाटककार विलियम शेक्सपियरले पनि त्यस वेला

नाटकमा महिला कलाकार पाउन गाह्रो हुने भएकोले यस्तै व्यवस्था the Merchant of Venice मा गरेका थिए । त्यसमा महिला पात्रले पुरुषको भेष बदलेको प्रसङ्ग छ, जसले गर्दा महिला पात्र नै मञ्चमा उभ्याउन परेन ।

कुर्सीको निमित्त आफ्नो मातृभाषालाई छोड्ने विद्यालयको प्रधानाध्यापक र मातृभाषालाई माया गर्ने शिक्षक सागर बीचको द्वन्द्व नै 'ततःजाःगु मेच' नाटकको मुख्य कथा हो । दुर्गालालले आफू शिक्षक छँदा अध्यापन विद्यालयमा देखेका प्रवृत्तिहरूलाई यस नाटकमा उतारेका छन् । यसमा एकातिर मातृभाषामा शिक्षा नपाएका बालबालिकामा देखिने विकृतिलाई देखाएका छन् भने अर्कोतिर शिक्षक भनाउँदाहरूको नोकरबुद्धि पनि प्रष्ट्याइएको छ ।

यस नाटकको खलपात्र प्रधानाध्यापकको विचार विद्यार्थीहरूले आफ्नो मातृभाषा नेपालभाषा छोडेर नेपाली भाषा अँगाल्नुपर्छ भन्ने हो । तर नायक पात्र शिक्षक सागर भन्छ – 'जाबा एउटा कुर्सीको निम्ति आज आफ्नो जाति छोड्नसक्नेले भोलि नेपाली भाषामात्र छोड्दैन भन्ने के ग्यारेण्टी छ ?' आज सहरका उच्च र मध्यमवर्गले साँच्चि नै नेपालीलाई पनि छोडेर अङ्ग्रेजी भाषा मात्र अँगाल्न थालेका छन् । दुर्गालालले यो कुरा उही वेला मनन गरिसकेका थिए ।

'रामबहादुरया संसार', 'ईंचा बांलूगु चन्द्रमा', र 'न्हाय् ध्यनाः सर्गः छाय् स्वये' कर्मचारीवर्गको समस्यासँग समन्धित नाटक हुन् । यी नाटकका मुख्य कथा उनले वास्तविक जीवनबाटै लिएका छन् ।

'रामबहादुरको संसार'को मूलपात्र उनले अध्यापन गर्ने कन्या मन्दिर विद्यालयकै एक जना पाले हो । पिउनहरू धेरैजसो उत्पीडित जातिकै हुनेगर्छन् । त्यस वेला कन्यामन्दिरमा पनि त्यस्तै सीताराम नामको एकजना पिउन थियो । ऊ गाउँको मान्छे भए तापनि सामन्तहरूले सबै घरजग्गा हडपेकाले सुकुम्बासी भएको थियो । कहिलेकाहीं चाँडै विद्यालय पुग्दा दुर्गालाल उससित चुरोट खाँदै कुरा गर्दै बस्थे । उसले धेरैजसो आफ्नै गाउँको कुरा सुनाउँथे । एकताका उनले जे.पी. विद्यालयमा पनि रात्री कक्षामा पढाउन जान्थे । त्यहाँको पालेको पनि उस्तै कथा थियो । त्यसै वेला उनको एकजना साथीले उनलाई तत्कालीन पञ्चायती प्रशासनले गाउँगाउँमा बचत भकारी भनी अन्न सङ्कलन गर्न आउँदा किसानहरूलाई गर्ने क्रूर व्यवहारबारे आफ्नै आँखाले देखेको घटना पनि सुनाएका थिए । एकातिर ती दुई पालेका कथा र अर्कोतिर बचतभकारी सङ्कलनको कुरालाई जोडेर उनले रामबहादुर पात्र सिर्जना गरे । यो नाटक नेपालीमा पनि अनुवाद भएर धेरै नै गाउँहरूमा प्रदर्शन पनि भएको थियो । यस नाटकबारे दुर्गालालको आफ्नै भनाइ छ : यस नाटकमा क्रान्तिकारी जोश भए तापनि आवश्यक स्वाभाविकताको अभाव भएको मैले महसूस गरेका छु ।[९३]

---

[९३] सुरेश, 'जिगु नाटक जिम्ह पात्र', सन्ध्याटाइम्स, ने.सं. ११२४ नयाँ वर्षको विशेष परिशिष्टाङ्क, पृष्ठ ३४।

त्यस्तै 'इंचा बांलूगु चन्द्रमा' (हँसिया आकारको चन्द्रमा) नाटकको श्याम नामको पात्र त्यस वेलाको झापाली नक्सलाइट आन्दोलनमा भाग लिएको व्यक्ति थियो । उसको कथा कसैले दुर्गालाललाई सुनाएको थियो । त्यसैको आधारमा उनले यो नाटक रचे ।[९४]

'न्हाय् ध्यनाः सर्गः छाय् स्वय्' (नाक काटेर आकाश किन हेर्ने) नेपाल आदर्श माध्यमिक विद्यालय (गणबहाल, काठमाडौं अवस्थित) का संस्थापक हरिकृष्ण मूलको शिक्षक जीवनमा आधारित हो । आफैं संस्थापक भई जीवन अर्पेर हुर्काएको विद्यालयबाट नयाँ नियमको कारणले बाहिरिनु पर्दा उनमा परेका आघात नै यस नाटकको विषयवस्तु हो । नयाँ नियमअनुसार उमेरको हदबन्दीको कारणले उनी बाहिरिनु परेको थियो । तर उनको शरीर त्यस वेलासम्म निकै तगडा थियो ।[९५]

प्रत्यक्ष वा परोक्ष रूपमा राजनीतिक विषय भएका चार नाटकहरू पनि यस सङ्ग्रहमा छन् । 'तर इतिहास न्ह्यानांच्वनी' (तर इतिहास अघि बढ्दै गर्छ) प्रत्यक्ष राजनीतिक विषयको नाटक हो । यो मोतिगुर्जुको जीवनीमा आधारित छ । मोतीगुर्जु एकजना पक्का वामपन्थी कार्यकर्ता थियो । तर परिस्थितिको कारणले सरकारको ऊ गुप्तचर हुनुपऱ्यो । वामपन्थी कार्यकर्ता भइरहेको बखत ऊ जेल पर्छ । सबैलाई कसैनकसैले भेट्न आउँछ । तर उसलाई कसैले भेट्न आउँदैन । एकातिर यसले उसमा निराशा जागिरहेको थियो भने अर्कोतिर आफ्नै पार्टीको एकजना नेताले पार्टीकै पैसाले स्वास्नीको नाममा जग्गा किन्यो भन्ने सुनिन्छ । यसले उनलाई किंकर्तव्यविमूढ बनाइदिन्छ, अनि त्यस नेतालाई मार्ने उद्देश्य बनाई आत्मसमर्पण गरी सिआइडी बनेर जेलबाट निस्किन्छ । एकदिन उसलाई सिआइडी हेडक्वाटरबाट बोलावट आउँछ र एकजना नेताको घरमा छापामार्न जानुपर्ने हुन्छ । प्रहरीसँगै गई छापा मार्न जाँदा त्यस वेला अन्डरग्राउण्ड बसेका नेता शम्भुराम श्रेष्ठको घरमा पो पर्छ । शम्भुराम श्रेष्ठ उनको आदर्श पात्र थिए । कस्तो बिडम्बना, आफूलाई मन नपर्ने नेतालाई मार्न सिआइडी हुनगएको उसलाई आफ्नो प्रियपात्रलाई समात्न बाध्य हुन्छ । यो कथा उसलाई मोतीगुर्जुले नै सुनाएका थिए ।[९६]

एउटा विद्यालयमा भएको हडताललाई विषयवस्तु बनाएर लेखिएको नाटक हो 'मिजला' । यसमा मिजला मूल पात्र छिन् र उनी विद्यार्थी नेतृ हुन् । राणा शासनकालमा मिजलाकै बुबाले सो विद्यालय स्थापना गरेका थिए । तर आन्दोलनकारी भएको कारण मिजलालाई त्यहाँका भाट शिक्षकहरूले 'माथि'को निर्देशनअनुरूप विद्यालयबाट निकालिदिन्छन् । यो कथा पनि कुनै सत्य घटनाकै आधार लिएर निर्माण गरिएको हो कि जस्तो भान हुन्छ ।

---

[९४] पूर्ववत्, पृष्ठ ३६ ।

[९५] पूर्ववत्, पृष्ठ ३८ ।

[९६] पूर्ववत्, पृष्ठ ३८ ।

'भू सी दइ' (रहस्य उधिन्छ) पञ्चायत व्यवस्थाको विरुद्ध विद्यार्थी आन्दोलनलाई विषय बनाएर लेखिएको नाटक हो । उक्त सङ्घर्षलाई लिएर शिक्षकशिक्षिकाहरूबीचको मतभेदले नाटकलाई अगाडि बढाउँछ । कुर्सी प्यारा अध्यापक वर्ग र आन्दोलनका समर्थक वर्गबीचको झगडाले नै यो नाटक निर्माण भएको छ । यो एक राजनीतिक नाटक हो ।

'वाया दुने जाकि दु' (झगडाको बिउ) गाउँभित्रको शोषणको कथा भए तापनि यसको प्रस्तुति अनौठो खालको छ । यसको सुरुमा हास्यव्यङ्ग्य पनि छ र धेरै भाग भूतको नाटक जस्तो पनि लाग्छ । तर अन्तिममा नाटकको पात्र सेठ विक्रमध्वजले बाबुकाजीलाई तर्साउने भूतको रूपमा प्रयोग गरेको कुरा खुल्छ र यो गाउँमा व्याप्त शोषण र अन्धविश्वासको कथा बन्न पुग्छ । यसको प्रस्तुतिमा भिन्नपना छ ।

'नकतिनि लूगु निभाः' (भरखर उदाएको घाम), 'व मिसा' (त्यो केटी) र 'न्हूगु छेँया भम्चा' (नयाँ घरकी दुलही) विवाह र महिला समस्याको विषयवस्तुका नाटक हुन् । 'नकतिनि लूगु निभाः' स्वस्थानीको कथामा जस्तै वृद्ध र बालिकाको अनमेल विवाहको कथा हो । यस नाटकको नाम (भरखर उदाएको घाम) ले बालापनमै वृद्धसँग विवाह भएकी नायिका चण्डिकाको अवस्थालाई जनाउँछ । 'व मिसा' महिला साहसको कथा हो । नाटकमा खेल्ने महिलालाई त्यस वेला समाजले राम्रो आँखाले हेर्दैनथ्यो । त्यसैले एउटी कलाकार नारीलाई आफ्नो प्रेमीले उसको बुबाले भित्र्याउन नमानेकोले छोडिदिन्छ । सो नारीले आफू त्यही घरको बुहारी बनेर आउने धम्की दिन्छ र पछि उनले पूर्वप्रेमीको दाइको दुलही भएर भित्रिन्छे । 'न्हूगु छेँया भम्चा' महिला अधिकारसम्बन्धी नाटक हो । यसमा प्रेमकथा भए तापनि महिला अधिकारको वकालतको प्राधान्य रहेको छ । केटाले धोका दिँदा केटीलाई बढी चोट पर्ने कुरा यसमा दर्शाइएको छ । अहिले महिलाअधिकारवादीहरूले छोरासरह पैतृक सम्पत्तिमा महिलाअधिकारको वकालत गरिरहेको वेला यो नाटक सान्दर्भिक भएको छ ।

## ४.१४ ह्यू खः थ्व छगू तुङ्गोया

ह्यू खः थ्व छगू तुङ्गोया (परिवर्तन हो यो एउटा तुङ्गोको) पनि सलछ्योंया बेलाजस्तै चिनियाँ कथा 'स्कूल मास्टर तुङ्गो' को आधारमा रचिएको गीतिकथा हो । यसलाई लय हाली पढ्ने कथा भनी सोही पुस्तकमा उल्लेख गरिएको छ । यो १६-१४ को मात्रिक छन्दमा लेखिएको छ । यसमा सम्बोधनसहित जम्मा ११६ कविताका पदहरू छन् । परिच्छेदको हकमा सम्बोधन सहित सात परिच्छेद छन् । यो गुणी स्कूल मास्टर तुङ्गो र बैगुणी स्यालको कथा छ ।

हुन त यो बालसाहित्यको रूपमा सफल कृति हो तर दुर्गालाल आफ्नो यस प्रयासमा पूर्ण रूपमा सन्तुष्ट नरहेझैं लाग्छ । त्यसैले यस कृतिको मन्तव्यमा उनले लेखेका छन्: 'बालखण्डकाव्यको लागि नै कलम उचालेको भए पनि राम्रो बनाउने

लोभको कारण म आफ्नो कार्यमा चाहिए जति इमान्दार हुनसकिन । यो मेरो कमजोरी हो ।' वास्तवमा यो किशोरहरूको लागि पढ्न सुहाउँदो साहित्य हो । अरूले पढेर सुनाएमा ससाना बालबालिकाले पनि रमाइलो मान्ने खालको छ ।

## ४.१५ इच्छाको सिमाना

दुर्गालालले विश्वप्रसिद्ध रूसी साहित्यकार पुस्किनद्वारा रचित बालखण्डकाव्य माझी र सुनको माछो को नेपालभाषामा अनुवाद ई.सं. १९६६ मा नै गरिसकेका थिए । सोही कृति पुनः नेपालीमा अनुवाद गर्ने क्रममा उनले धेरै पदहरू आफैं थपी अनुवाद नभई पुनर्रचना गर्न पुगे । यो बालखण्डकाव्य बालभाषा र मनोविज्ञानअनुरूपको छ । तर उच्चकलात्मकताले गर्दा जुनसुकै उमेरवर्गलाई पनि यसले तान्छ । मान्छेको चाहनाको असीमितता र त्यसले गर्दा अन्त्यमा नराम्रो धोका पाइने यस कथाको मूल पाठ हो । लयात्मकता, गीतिगुण र लोकभाखाले पूर्ण यो कृति उच्चस्तरको बालसाहित्यको नमूना हो ।

## ४.१६ थुंदीगु घाः इतिहासया/चस्किँदो घाउ इतिहासको

नेपालभाषा र नेपाली दुवै भाषामा रचित यो कृति राजा वीरेन्द्रको वंशविनाशको पीडादायी क्षणमा रचिएका कविताहरूको सङ्ग्रह हो । त्यसैले यसका कविता अन्तर्हृदयको संवेदनाले घनीभूत छन् । कविको व्यक्तिगत भावानुभूति भए तापनि सो क्षण नेपालीहरू सबैको साझा पीडाको क्षण भएकोले यी कविताहरूले सबै नेपालीको साझा दुःखको प्रतिनिधित्व गरेका छन् ।

यस सङ्ग्रहमा २०५८ सालको जेठदेखि श्रावणको सुरुसम्ममा रचिएका ३७ कविताहरू छन् । यी कविताहरू रुबाइ-मुक्तक शैलीमा १६-१४ मात्रिक छन्दमा रचिएका छन् । यसका कविताहरूमा तत्कालीन शोकपीडा, जीवनको निरीहता, प्रेमको उच्चता अभिव्यक्त छ । कतैकतै भाटहरूको घिनलाग्दो चाकरीप्रवृत्तिप्रति तीखो व्यङ्ग्य पनि छ । यसको एउटा नमुना यस्तो छ :

चरा मगन भै गाइरहेछन्
फुल्दै छन् उसरी नै फूल,
कति चाँडो बिर्सेका यिनले ?
हामी अझ छौं शोकाकुल !

बुझें बुझें सब स्वार्थी रैछन्
महलभित्रका यी प्राणी,
आँसु कहाँ हो यिनले झार्ने
त्यो त फगत् पानी पानी !

## ४.१७ तपक

"तपक आकस्मिकताको देन हो" सोही पुस्तकमा दुर्गालालले भनेका छन् । एउटा कवयित्रीको कविताकृति पढ्दापढ्दै उनले अर्को आफ्नै कविताकृति सिर्जना गरे – तपक । कवयित्री केशरी वज्राचार्यको कविता पुस्तकको प्रत्येक पृष्ठमा चित्र पनि थिए । उनलाई कविताले भन्दा पनि चित्रले बढी छोयो । उनकै भाषामा – 'कताकता चित्रमा तैरिएका कविताले आकार मागेझैं लाग्यो ।' त्यस पुस्तकको प्रत्येक पृष्ठमा कोरिएका चित्रहरू हेरी सोही चित्रहरूलाई भाव दिने क्रममा उनले त्यही पुस्तकका पृष्ठका खाली ठाउँमा कविता रच्दै गए । सो पुस्तक पढ्न पनि सकियो र अर्कै कृति तयार पनि भयो । प्रत्येक कविताको अन्त्यमा दिइएको मिति हेर्दा यसका ६५ वटा कविताहरू ६ दिनमा तयार भएको बुझिन्छ ।

छन्दमा कविता लेख्ने दुर्गालालले यस कृतिमा धेरै कविताहरू गद्यमा लेखेका छन् । यसका धेरै कविताहरूमा प्रेम नै मूलभूत विषय छ । प्रेममा पनि विछोड र त्यसको पीडा र त्यसबाट उत्पन्न निराशा नै यस कवितासमूहमा बढी पाइन्छ । यी कविताहरूमा झसुकाः र लिसंकै दुर्गालाल फेरि बिउँतेर आएझैं लाग्छ । प्रायः नेपालभाषामा कविता लेख्ने उनले यो कृति मूल रूप नै नेपालीमा लेखेका छन् । कवयित्री केशरी वज्राचार्यको नेपाली कविता पढ्दै लेखेकाले होला, यो कृति नेपालीमा नै तयार भएको ।

## ४.१८ फूल तिम्रै बारीको

इच्छाको सिमाना र तपकपछि नेपालीभाषामा लिखित दुर्गालालको तेस्रो कविताकृति हो फूल तिम्रै बारीको । यो कवितासङ्ग्रह दुर्गालालले द्वारिका श्रेष्ठद्वारा चितवन जङ्गल लजमा सञ्चालित 'साहित्य वनमहोत्सव' मा भाग लिन जाँदा तयार गरेका हुन् । त्यसैले यसलाई सो कृतिमा जङ्गलकविता भनिएको छ । प्रकृतिनजिक बसेर लेखिएको हुँदा यसमा प्रकृतिसम्बन्धी कविताहरू धेरै छन् । तर वर्गविभेद विरुद्धका कविताहरू पनि यसमा उल्लेख्य रूपमा परेका छन् । यस सङ्ग्रहका प्रभावशाली कवितापदहरू हुन् :

यो जगको कविगायक हूँ म, हो मेरो कर्तव्य महान्  
तीतो-तीतो जीवन भोगी मीठो-मीठो गाउनु गान[९७]

माग्छु तिमीसित आज रुँदै म यौटा कविता ओ निर्जन !  
त्यस्तो कविता जसबाट फिरोस् यो धर्तीको हरियोपन[९८]

---

[९७] दुर्गालाल श्रेष्ठ, फूल तिम्रै बारीको, (बनेपा : जनमत प्रकाशन, २०५७), पृष्ठ ३२ ।

यस सङ्ग्रहका कविताहरू पनि उनले सधैंजसो प्रयोग गर्ने मात्रिक छन्दमै लेखिएका छन् ।

## ४.१९ ग्वींनिला

दुर्गालालको चालीस वर्षको कविता साधनाका प्रतिनिधि कविताहरूको सङ्ग्रह हो – ग्वींनिला (बटाइ) । यो कवितासङ्ग्रहको सम्पादन चित्तरञ्जन नेपालीले गरेका छन् । यसको अङ्ग्रेजी अनुवाद तीर्थराज तुलाधरले twists and turns को नामबाट गरेका छन् । यसको अङ्ग्रेजी अनुवादमात्र पढेर प्रभावित भई एकजना अपरिचित जापानीले जापानीमा समेत अनुवाद गरेका छन् । यसैबाट दुर्गालालको कविता-शक्ति बुझ्नसकिन्छ ।

यो सङ्ग्रहमा दुर्गालालको काव्यजीवनको सुरुदेखि ने.सं. १११९ सम्मका १२५ कविता सङ्कलित छन् । दुर्गालालको कविताप्रवृत्ति बुझ्नको लागि यो कृतिले ऐनाको काम गरेको छ । यसमा छन्दका कविता, गीत, रुबाइ, गद्य कविता सबै सङ्कलित छन् । उनको विषय र विचारगत विविधतालाई पनि यस कृतिले प्रतिनिधिमूलक बनाउन खोजेको छ । तर यसमा उनका प्रगतिशील गीतहरूको सही प्रतिनिधित्व भने हुनसकेको छैन ।

## ४.२० कागजको डुङ्गा

कागजको डुङ्गा दुर्गालालका बीसवटा नेपाली बालगीतहरूको सङ्ग्रह हो । यसमा उपदेशात्मकभन्दा पनि शुद्ध मनोरञ्जनात्मक बालगीतहरू छन् । तर धेरैजसो गीतमा जीवनको वेदना र दर्शनका पाठ पनि छन्, तर त्यो स्थूल नभएर सूक्ष्म रूपमा कलाभित्र लुकेर आएका छन् । 'कागजको डुङ्गा', 'बिहान बारीमा', 'शनिबार', 'पुतलीसित' शुद्ध मनोरञ्जनात्मक छन् भने 'सडक छापे सानो भाइ' र 'टुहुरो केटो' मार्मिक संवेदनापूर्ण गीत हुन् । त्यस्तै 'घाउ लाग्दाखेरि', 'उदेक लाग्छ', 'बालगीत', 'सार्की बूढो माने', 'इशारा', जीवनको सन्देश पनि समेटिएका गीतहरू हुन् । 'मेरो राजा' र 'एका है देशमा' भने ठूलो मानिसले बच्चाको लागि गाउने लोरी हुन् ।

यस गीतिसङ्ग्रहको श्रव्य गीतिचक्का पनि प्रकाशनमा आएको छ ।

---

[९८] पूर्ववत्, पृष्ठ ५१ ।

## ४.२१ सन्तको छाता/सन्तया कुसा

सन्तको छाता नेपाली र नेपालभाषामा (सन्तया कुसा) एकैसाथ एउटै प्रकाशन गृहबाट प्रकाशित दुर्गालालको बालखण्डकाव्य हो । हुन त दुर्गालालले अन्य पनि धेरै बालखण्डकाव्यहरू सफल रूपमा रचिसकेका छन् तर अन्य कृतिहरूमा कविले अरूको कथालाई आधार मानेर लेखेका छन् भने सन्तको छाता तीभन्दा यस अर्थमा फरक छ कि यसको कथा दुर्गालालकै मौलिक हो । उनका अन्य बालकाव्यमा जस्तै यसमा पनि उनको अभिव्यक्तिको कलाकारिता त देख्नपाइन्छ नै साथै यसमा बालबालिकालाई सुहाउँदो र प्रभावशाली कथा रचना गर्ने मिहीन सिर्जनात्मक सीप पनि देख्नपाइन्छ । यसको कथामा भएको सपना र विपनाको संयोग अन्त्यन्त रमाइलो छ । पाटीमा बस्ने अन्त्यन्त दरिद्र सन्तको थोत्रे छातासँगको मायाजस्तो झिनो कथावस्तुमा पनि उनले पाठकलाई स्वर्गलोकसम्म पनि घुमाइदिन्छ । यो उनको उच्चकल्पनाशीलताको नमुना हो ।

यस बालखण्डकाव्यमा बालसुलभ भाषा छ, लोकलयको माधुर्य छ र प्रस्तुतिमा निरन्तर कौतूहलता छ । जतिसुकै क्षुद्र भए पनि आफ्नो भन्ने कुराको माया गर्नुपर्छ भन्ने यसको मूल सन्देश हो । थोत्रो छातासँगको अटूट प्रेमको कारण सन्तले जुन मरणोपरान्त गरिमा प्राप्त गर्दछ त्यसबाट उनले नेपाली बालबालिकालाई आफ्नो देश, भाषा, संस्कृतिलाई माया गर्न सिकाएका छन् ।

## ४.२२ लण्डनस्वां

तीन हप्ता जतिको लण्डन यात्राको दौरान लेखिएका कविताहरूको सङ्ग्रह हो – लण्डनस्वां (लण्डनफूल) । यसै पुस्तकमा अङ्ग्रेजी अनुवाद पनि दिइएको छ London Rose को नामबाट । मात्रिक छन्दमा लेखिएका ४६ वटा कविता यसमा समेटिएका छन् । पहिलो कविताबाहेक अन्य सबै कविता लण्डनको शेफर्ड बुशमा १५ नोवेम्बर देखि ९ डिसेम्बर २००१ को बीचमा लेखिएका हुन् । पहिलो कविता चाहिं ९ नोवेम्बर २००१ मा काठमाडौं, ठमेलमा नै लेखिएको हो ।

नेपाल संवत् ११२२ को नयाँ वर्ष मनाउने अवसरमा लण्डनस्थित 'पासा पुचः'को निम्तो मान्न दुर्गालाल लण्डन पुगेका थिए । त्यसैले यसमा नयाँ वर्षको सन्दर्भ अनि जातीय चेतना र स्वदेश प्रेमका कविताहरू धेरै छन् । साथै उनले लण्डनमा देखेका र त्यसबाट उत्पन्न संवेदनाका कविताहरू पनि छन् । केही कविता उनले त्यहाँ भेटिएका व्यक्तिहरूको बारेमा लेखेका छन् । केही कविताहरू भने नितान्त व्यक्तिगत प्रसङ्गका छन् ।

## ४.२३ किरमिरे धर्साहरू

किरमिरे धर्साहरूलाई सोही पुस्तकमा 'कविता, गजल, गीत' भनेर लेखिएको छ । यसका रचनाहरू पनि मात्रिक छन्दमा रचिएका छन् । पद्य कविता भए तापनि यसका विषयवस्तु र विचार परम्परागत नभई २०४६ को प्रजातन्त्रपछि सत्तामा पुगेका नेताहरूको नमिल्दो चालाले विरक्त भएर लेखिएका कविताहरू धेरै छन् । त्यसैले यसका रचनाहरू राजनीतिक चेतनाले ओतप्रोत छन् । तर केही कविताहरू राजनीतिदेखि अलग प्रेम र जीवनसम्बन्धी पनि छन् । खास गरी यसका गजलहरू राजनीतिक विषयबाट अलग छन् ।

## ४.२४ चिरिबिरी

चिरिबिरी ३५ वटा नेपाली बालगीतको सङ्ग्रह हो । यसमा देखिएको प्रवृत्ति र विषयवस्तु कागजको डुङ्गा सँगै मिल्दाजुल्दा छन् । यसमा प्रकृतितर्फ 'फटफट पुतली', 'नानी र पुतली', 'ढकमक बाग', जस्ता गीत छन् भने 'सफाइ मजदुर'जस्तो सामाजिक विषयको गीत पनि छ । विद्यालयको प्रसङ्ग भएका गीतहरू पनि यसमा छन् । 'सुन्दरमान' हजामको वर्णन गरिएको रमाइलो गीत हो । 'मान्छेको गीत'ले जातीय भेदभाव हटाउन आग्रह गरेको छ । यसमा एउटा 'राष्ट्रिय गीत' पनि छ ।

तर यसमा 'हृदयचन्द्रसिंह प्रधान' शीर्षक रचना गीत नभएर कविता हो र यो बालकविताभन्दा पनि प्रौढ रचना प्रतीत हुन्छ ।

# परिच्छेद : ५

# निष्कर्ष

साहित्यकार दुर्गालाल श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्वको अध्ययन शीर्षकको यस शोधपत्रको पहिलो परिच्छेदमा शोध परिचय, दोस्रो, तेस्रो र चौथोमा क्रमशः दुर्गालाल श्रेष्ठको जीवनी, व्यक्तित्व र कृतित्वको अध्ययन प्रस्तुत गरिएको छ । यस परिच्छेदमा पूर्व परिच्छेदमा वर्णित कुराको निष्कर्ष प्रस्तुत गरिन्छ ।

## ५.१ पहिलो परिच्छेदको निष्कर्ष

यस शोधपत्रको परिचयस्वरूप पहिलो परिच्छेद प्रस्तुत गरिएको छ । यस परिच्छेदभित्र शोधशीर्षक, शोधकार्यको प्रयोजन, समस्याकथन, शोधकार्यको उद्देश्य, पूर्वकार्यको समीक्षा, शोधकार्यको औचित्य, सामग्री सङ्कलन र शोधविधि, शोधकार्यको सीमाङ्कन र शोधपत्रको रूपरेखा गरी नौवटा उपशीर्षकहरू समेटिएका छन् ।

## ५.२ दोस्रो परिच्छेदको निष्कर्ष

प्रस्तुत शोधपत्रको दोस्रो परिच्छेदमा साहित्यकार दुर्गालाल श्रेष्ठको जीवनीबारेको अध्ययन प्रस्तुत गरिएको छ, जसको निष्कर्ष बुँदागत रूपमा निम्नानुसारको हुन आउँछः

क) काठमाडौं शहरको बीचमा जन्मेको भए पनि साहित्यकार दुर्गालालको बालजीवन गरिबीमा बितेको थियो ।

ख) गरिबीमा हुर्केको भए पनि आमाको माया र परिवारिक स्नेहको कारण उनले गरिबीको लघुताभास भने महसूस गर्नुपरेको थिएन ।

ग) उनी बाल्यकालदेखि नै स्वाभिमानी थिए । उनमा अपमान नसहने बानी थियो । तर अपमानको बदला त्यसलाई रचनात्मक रूपमा लिने उनको स्वभाव थियो । चाहे त्यसको लागि जतिसुकै समय लागोस् । मेहनत र लगनशीलताले त्यसलाई प्रमाणित गरेर देखाउने उनको स्वभाव थियो ।

घ) त्यही स्वभावको कारण नै उनी लेखक बन्न पुगे । नाटकको तयारी गरिरहेको एउटा टोलीले नाटक हेर्न ढोकाबाट चियाउँदा उनलाई आँखामा घोचिदिएपछि उनले आफैं नाटक लेखी नाटककार बने । त्यही घोचाइ नै उनको लागि लेखनको प्रेरणा बिन्दु बन्नपुग्यो ।

ङ) किशोरावस्थादेखि नै उनी डबली-नाटकमा लागे र उनी त्यसैमा बढी रमाए । नाटककै लागि उनी लेखक बने, गीतकार बने । यसबाट उनले एकातिर लोकप्रियता र प्रसिद्धि हासिल गरे भने अर्कोतर्फ उनी पढाइमा कमजोर हुँदै गए ।

च) उनी बाल्यकालदेखि नै संवेदनशील थिए, भावुक थिए । सानो कुरालाई पनि भित्रसम्म महसूस गर्थे । प्रेममा डुबेर कल्पनाको आकाशमा उड्ने उनको बानी थियो ।

छ) दुर्गालालले एघारै वर्षको उमेरमा नाटक रचना गरेका थिए । त्यसपछि उनले अटूट रूपमा लेख्दै गए । तर लेखक बन्ने न उनको योजना नै थियो, न सिकेर नै उनले लेखेका थिए । लेख्ने गुण उनमा आर्जितभन्दा जन्मसिद्ध नै देखिन्छ । यसरी उनलाई जन्मजात कवि वा लेखक भन्न सकिन्छ ।

ज) दुर्गालालको बाल्यकाल गरिबी, खेल, रमाइलो र डबली नाटकमा बितेको थियो भने युवाकाल सङ्घर्षमा बितेको थियो । सङ्घर्ष कठोर थियो तर उनी क्षमतावान् र सङ्घर्षशील भएकाले उपलब्धिहरू सहज पनि भए ।

झ) बाल्यकालमा उनी लेखनकर्ममा लागे तापनि उनको लेखन पूर्णतः साहित्यिक थिएन र साहित्यिक जगत्मा प्रकाशनको लागि उपयुक्त थिएन । युवाकालको सुरुवातसँगै उनी साहित्यिक जमात र लेखनमा अघि बढे र कमै उमेरमा कविता, गीत, नाटक तीनै विधामा स्थापित भए ।

ञ) उनले आफ्नो किशोरावस्थामा प्रेमकविताबाट साहित्यिक लेखनी थालेको भए तापनि उनी छिट्टै नै प्रगतिशीलतातर्फ आकर्षित भए । यसलाई कोरा भावुकताबाट सचेततातर्फको अग्रसरता भन्न सकिन्छ । युवा हुँदै जाँदा उनी आफ्नो गरिबीप्रति सचेत भए । राजनीतिक नेता र कार्यकर्ताहरूको सङ्गतमा आए । राज्यबाट आफ्नो भाषा र जातिलाई गरिएको दमन र असमान व्यवहारको चाल पाए । त्यसैले उनका कृतिहरूमा राजनीतिक र जातीय चेतना देखिन्छ र जीवनमा सङ्घर्ष गर्नुपर्छ भन्ने सन्देश छ ।

ट) जन्मले उनी हिन्दू हुन् । तर साहित्यिक लेखनको सिलसिलामा बौद्धभिक्षुहरूसँग उनको सत्संग बढ्यो । उनी बौद्धदर्शनबाट प्रभावित भए र बौद्ध दर्शन बोकेका गीत र भजनहरू लेख्न थाले ।

ठ) प्रगतिशील विचार र बौद्धदर्शनबाट प्रभावित भए तापनि उनले प्रेमगीत पनि रचि नै रहे । उनको युवाबैंस गीतकारका रुपमा लोकप्रियताको शिखरमा पुगेको उमेर पनि हो । लोकगीत, आधुनिक गीत र पाश्चात्य शैलीका गीत तीनै थरीका साङ्गीतिक शैलीका लागि उनले रचेका गीतहरू त्यसताका अत्यन्त लोकप्रिय भएका थिए ।

ड) युवाकालमा विपरीत लिङ्गप्रतिको आकर्षण र प्रेम स्वाभाविक हो । दुर्गालालले प्रेम गरे र विवाह पनि गरे । साथै उनी यसमा जिम्मेवार पनि रहे । कवि भएर कवितामा रम्ने भए पनि परिवारमा गर्नुपर्ने व्यवहारमा उनी चुकेका देखिएका छैनन् । जागीरले नपुगेर ट्यूशन पढाएर पनि अत्यन्त जिम्मेवारीका साथ उनले परिवारका आवश्यकताहरू पूरा गरेको देखिन्छ ।

ढ) उनको सम्पूर्ण युवाकाल शिक्षण पेशामा बितेको थियो । शिक्षण पेशामा लागेको व्यक्तिले धेरै कमाउन त सक्दैन, तर पनि उनले दुःखजिलो गरी जग्गा किनेर घर बनाए । यसलाई पनि ठूलो सफलताको रूपमा लिन सकिन्छ ।

ण) निचोडमा भन्दा दुर्गालालको जीवन प्रारम्भमा कठोर सङ्घर्ष र उत्तरार्द्धमा मीठो उपलब्धिबीच बितेको थियो । तर कवितामै रम्ने व्यक्तित्व भएकोले कवितामै आफूलाई भुलाएर कठोर सङ्घर्ष पनि सहजै गुजारेका थिए । विवाह गर्नु, रोजगार पाउनु, घर बनाउनु उनको व्यक्तिगत उपलब्धि थियो भने साहित्यिक उपलब्धि सबैको साझा भएको छ । साहित्यिक कृतिहरूमात्र नभएर उनले जीवनमा गरेका सङ्घर्ष, विपरीत स्थितिमा पनि बाँचेको स्वभिमान, अटल निष्ठा, भाषा, जाति र राष्ट्रप्रतिको अनन्य प्रेम यी सबै आउँदो पिंढीका लागि प्रेरणाप्रद छन् । उनी वृद्धावस्थामा पनि अझै सङ्घर्षशील छन् । उनको अनवरत लेखनी चलिरहेकै छ । दुर्गालाल श्रेष्ठ सङ्घर्षको ज्यूँदो पर्याय र प्रतिमूर्ति भएर हामीबीच बाँचिरहेका छन् ।

## ५.३ तेस्रो परिच्छेदको निष्कर्ष

प्रस्तुत शोधपत्रको तेस्रो परिच्छेदमा साहित्यकार दुर्गालाल श्रेष्ठको व्यक्तित्वबारेको अध्ययन प्रस्तुत गरिएको छ, जसको निष्कर्ष बुँदागत रूपमा निम्नानुसारको हुन आउँछ :

क) दुर्गालाल श्रेष्ठ मूलतः साहित्यकार हुन् । तर उनको व्यक्तित्व राजनीति, भाषिक सङ्घर्ष, स्वदेश र स्वजातिप्रेम, शैक्षिक क्षेत्र आदिमा पनि फैलिएको छ ।

ख) साहित्यिक क्षेत्रमा उनले नाटक, गीत, कविताका साथसाथै चलचित्रको संवादसम्म लेखेको भए तापनि साहित्यिकहरूका माझ उनी कविका रूपमा बढी प्रतिष्ठित छन् । उनले फुटकर कवितादेखि खण्डकाव्यसम्म रचेका छन् । उनी छन्दमा लेख्ने कवि हुन् र छन्दमा उनको बलियो पकड छ र बहाव पनि तीब्र छ । उनको कविता स्वच्छन्दतावादी प्रवृत्तिबाट सुरु भएको थियो भने पछि उनले आफ्नै प्रतिभा र सिर्जनाद्वारा नेपालभाषा कवितालाई नवस्वच्छन्दतावादतर्फ र प्रगतिवादतर्फ पनि डोऱ्याए ।

ग) उनी साहित्यिकहरूबीच कविका रूपमा बढी चिनिए पनि आम जनताका माझ भने उनका गीतहरू बढी लोकप्रिय छन् । उनी आफैं पनि आफूलाई कविभन्दा गीतकार

भन्न रुचाउँछन् । उनका अधिकांश कविताहरू पनि गेयताले घनीभूत छन् । २००८ सालदेखि नै उनका गीतहरू जनताबीच लोकप्रिय हुन सुरु भएको थियो भने हालसम्म पनि उनका पुराना र नयाँ गीतहरू लोकप्रिय भइरहेका छन् । उनले लोकगीत, आधुनिक गीत, पपगीत, वामपन्थी विचारका जागरणगीत, भाषा र जातिप्रेमका गीत, बौद्धभजन, बालगीत आदि सबै किसिमका गीत रचना गरेका छन् । उनका गीतहरू स्व. नारायणगोपाल, तारादेवी, मीरा राणा, प्रेमध्वज, फत्तेमान आदि जस्ता पुराना प्रतिष्ठित गायकहरूदेखि संजीव प्रधान, न्ह्यू वज्राचार्य, दीपक वज्राचार्य, आनि छिरिङ डोल्मा जस्ता नयाँ पिढीका गायकगायिकाहरूसम्मले गाएका छन् ।

घ) दुर्गालाल श्रेष्ठ एक सफल बालसाहित्यकार पनि हुन् । उनले बालगीत, बालकविता र बालखण्डकाव्य रचेका छन् । उनका बालगीतका सङ्ग्रहहरू चिनियाम्ह किसिचा र ताइभाबाका गीतहरूले नेवार समाजमा प्राप्त लोकप्रियताले नै उनको बालगीतकारको क्षमतालाई प्रमाणित गर्छ । सन्तको छाता बालखण्डकाव्यमा निहित कल्पनाशीलता, भाषिक लालित्य, अभिव्यक्तिगत सरलता, तीव्र लयात्मकता र विचारको उच्चताले उनको बालसाहित्यकार व्यक्तित्वलाई सगरमाथाको उँचाइमा प्रतिस्ठापित गरेको छ ।

ङ) दुर्गालाल श्रेष्ठका नाटकले नेपालभाषाको नाटक क्षेत्रमा अलग्गै महत्व राख्दछन् । उनले पूर्णाङ्की नाटकबाट लेखनी थालेको भए तापनि साहित्यिक क्षेत्रमा उनका एकाङ्की र गीतिनाटकहरूले खास महत्व राख्दछन् । उनले १७-१८ वटा जति एकाङ्की र ३ वटा गीतिनाटक रचेका छन् । उनका एकाङ्कीमा यथार्थ जीवनका घटना र पात्रहरू रहने गर्दछन् । तर उनका एकाङ्कीमा यथार्थवाद मात्र नभई कल्पनाशीलता र केही प्रयोगात्मकतासमेत रहने गरेको पाइन्छ । गीतकार र नाटककार दुवै भएका कारण उनका गीतिनाटकहरूमा उनको कलाकारिताको उत्कृष्टता देखिन पाइन्छ ।

च) दुर्गालाल नाटककार मात्र नभई कलाकार र निर्देशक पनि हुन् । उनले एउटा प्रतियोगितामा नाटक निर्देशनमा सर्वोत्कृष्ट पुरस्कार प्राप्त गरेका छन् । नेपालको मञ्चको सीमितता बुझेकै कारण उनले मञ्चको सीमालाई बुझेर नाटक तयार पार्ने गरेको देखिन्छ । यस्तो गर्दा नाटकको स्तरमा केही सम्झौता भएको पनि पाइन्छ । उनले नेपालभाषाको लोकप्रिय चलचित्र 'राजमति' को संवादको सहलेखन ( रामशेखरसँग) पनि गरेका छन् ।

छ) दुर्गालाल साहित्यकार मात्र नभएर उच्चकोटिका अनुवादक पनि हुन् । हिन्दी भाषाका साहित्यकार बच्चनको मधुशालाको नेपालभाषामा अनुवादको लागि उनलाई 'श्रेष्ठ सिरपाः' पुरस्कारबाट सम्मान गरिएको थियो । उनले विशेषतः काव्य कृतिहरू अनुवाद गरेका छन् । उनले नेपालभाषामा अनुवाद गरेका कृतिहरूमा संस्कृत कवि हर्षदेव भूपतिको दशबलस्तोत्रम्, हिन्दी कवि बच्चनको मधुशाला, बङ्गाली कवि काजी नजरुल इस्लामको Selected Songs of Kazi Nazrul Islam, कविवर सिद्धिचरणको नेपालीमा रचित उर्वशी छन् । उनले नेपालभाषामा आफैंले रचेका कतिपय कृतिहरूको आफैंले नेपालीमा अनुवाद गरेको पनि पाइन्छ साथै उनले बालसाहित्यको अनुवाद पनि

गरेका छन्, जसमा दुई चिनियाँ बालगीतसङ्ग्रह, एक रूसी खण्डकाव्य र एक चिनियाँ बालकथासङ्ग्रह छन् ।

ज) दुर्गालाल मातृभाषाका अनन्य सेवी हुन् । उनका गीत, कविता र नाटकहरूमा उनको मातृभाषा-प्रेम स्पष्ट देख्न सकिन्छ । उनको मातृभाषाप्रेमका गीतले सुन्नेलाई प्रभावित नगरी छोड्दैन । उनी भाषाप्रेमका लेखक मात्र नभएर विभिन्न भाषिक संघसंस्थामा क्रियाशील छन् । साथै उनले भाषिक आन्दोलनहरूमा पनि नटुटाईकन भाग लिएका छन् र आफ्नो भाषण र कविताले सबै आन्दोलनकारीलाई उत्साहित बनाएका छन् ।

झ) प्रत्यक्ष राजनीतिमा संलग्न नभए तापनि दुर्गालाल राजनीतिक रूपमा सचेत लेखक हुन् । युवाकालदेखि वामपन्थी विचारधारा समातेका उनले जीवनपर्यन्त यसै विचारधारामा आफूलाई समर्पित गरिरहे । उनले आफ्नो साहित्यमार्फत वामपन्थी विचारको वकालत र प्रचारप्रसार गरेका छन् । नेपालभाषामा रचित उनका कतिपय प्रगतिशील गीतहरू अत्यधिक लोकप्रिय भएका पाइन्छन् । उनका केही गीतहरूको प्रकाशनमा तत्कालीन पञ्चायत प्रशासनले प्रतिबन्ध पनि लगाएको थियो ।

ञ) दुर्गालाल श्रेष्ठ अत्यन्त मिलनसार व्यक्ति हुन् । त्यसैले उनको मित्रमण्डली पनि ठूलो छ । साहित्यकार, गायक, सङ्गीतकार, कलाकार, भाषिक कार्यकर्ता, राजनीतिकर्मी आदि सबै उनको मित्रमण्डलीभित्र पर्छन् । मिलनसार भएकै कारण आफ्नै समकालीन मात्र नभई आफूभन्दा पाका र कनिष्ठ पनि उनका सान्निध्यका मित्र भएका छन् । साहित्यरचना, नाटकमञ्चन, गायन, सङ्गीत, राजनीति आदि सबैमा उनले सहयोग र सुझाव दिनसक्ने भएकाले धेरै मानिसहरू त्यसैका लागि उनलाई भेट्न आउँछन् । सबैलाई खुसीसाथ सहयोग र आवश्यक सरसल्लाह दिने भएकैले धेरै मानिसहरू उनलाई मन पराउँछन् ।

ट) पेशागत रूपमा दुर्गालालले शिक्षण पेशामा नै आफ्नो जीवन बिताएका हुन् । उनले युवाकालमा आफ्नै टोलमा विद्यालय खोली सञ्चालन पनि गरेका थिए । तर उनको जीवनको धेरै भाग कन्यामन्दिर माध्यमिक विद्यालयको शिक्षकको रूपमा बितेको छ । उनले शिक्षण जीवनमा २०३८ सालको शिक्षक-सङ्घर्षमा पनि भाग लिएका थिए, जसले गर्दा उनी भूमिगत भई बस्नु परेको थियो ।

ठ) पाठ्यपुस्तकलेखनका सन्दर्भमा पनि उनी उल्लेखनीय छन् । उनको पहिलो बालकविता कृति चिनियाम्ह किसिचा विद्यालयस्तरमा पाठ्यपुस्तकको रूपमा राखिएको थियो । उनले श्री ५ को सरकारद्वारा निर्धारित नेपालभाषाको पाठ्यपुस्तक पलेस्वां पाँच भाग र लुँहिति तीन भाग अन्य सहकर्मीहरूसित मिली तयार पारेका छन् ।

## ५.४ चौथो परिच्छेदको निष्कर्ष

साहित्यकार दुर्गालाल श्रेष्ठको कृतित्वबारे चौथो परिच्छेदमा गरिएको अध्ययनमा उनका पुस्तकाकारमा प्रकाशित मौलिक कृतिहरूलाई मात्र लिइएको छ र यस अध्ययनको निष्कर्ष निम्नलिखितअनुसारको हुन आउँछ :

आधा शताब्दीको लेखनयात्रा (ने.सं. १०७५ देखि) मा दुर्गालाल श्रेष्ठका नेपालभाषा र नेपालीमा गरी दुई दर्जन मौलिक पुस्तकाकार कृतिहरू प्रकाशित भएका छन् । उनको पहिलो प्रकाशित कृति झसुकाः कवितासङ्ग्रह हो, जुन ने.सं. १०७७ मा प्रकाशित भएको थियो । यसमा छायावादी प्रभावका प्रेमनिराशाका कविताहरू छन् । डा. कमलप्रकाश मल्लद्वारा सम्पादित ने.सं. १०८० मा प्रकाशित दोस्रो कृति लिसंको लागि उनी श्रेष्ठ सिरपाः पुरस्कारबाट सम्मानित भएका थिए । यसमा उनी निराशाबाट निस्किँदै जीवनवादी भएका छन् । यस कृतिका केही कविताहरू अत्यन्त उत्कृष्ट छन् जसमा अमर (classic) बन्नसक्ने गुण छ । उनका बालकवितासङ्ग्रह चिनियाम्ह किसिचा र ताइभाबाका गीतहरू निकै लोकप्रिय भएका छन् । उनको लुँबुँ-वहबुँ लोक र आधुनिक गीतका सङ्ग्रह हुन् । यसका गीतहरू पुस्तक प्रकाशन अगावै लोकप्रिय भएका थिए र हालसम्म पनि लोकप्रिय छँदैछन् । उनको सर्गःसिबे नं धरती नमिंग्वाः मातृभाषाप्रेम र प्रगतिशील गीतहरूको सङ्ग्रह हो । यसका केही गीतहरूमा तत्कालीन प्रशासनले प्रतिबन्ध पनि लगाएको थियो । यस्तै उनको निमन्त्रणा बौद्ध साहित्यमा आधारित गीतिनाटक हो । यो नाटकको मञ्चन हुँदा यो धेरै लोकप्रिय बनेको थियो । यसका धेरै संस्करणहरू पुस्तकका रूपमा पनि प्रकाशित भएका छन् । उनको पीजा रुबाइ शैलीमा लेखिएका कविताहरूको सङ्ग्रह हो । यसमा रक्सीलाई प्रतीक बनाइएका प्रेमकविताहरू छन् । उनका जि स्वभम्भू त्वाथः र याकःफल्चा छन्दमा लेखिएका तर समसामयिक चेतनाले ओतप्रोत भएका कविताहरूका सङ्ग्रह हुन् । यिनमा सङ्कलित कविताहरूमा समसामयिक राजनीतिक चेतना बढी तेजिलो बनेको छ । यसै गरी उनको सलछ्योंया बेला चिनियाँ कथामा आधारित बालखण्डकाव्य हो । यस्तै उनको इन्कलाबया पलाः सः २०४६ सालको जनआन्दोलनको पूर्वसन्ध्यादेखि आन्दोलनको तत्कालपश्चात्सम्ममा सोही विषयलाई लिएर लेखिएका कविताहरूको सङ्ग्रह हो । उनको ह्यू खः थ्व छगू तुङ्गोया चिनियाँ कथामा आधारित बालखण्डकाव्य हो । यसमा खराब तत्वलाई नष्ट नै गर्नुपर्ने सन्देश छ । उनको थुंदीगु घाः इतिहासया/चस्किँदो घाउ इतिहासको नेपालभाषा र नेपाली दुवैमा रचित मुक्तकसङ्ग्रह हो जुन राजदरबारहत्याकाण्डको तुरन्तै पछि लेखिएको र सोही विषयमा केन्द्रित छ । तीर्थराज तुलाधरको सम्पादनमा प्रकाशित ग्वींनिला उनका प्रतिनिधि कविताहरूको सङ्ग्रह हो । यसको अङग्रेजी अनुवाद twist and turns नामबाट प्रकाशित भएको छ । फूल तिम्रै बारीको उनको नेपालीमा रचिएका कविताहरूको सङ्ग्रह हो । चितवनको जङ्गलमा बसी रचिएकोले यसलाई जङ्गल कविता पनि भनिएको छ । यसमा प्रकृतिसम्बन्धी र वर्गविभेद-विरुद्धका कविताहरू छन् । उनको किरमिरे धर्साहरूमा कविता, गीत र गजल छन् । यसका कविताहरू धेरै राजनीतिक र सर्वहाराक्रान्तिको पक्षमा लेखिएका छन् । उनको इच्छाको सिमाना रूसी साहित्यकार पुश्किनद्वारा रचित माझि र सुनको माछोमा

आधरित रचना हो । यो नेपालीमा रचित बालखण्डकाव्य हो । उनको तपक ६ दिनमै तयार पारिएको कवितासङ्ग्रह हो । नेपालीमा रचित यसकृतिमा धेरैजसो प्रेम र विछोडका कविताहरू छन् । लण्डनस्वां करीब तीन हप्ताको लण्डनयात्राको दौरान कवि दुर्गालालले आफू लण्डनमा बस्ने नेवारहरूको निम्तोमा लण्डनमा आयोजित नेपालसम्वत्को नयाँ वर्षको समारोहमा सरीक हुन गएको वेला रचेका कविताहरूको सङ्ग्रह हो । सो कृतिमा रहेका कविताहरूको अङ्ग्रेजी अनुवाद पनि त्यसमा प्रस्तुत छ । उनको सन्तको छाता/सन्तया कुसा नेपालभाषा र नेपाली दुवै भाषामा रचिएको बालखण्डकाव्य हो । अन्य बालखण्डकाव्यमा दुर्गालालले कथातत्व बाहिरबाट लिएका छन् भने यो कृति सम्पूर्ण रूपमा मौलिक हो । यस कृतिमा उच्चस्तरको कल्पनाशीलता पाइन्छ । कागजको डुङ्गा र चिरिबिरी नेपालीमा लिखित उनका बालकविताहरूका सङ्ग्रह हुन् । यिनमा उनले बालसुलभ विषयहरूमा कविता रचेका छन् । प्याखंपिचा उनका मञ्चन भइसकेका एकाङ्कीहरूको सङ्ग्रह हो । यसमा उनका १२ वटा एकाङ्कीहरू सङ्कलित छन् ।

हालसम्म प्रकाशित कृतिहरू विधागत दृष्टिले विभाजन गर्दा उनका फुटकर प्रौढ कविता सङ्ग्रह १२, बालकविता सङ्ग्रह ४, बालखण्डकाव्य ४, गीतसङ्ग्रह २, गीतिनाटक १, एकाङ्कीसङ्ग्रह १ छन् । उनले ६ वटा कृतिहरू नेपालीमा लेखेका छन् । नेपालभाषा र नेपाली दुवैमा सँगसँगै भनेझैं लेखिएका उनका कृतिहरू दुईवटा छन् ।

# सन्दर्भ-सामग्री सूची

(क) पुस्तकहरू


१. वज्राचार्य, फणीन्द्ररत्न, म्हसीका धलः (Who's Who in Nepal; Bhasha), (काठमाडौं : नेपालभाषा एकेडेमी, २०५९), पृष्ठ ११८ ।

२. श्रेष्ठ, दुर्गालाल, झसुकाः, पाटन : श्रेष्ठ प्रकाशन, ने.सं. १०७७ ।

३. श्रेष्ठ, दुर्गालाल, लिसं, (सम्पा. कमलप्रकाश मल्ल) काठमाडौं : मिला प्रकाशन, ने.सं. १०८० ।

४. श्रेष्ठ, दुर्गालाल, चिनियाम्ह किसिचा, काठमाडौं : रमा प्रकाशन, ने.सं. १०८५ ।

५. श्रेष्ठ, दुर्गालाल, ताइभाबा, काठमाडौं : ज्योति पुस्तक भण्डार, ने.सं. १०८६ ।

६. श्रेष्ठ, दुर्गालाल (अनु.), चिनियाचम्पा (मूल लेखक अनुल्लिखित), काठमाडौं : सूर्योदय प्रकाशन, ने.सं. १०८७ ।

७. श्रेष्ठ, दुर्गालाल, पीजा, काठमाडौं : भीमप्रसाद, ने.सं. १०८७ ।

८. श्रेष्ठ, दुर्गालाल, सलछ्योंया बेला, काठमाडौं : पासामुना, ने.सं. १०८९ ।

९. श्रेष्ठ, दुर्गालाल (अनु.), कुलिकासा (मूल लेखक अनुल्लिखित), काठमाडौं : नेपालचीन मैत्री संघ, ई.सं. १९६७ ।

१०. श्रेष्ठ, दुर्गालाल, सर्गःसिबे नं धरती नमिंग्वाः, काठमाडौं : लूजः प्रकाशन, ने.सं. १०८८ ।

११. श्रेष्ठ, दुर्गालाल, लुबुँ-वहबुँ, दोस्रो संस्करण, काठमाडौं : प्रदीप्त पुस्तकालय, ने.सं. १०९० ।

१२. श्रेष्ठ, दुर्गालाल (अनु.), सिद्धिचरणया उर्वशी (मूल लेखक सिद्धिचरण श्रेष्ठ), काठमाडौं : फलेचा प्रकाशन, ने.सं. १०९९ ।

१३. श्रेष्ठ, दुर्गालाल (अनु.), भगवान् दशबलया तुतः (मूल लेखक हर्षदेव भूपति), काठमाडौं : चैत्यनारायण-रामदेवी मानन्धर, ने.सं. ११०३ ।

१४. श्रेष्ठ, दुर्गालाल, निमन्त्रणा, तेश्रो संस्करण, काठमाडौं : नेपालभाषा म्ये गुथि, ने.सं. ११०६ ।

१५. श्रेष्ठ, दुर्गालाल, जि स्वयम्भू त्वाथः, काठमाडौं : सुमन-सुचिता-सरोज, ने.सं. ११०६ ।

१६. श्रेष्ठ, दुर्गालाल, याकःफल्चा, काठमाडौं : सुमन-सुचिता-सरोज, ने.सं. ११०७।

१७. श्रेष्ठ, दुर्गालाल, (अनुवादक) सुलिं (मूल लेखक : बच्चन), काठमाडौं : सुमन-सुचिता-सरोज, ने.सं. ११०८।

१८. श्रेष्ठ, दुर्गालाल (अनुवादक), काजी नजरुल इस्लामया छपासः म्ये (मूल लेखक , काजी नजरुल इस्लाम), काठमाडौं : साहित्य गुथि, ने.सं. १११४।

१९. श्रेष्ठ, दुर्गालाल (अनु.), मचाबाखंचा (मूल लेखक अनुल्लिखित), नगदेश : सहयोगी बचत तथा सेवा केन्द्र, ने.सं १११५।

२०. श्रेष्ठ, दुर्गालाल, ह्यू खः थ्व छगू तुङ्कोया, काठमाडौं : अर्थ प्रकाशन, ने.सं. १११८।

२१. श्रेष्ठ, दुर्गालाल, इच्छाको सिमाना, काठमाडौं : नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०५५।

२२. श्रेष्ठ, दुर्गालाल, थुंदीगु घाः इतिहासया/चस्किँदो घाउ इतिहासको, काठमाडौं, अप्सरा प्रकाशन, २०५६।

२३. श्रेष्ठ, दुर्गालाल, तपक, काठमाडौं : अमृतमान शाक्य, २०५७।

२४. श्रेष्ठ, दुर्गालाल, फूल तिम्रै बारीको, बनेपा : जनमत प्रकाशन, २०५७।

२५. श्रेष्ठ, दुर्गालाल, ग्वींनिला, काठमाडौं : नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान, ने.सं. ११२०।

२६. श्रेष्ठ, दुर्गालाल, कागजको डुङ्गा, काठमाडौं : एकता बुक्स डिस्ट्रिब्युटर्स प्रा.लि., २०५८।

२७. श्रेष्ठ, दुर्गालाल, सन्तको छाता, काठमाडौं : एकता बुक्स डिस्ट्रिब्युटर्स प्रा.लि., २०५८।

२८. श्रेष्ठ, दुर्गालाल, सन्तया कुसा, काठमाडौं : एकता बुक्स डिस्ट्रिब्युटर्स प्रा.लि., २०५८।

२९. श्रेष्ठ, दुर्गालाल, लण्डनस्वां (अङ्ग्रेजी अनुवादसहित), लण्डन : पासापुचः गुथि, ई.सं. २००२।

३०. श्रेष्ठ, दुर्गालाल, किरमिरे धर्साहरू, काठमाडौं : विवेक सिर्जनशील प्रकाशन प्रा.लि.,२०६०।

३१. श्रेष्ठ, दुर्गालाल, चिरिबिरी, काठमाडौं : मूल्याङ्कन प्रकाशन गृह प्रा. लि., २०६१।

३२. ................, 'अभियान पुरस्कृत, २०५८' द्वारा सम्मानित कवि दुर्गालाल श्रेष्ठको परिचयपुस्तिका, काठमाडौं : अभियान साहित्यिक प्रतिष्ठान, २०५८।

३३. ................, पद्यपुचः, काठमाडौं : नेपालभाषा परिषद्, ने.सं. १११२, पृष्ठ घ।

(ख) शोधपत्र

१. प्रधान, माधवलाल, दुर्गालालया एकांकी : छगू अध्ययन, शोधपत्र, त्रि.वि., नेपालभाषा केन्द्रीय विभाग, (पाटन संयुक्त क्याम्पस), २०५७ ।

(ग) पत्रिकाहरू र रेडियो अन्तर्वार्ता

१. श्रीओम रोदन, "मातृभाषामा लेख्न बस्दा कलममा मेरो रगत बगेकोजस्तो अनुभव हुन्छ", मधुपर्क, वर्ष ३७, पूर्णाङ्क ४२६, (२०६१ मङ्सिर), पृष्ठ १००-१०३ ।

२. तुलसीहरि कोइराला, "फूलैफूलको संसार हेर्न चाहने वरिष्ठ कवि दुर्गालाल", मधुपर्क, वर्ष ३८, पूर्णाङ्क ४३३, (२०६२ असार), पृष्ठ २८-३० ।

३. दुर्गालाल श्रेष्ठ, "भ्वय्कासा", सन्ध्याटाइम्स, नववर्ष अतिरिक्ताङ्क, ने.सं. ११२२, पृष्ठ १ ।

४. सुरेश, जिगु नाटक जिम्ह पात्र, सन्ध्याटाइम्स, नववर्ष अतिरिक्ताङ्क, ने.सं. ११२४, पृष्ठ ३४, ३६, ३८ ।

५. दुर्गालाल श्रेष्ठ, "बिहांचुलि", बिहांचुलि (प्रगतिशील साहित्य सम्मेलनको बुलेटिन), सम्वत् .........., पृष्ठ १-१९ ।

६. रेडियो नेपाल एफ. एम. काठमाडौंको स्वनिगः सछि कार्यक्रममा २०५६ सालमा प्रसारित कृष्णा ताम्राकारद्वारा दुर्गालाल श्रेष्ठसँग लिइएको अन्तर्वार्ताको टेप अभिलेख । (यस टेपको एक प्रति शोधकर्तासँग सुरक्षित छ ।)

## दुर्गालाल श्रेष्ठसँग शोधकर्ताले लिएको अन्तर्वार्ता

कविवर, यहाँको जीवनीमा शोध-प्रबन्ध तयार गर्ने क्रममा धेरै लामालामा कुराकानीहरू भइसके । अब घटनाहरूभन्दा पर, जीवनको यस बिन्दुसम्म आइपुग्दाको समग्र अनुभवको निचोडमा दुर्गालाललाई बुझाउने केही कुरा राखिदिनुहुन अनुरोध गर्दै केही प्रश्न राख्दैछु, ताकि नयाँ पुस्ताले यहाँको जीवनबाट केही सिक्नसकोस् ।

प्रश्न १ जीवनको यस बिन्दुसम्म आइपुग्दा जीवन केजस्तो लाग्छ ?

उत्तर नाच्नु, गाउनु, हाँस्नु, रिसाउनु आदि जेजति पनि गरियो, जीवनकै नाममा गरियो तापनि त्यसमा जीवन छैनझैं लाग्छ । म जीवनको गोधूलीमा छु । बाहिरका आफ्नामात्र होइनन् आफैंभित्रका आफ्नाहरू पनि मबाट खुस्किँदै-खुस्किँदै छन् । भरखर-भरखरै मात्र आफैंभित्रबाट गुञ्जिरहेको जीवन-सङ्गीत हो न हो सुनिरहेझैं लाग्छ ।

प्र. २. अनि दुनियाँ ?

उ. अनि दुनियाँ आफ्नो निरीहता लुकाउन नानाभाँती चाल रच्दैछ, विकास र उन्नतिको नाउँमा । चाडपर्व, मेलाउत्सव आदि-इत्यादि रमझमहरू मृत्यु छल्ने एउटा बहाना मात्र हुन् । तर मृत्युलाई छल्नु भनेको आफैं आफूसँग छलिनु हो । यस्तो व्यवहार गरौं मृत्युसँग कि ऊसँगको भेट पनि महोत्सव होस् हाम्रो निमित्त । दुनियाँले यो बाटो अपनाइदियो भने जीवनको हरेक क्षण सुखान्त हुँदो हो ।

प्र. ३. अनि जगत्‌को सापेक्षतामा जीवनको समग्रमा दुर्गालाल ?

उ. एक कण धूलो हो दुर्गालाल, जो माटोमा विलय हुन आतुरिँदै भौंतारिँदैछ हावामा ।

प्र. ४. मृत्युलाई कुन दृष्टिले हेर्नुहुन्छ ?

उ. मृत्युको अँगालोभित्रको जीवन नै मलाई लाग्छ वास्तविक जीवन हो । लालसा पाल्नु सुखी र दुःखी हुनु हो । यो दुवैमा तनाव हुन्छ । तर जीवनको आनन्द भने स्थिरतामै स्थित रहन्छ । तसर्थ उपेक्षाभावमा समाधिस्थ हुनु जिउँदै मृत्युलाई प्राप्त गर्नु हो । यो स्थितिमा पुग्न पाए कत्ति हुन्थ्यो जस्तो लाग्छ ।

प्र. ५. साहित्य, भाषाप्रेम, देशभक्ति, समाजवाद, प्रेम र अध्यात्म-दर्शन यी सबैमा दुर्गालाल फैलेका छन् । तिनलाई क्रम मिलाउनु पर्‍यो भने कसरी मिलाउनुहुन्छ ?

उ. यौवनावस्थामा विपरीत लिङ्गसँगको आकर्षणबाट सुरु भएको प्रेम जाति, भाषा, देश हुँदै अध्यात्ममा पुगेर सुस्ताउँदो रहेछ । म अहिले यही पछिल्लो सिंढीमा छु । तर यही क्रममा जीवनले परिक्रमा गर्नुपर्छ भन्ने कुरा सत्य नहुन पनि सक्छ ।

प्र. ६. प्रेम, क्रान्ति, बौद्धदर्शन र नैराश्यमा आफूलाई कसरी सामञ्जस्य भएको पाउनुहुन्छ ? के यहाँ विरोधाभासमा त बाँचिरहनुभएको छैन ?

उ. जसले आफूलाई छुनसकेको हुन्छ अर्थात् आफैं आफूभित्र पस्नसकेको हुन्छ, उसको समक्ष जो कोही पनि आफू नै हुन्छ । तब त मेरो आत्मा बोल्छ – *फूलको आँखामा फूलै संसार* । जसलाई हर प्रहर बिहान छ उसको आँखा फूलभन्दा पवित्र हुन्छ । यस्तो व्यक्ति मैले बुद्धबाहेक अरू पाउनसकेको छैन । तब त उनीप्रति म नतमस्तक छु ।

प्र ७. दुर्गालाल गायककवि मात्र हो चिन्तक वा दर्शनकवि होइन भनिन्छ नि !

उ. बिनाचिन्तन जीवन्त हुनै सक्तैन स्रष्टाको कलम । तसर्थ म निसन्देह चिन्तक त हुँ नै । तर यो पनि सत्य हो चिन्तनको गहिराइ छुन म अद्यापि असमर्थ छु ।

प्र. ८ जीवनमा प्राप्ति वा अप्राप्तिको अनुभूति ?

उ. ढुङ्गो छ, म पनि छु । तर ढुङ्गो अनुभव गर्दैन, म गर्छु । मबाट गरिने यो अनुभव नै प्राप्ति हो जीवनको । सुखदुःख जे होस्, यो लिनसक्नु नै जीवनको जीवन्तता हो । यत्तिभन्दा अरू के चाहियो जीवनलाई ? के यो नै यथेष्ट छैन, जीवनको सार्थकता बुझ्न ?

प्र. ९. कसबाट सबभन्दा धेरै प्रभावित हुनुभएको छ र अन्य ककसबाट प्रभावित हुनुभएको छ ?

उ. विपन्नताभित्र हुर्कनुपर्ने वाध्यताले गर्दा शोषणको भेद खुल्ने द्वन्द्वात्मक भौतिकवादको अलिक पनि घाम जसै मभित्र पर्‍यो, म झल्यासिएँ । मलाई ब्युँझाउने ती पहिलो व्यक्ति क. तुलसीलाल अमात्य हुन् । तर त्यो गन्तव्यमा पुग्ने अभियानमा लाग्दै गर्दा कैयौं नेतृत्व पलायन भएको मात्र होइन कतिकति देशै पनि त्यसबाट विमुख हुँदै पूँजीवादी धारमा कोल्टो फेरेको जब देख्नु पर्‍यो

भित्रभित्रै मेरो मन मऱ्यो । तरै पनि यो बाटोमा अविचलित हुँदै अविछिन्न लाग्ने व्यक्तिहरू थोरै भए पनि अद्यापि छन् । तिनीहरू मेरा आदर्श हुन् ।

प्र. १०. केके कुरामा आफैंसँग ठुल्ठुला गुनासाहरू छन् ?

उ. "मन ताक्छ मुढो, बञ्चरो ताक्छ घुँडो" लाग्छ यो उखान मेरै निम्ति बनेको हो कि ? मेरो ठूलो कमजोरी हो कि मेरो कथनी र करणी बराबर छैन । यसको मुख्य कारण मेरो हीनताबोध हो । यस्तै यस्तै धेरै छन् मैले गुनासा गर्नुपर्ने, मेरा आफ्ना कुराहरू ।

प्र. ११. एउटा व्यक्तिगत प्रश्न । यहाँ प्रेमवियोगका उत्कृष्ट कवि हुनुहुन्छ । अहिले पनि प्रेमकविता रच्दै हुनुहुन्छ । कसैको झल्को अझै पनि हृदयमा आउँछ ?

उ. यहाँको यो प्रश्नले मलाई कति छिटो हुत्याइदिएको मेरो विगततिर । त्यस्तो पनि अव्यक्त प्रेम थियो कोहीसँग मेरो । मन लाग्छ, थियो पनि नभनौं, अझ छ-छ – त्यो प्रेम अझै छ । उनी छिन्, म छु । उनको र मेरो हेराइमा प्रेम छ, तर पनि त्यो अझै अव्यक्त छ ।

प्र. १२. यहाँको जीवन धेरै आन्दोलनहरूको समग्रता हो । नयाँ पुस्तासँग आशावादी हुनुहुन्छ वा निराश ?

उ. जानु भनेको पुग्नलाई जस्तो लाग्छ हिजोसम्म, तर होइन रहेछ । संसार घर होइन बाटो हो, फगत बाटो । तर पनि जानेहरूको पदचाप आउनेहरूको निमित्त आकर्षण हुनुपर्छ । यो मान्यतामा म दृढ छु । हो, नयाँ पुस्ताको चालढाल मैले चिताएअनुसारको छैन । तर उनीहरूमा देखिएको त्यो विकृति मेरै असन्तुलित पाइलाको परिणाम हो । तसर्थ, मेरो वर्तमानमा म सजग हुनसके भविष्य अवश्य पनि सुन्दर हुन्छ ।

प्र. १३. यहाँको जीवन अनुभवको निचोडबाट नयाँ पुस्तालाई के सल्लाह दिनुहुन्छ ?

उ. सल्लाह, मात्र सल्लाह, विनम्र सल्लाह, कत्ति पनि उपदेश जस्तो नलागोस् कसैलाई । दुःख भनेको छँदै छैन । जस्तै विपत्तिको वज्र बज्रिन आए पनि त्यसलाई यस्तरी अँगालिदेऊ, त्यो अनुपम सुख हो ।

प्र. १४. भावी नेपालले दुर्गालाललाई कसरी चिनोस् भन्ने चाहनुहुन्छ ?

उ. दुर्गालाल सामान्य जनता हो । यति हो उसको चाहना कि भोलिको नेपालले उसको यो सामान्यतालाई बुझिदेओस्, बस् ।

(२०६२ असोजमा अन्तर्वार्ता लिएको)